

# खान पुगोस् दिन पुगोस्

रवीन्द्र मिश्र

# समर्पण

*धरती जस्ती मेरी आमा रमला मिश्रमा !*

# प्राक्कथन

२५ वर्षअघि काठमान्डुको तत्कालीन रत्नराज्य कलेजमा स्नातक पढ्दै गर्दा म त्यति बेला भरखर शुरू भएको पत्रकारिता प्रशिक्षण केन्द्र नेपाल प्रेस इन्स्टिच्युटमा तालीम लिने गर्थे। भविष्यमा म पत्रकारिता नै अभ्यास गर्छु भन्ने मैले त्यति बेला निर्क्योल गरिसकेको थिएँ। साहित्यमा चाहिँ, कविता र निबन्ध मेरो विशेष रुचिका विधा थिए र बेलाबखत म कविता र निबन्धहरू लेख्ने गर्थे। त्यसैताका *गोरखापत्र* दैनिकमा *खोल* शीर्षकमा मेरो पहिलो निबन्ध छापिएको थियो। तर, त्यति बेला निबन्ध र पत्रपत्रिकामा लेखिने स्तम्भबीचको भिन्नता खुट्टयाउन मलाई कहिलेकाहीँ गाह्रो पर्थ्यो। त्यसैले मैले प्रेस इन्स्टिच्युटका मेरा गुरु तथा पत्रकारिताको सैद्धान्तिक तथा व्यावहारिक ज्ञान दुवैमा उत्कृष्ट दखल भएका पत्रकार ध्रुवहरि अधिकारीलाइ

स्तम्भ र निबन्धबीचको भिन्नताबारे व्याख्या गरिदिन अनुरोध गरेँ। उनले मलाई लगभग यसो भनेका थिए, “स्तम्भ तात्कालिक परिस्थितिबारे तत्कालकै घटना या अनुभूतिबाट उठान गरेर लेखिएको टिप्पणी हो। निबन्धको विषयवस्तु र त्यसको उठानमा तात्कालिकताको आवश्यकता नरहन सक्छ।” भविष्यमा पत्रकारिताको थप अध्ययन र अभ्यास गर्दै जाँदा अनि नेपाली र अङ्ग्रेजी निबन्धहरू पढ्दै जाँदा, निबन्ध नितान्त व्यक्तिगत भावना र दर्शनको अभिव्यक्ति हो भन्ने बुझाइ बढ्दै गयो। त्यसबाट स्तम्भ र निबन्धबीचको अन्तर थप स्पष्ट हुँदै जानु स्वाभाविक थियो।

आफूले स्तम्भ लेख्न थालेपछि स्तम्भको विषय र उठानबारे ध्रुवहरि अधिकारीले दिएको परिभाषालाई मैले सधैँ पालना गरेँ। तर, स्तम्भ लेख्दा मभित्रका निबन्धात्मक तन्तुहरू बारम्बार सलबलाइरहन्थे। त्यसैले म आफ्नो स्तम्भको शुरूआत अधिकांश अवस्थामा स्तम्भकै शैलीमा गर्थे भने लेख्दै जाँदा तिनमा मेरा

निबन्धात्मक अवयवहरूले प्रशस्त घूसपैठ गर्थे। त्यति हुँदाहुँदै पनि मैले आफ्ना स्तम्भहरूको पहिलो सङ्ग्रह *भूमध्यरेखा : अर्थहीनताभित्र अर्थ खोज्दा*लाई 'स्तम्भ सङ्ग्रह' नै भन्न रुचाएँ। किनभने, ती अधिकांशत: तात्कालिक राजनीतिक घटनाक्रममा गरिएका तात्कालिक टिप्पणी थिए र तिनमा 'निबन्ध' का भन्दा 'स्तम्भ' का विशेषताहरूकै बाहुल्य थियो भन्ने मेरो धारणा रह्‍यो।

यो पुस्तकको कुरा भने अलि बेग्लै छ। यसलाई मैले 'स्तम्भ-निबन्ध सङ्ग्रह' भनेको छु। स्तम्भ यस अर्थमा कि, यसमा सङ्कलित सबै भनेजसो आलेखहरू *कान्तिपुर* र *नागरिक* दैनिकमा 'नितान्त व्यक्तिगत' स्तम्भ अन्तर्गत छापिएका हुन्, जसमा स्तम्भ-उठानमा हुनुपर्ने तात्कालिकताको पक्षलाई ध्यान दिइएको छ। तर, यी निबन्ध पनि हुन्, किनभने केहीलाई छोडेर बाँकी सबैमा स्तम्भमा भन्दा निबन्धमा हुनुपर्ने विशेषताहरू बढी छन्। 'भूमध्यरेखा' को शृङ्खलामा निबन्धको

निजात्मकता घुस्दा पनि वस्तुपरकतालाई कायम राख्ने प्रयासमा म सचेत थिएँ। यो सङ्ग्रहमा भने केही राजनीतिक आलेखहरूलाई छोडेर बाँकीमा मैले वस्तुपरकतालाई ध्यान दिएको छैन। किनभने, यसमा सङ्गृहीत अधिकांश आलेख 'स्तम्भ' मात्र होइनन्, 'स्तम्भ-निबन्ध' हुन्। तिनमा म भावुक भएको छु, बहकिएको छु र निबन्धको निजात्मकताभित्र बेलाबेलामा चुर्लुम्मै डुबेको छु।

मेरो पत्रकारिताको अधिकांश जीवन मूलतः राजनीतिक पत्रकारितामै बित्यो। पाकिस्तानमा बस्दा होस् या बेलायतमा बस्दा, या नेपालमा बस्दा होस्, मैले मूल रूपमा राजनीतिक टीकाटिप्पणी नै गरेँ र राजनीतिक अन्तर्वार्ताहरू नै लिएँ। तर, पछिल्ला वर्षहरूमा मैले विश्वभरि व्याप्त राजनीतिमुखी पत्रकारिताको सार्थकतालाई लिएर बढ्दो रूपमा आफैँलाई प्रश्न गर्न थालिरहेको छु। पत्रकारिताको मूल धर्म सार्वजनिक हित (पब्लिक सर्भिस) को प्रवर्धनमा विश्वभरि नै पत्रकारिता चुकिरहेको

छ भन्ने निर्क्योलमा म पुगेको छु। त्यसबारे यो सङ्ग्रहमा परेका केही स्तम्भ-निबन्धमा चर्चा गरिएकाले म अहिले बढी विस्तारमा जान चाहन्नँ। तर, पत्रकारितामार्फत वास्तवमै सार्वजनिक हितको परिकल्पनालाई साकार पार्ने हो भने पत्रकारितामा राजनीति, अर्थनीति, खेलकुद, वातावरण, हिंसा, प्राकृतिक विपद् जस्ता अन्य पक्षलाई जस्तै परोपकारलाई पनि प्रमुखता नदिई हुँदैहुँदैन भन्ने मान्यतामा म विश्वस्त भएको छु। त्यही मान्यताका कारण २०६६ सालमा राजनीतिप्रधान स्तम्भ 'हामी नेपाली' लेख्न छोडेर मैले आफूभित्र विकास भैरहेको 'परोपकारी पत्रकारिता' ( फिलन्थ्रोपिक जर्नलिजम) को सोचलाई अभ्यासमा उतार्न *कान्तिपुर* दैनिकमा 'नितान्त व्यक्तिगत' स्तम्भ शुरू गरेको थिएँ।

व्यक्तिगत अनुभव, अनुभूति र भएको अलिकति परिचयलाई सार्वजनिक हितका विषयसँग जोड्ने प्रयास गर्नु र समाजमा सार्वजनिक हितका लागि भएका र

हुन सक्ने ठोस कामहरूबारे लेख्नु 'नितान्त व्यक्तिगत' स्तम्भको मूल उद्देश्य थियो। कैयौं राजनीतिज्ञले व्यक्तिगत र पार्टीगत स्वार्थका लागि पत्रिकाका विचारपृष्ठहरू सधैँ प्रयोग गरिरहेका हुन्छन् भने, प्रत्यक्ष रूपमा पत्रकारिताको मूल धर्म – सार्वजनिक हित – सँग सम्बन्धित हुने विषयमा चाहिँ ती पृष्ठहरू प्रयोग गर्न किन नहुने भन्ने मान्यताबाट पनि सो स्तम्भ प्रेरित थियो। बेलायतको लम्बे बसाइपछि पूर्णत: निजी अनुभवसँग जोडिएको *नेपाल फर्किने बेलामा* शीर्षक यो सङ्ग्रहको पहिलो आलेखप्रति व्यापक रूपमा प्राप्त सकारात्मक प्रतिक्रियाबाट हौसिएका कारण मैले 'नितान्त व्यक्तिगत' स्तम्भको पहिलो लेख आफैँद्वारा स्थापित, नेपालसहित विभिन्न देशमा युवाहरूद्वारा स्वयंसेवी रूपमा सञ्चालित तथा नेपालका गाउँहरूमा प्रशस्त कल्याणकारी कामहरू गरिसकेको संस्था 'हेल्प नेपाल नेटवर्क : नेपालका लागि महिनाको सय रुपैयाँ कोष' सँगै सम्बन्धित विषयलाई उठाउने निधो गरेँ र

सर्वसाधारण नेपालीहरूको सहयोगबाट छ महिनाभित्रमा एक करोड रुपैयाँ सङ्कलन गर्ने लक्ष्य लिएर *कृपया पाँच रुपैयाँ दिनोस् न !* शीर्षक स्तम्भ-निबन्ध लेखेँ। त्यो एउटा प्रयोग थियो, जसप्रति जनस्तरबाट अत्यन्त सकारात्मक प्रतिक्रिया मात्र प्राप्त भएन, साँच्चिकै आर्थिक सहयोग पनि प्राप्त हुन थाल्यो। तर, त्यो प्रयासलाई निरन्तरता दिने सम्भावना छिटै समाप्त भयो। *कान्तिपुर*को सम्पादकीय र व्यवस्थापकीय नेतृत्वलाई कतिपय मानिसले 'व्यक्तिगत संस्थाको कामको प्रवर्धन गर्न पत्रिकालाई मञ्च बनाउन दिनु हुन्न' भनेर दबाव दिन थाले, जुन अपेक्षित नै थियो। तर, सो लेख प्रकाशन भएको छ महिनापछि नै युवा उद्यमी सिद्धार्थ राणाले एकै पटक एक करोड रुपैयाँ चन्दा दिएपछि अर्को कुनै उपायबाट सो अभियानलाई निरन्तरता दिन आवश्यक देखिएन।

दुई वर्षभन्दा बढी समयसम्म *कान्तिपुर* र पछि *नागरिक* दैनिकमा मैले 'नितान्त व्यक्तिगत' स्तम्भ

लेख्दा आफ्नो संवेदनालाई च्वास्स छोएका कैयौँ अनुभव, अनुभूति र घटनालाई मैले आफ्नो स्तम्भ-निबन्धको विषय बनाएँ। मान्छेको संवेदना अनौठो हुँदो रहेछ। कैयौँ अवस्थामा ठूलठूला या अत्यन्त संवेदनशील विषयहरूले पनि लेख्नका लागि त्यो अज्ञात प्रेरणाको बीज रोप्न सकेनन् भने, कहिलेकाहीँ अत्यन्त सानो र धेरैलाई संवेदनशील नलाग्न सक्ने विषयले पनि तत्काल लेखिहाल्ने प्रेरणा जगायो। तर, लेख्नका लागि प्रेरणा जगाएका कैयौँ काम र विषयबारे मैले अझै लेख्न भ्याइसकेको छैन। यो सङ्ग्रहमा, खास गरी 'परोपकार' खण्डमा, लेखिएका आलेखहरूले मलाई धेरै ठूलो सन्तुष्टि दिएका छन् र भविष्यमा पनि समय पाउँदा यस प्रकारको लेखनलाई निरन्तरता दिने मेरो चाहना छ। त्यति हुँदाहुँदै पनि, पत्रकार भएको नाताले बेलाबखत राजनीतिक टिप्पणी लेख्ने अन्तर्मनको दबावलाई मैले रोक्न सकिनँ। त्यसमा पनि, परोपकार र राजनीतिको सार एउटै हो– नैतिक, न्यायपूर्ण र

कल्याणकारी समाजको सृजना। समस्या के मात्रै हो भने, शान्त र सुसंस्कृत समाजका लागि अत्यन्तै महत्त्वपूर्ण पाटो हुँदाहुँदै पनि परोपकार पत्रकारिता अभ्यासको मूल धारमा नपरेकाले त्यसलाई बढी स्थान दिने र परोपकारी पत्रकारितालाई प्रवर्धन गर्ने मेरो लक्ष्य थियो, राजनीतिलाई उपेक्षा गर्ने होइन।

यो पुस्तकमा सङ्गृहीत कैयौँ आलेख पुस्तकमा विभक्त दुईमध्ये जुनसुकै खण्डमा पर्न सक्थे या तिनलाई अर्को कुनै खण्ड थपेर त्यसमा राख्न सकिन्थ्यो। तर, परोपकार र राजनीति मेरो चासो र लगावका दुई प्रमुख क्षेत्र हुनाले र तिनलाई फराकिलो ढङ्गमा व्याख्या गर्दा तीभित्र धेरै विषय अटाउन सक्ने हुनाले मैले पुस्तकलाई सिर्फ दुई खण्डमा विभाजन गर्ने निर्णय गरेको हुँ। त्यसै गरी, सबै भनेजसो आलेखहरू 'नितान्त व्यक्तिगत' स्तम्भभित्र छापिएका भए पनि मैले यो पुस्तकको नाम तीमध्येको एउटा आलेखको शीर्षक *खान पुगोस्, दिन पुगोस्*लाई चयन गरको छु,

जसले परोपकार र राजनीति दुवैको मूल भावलाई समेट्छ भन्ने मलाई लागेको छ ।

नि:सन्देह, परोपकार र राजनीति एकअर्काका पूरक हुन् र त्यसमा पनि मेरो राजनीतिक आस्था सधैँ नर्वे, स्विडेन, डेनमार्क जस्ता स्कान्डेनिभियाली परोपकारी राज्य व्यवस्थामा रह्यो । कुनै पनि देश सुखी र खुशी हुन संयुक्त राज्य अमेरिका या अन्य कतिपय देशझैँ अत्यन्त शक्तिशाली र समृद्ध हुनुपर्दैन । राज्य व्यवस्था परोपकारी छ भने, ती अति शक्तिशाली र समृद्ध नभैकन पनि सुखी र खुशी हुन सक्छन् । तर, व्यक्तिगत र सामाजिक तहमा परोपकारी भावनाको विकास नभएसम्म तिनै व्यक्ति र समाजका सदस्यहरूबाट निर्माण हुने राजनीतिक नेतृत्वले परोपकारी राज्य व्यवस्थाको परिकल्पना गर्न सक्दैन । परिणामस्वरूप समाजमा विभेद र समस्याहरू बढ्दै जान्छन् । विडम्बना नै भन्नुपर्छ, अधिकांश स्थितिमा यो तथ्यलाई मान्छे सम्पन्न हुँदै जाँदा बिर्सदै जान्छ र ऊ कालान्तरमा

शक्ति र समृद्धिको पछि मात्रै दौडिन थाल्छ। त्यो मानसिकतालाई परिवर्तन गर्न परोपकारी पत्रकारिताले प्रभावकारी भूमिका निर्वाह गर्न सक्छ भन्ने मेरो विश्वास हो।

'नितान्त व्यक्तिगत' शृङ्खलामा छापिएका केही स्तम्भ-निबन्धलाई विविध कारणले मैले यो सङ्ग्रहबाट हटाइदिएको छु। त्यस्तै, यो सङ्ग्रहमा परेका स्तम्भ-निबन्धहरू पत्रिकामा छापिएको भन्दा पनि मैले जुन रूपमा पत्रिकामा छाप्न पठाएँ त्यही रूपमा, र कुनैकुनैका हकमा सामान्य फेरबदल गरेर, प्रस्तुत गरिएका छन्। एकाध तर्क र तथ्यहरू कहींकहीं दोहोरिएका छन्। तर, मेरो भित्रैदेखिको आस्था र विश्वासमाथि पुन: जोड दिन या सम्बन्धित आलेखको सिलसिलालाई विखण्डन हुन नदिन तिनलाई मैले जानीजानी दोहोर्‍याएर प्रयोग गरेको हुँ। यो सङ्ग्रहमा निहित दोषको भागिदार सिर्फ म छु भने तिनमा केही गुण छन् भने तिनको श्रेय मलाई विभिन्न सुझाव

दिने, परोपकारी पत्रकारितामा प्रेरित गर्ने र परोपकारी समाज र परोपकारी राज्य व्यवस्थामा विश्वास गर्ने अनगिन्ती परिचित तथा अपरिचित स्वदेशी तथा विदेशी मित्र र शुभेच्छुकहरूलाई दिनुपर्ने हुन्छ ।

सबैलाई खान पुगोस्, दिन पुगोस् !

**– रवीन्द्र मिश्र**

facebook.com/RabindraMishra.Nepal

twitter.com/MishraRabindra

# धन्यवाद

सबभन्दा पहिले, म आफ्ना मित्र *कान्तिपुर* दैनिकका सम्पादक सुधीर शर्मालाई धन्यवाद दिन चाहन्छु। उनले *कृपया पाँच रुपैयाँ दिनोस् न!* जस्तो प्रयोगात्मक रूपमा लेखिएको र स्पष्टतः आर्थिक सहयोगको अपिल गरिएको आलेख आँट गरेर नछापिदिएका भए र त्यसैबाट उनको पत्रिकामा 'नितान्त व्यक्तिगत' स्तम्भ शुरू नगरिदिएका भए यो पुस्तकका बाँकी आलेखहरू जन्मन्थे या जन्मन्थेनन्, भन्न गाह्रो छ। त्यसै गरी, म आफ्ना अर्का मित्र *नागरिक* दैनिकका सम्पादक नारायण वाग्लेलाई पनि धन्यवाद दिन चाहन्छु, जसले पूर्वराजा ज्ञानेन्द्रप्रतिको आम तिरस्कार ठूलो हदसम्म बाँकी रहेको बेला उनलाई 'सरकार, हजुर, गरिबक्स्योस्' भनी सम्बोधन गरिएको खुला पत्र कुनै सम्पादनबिना छापिदिए र पछि आफ्नो पत्रिकामा 'नितान्त व्यक्तिगत'

स्तम्भलाई सहर्ष स्थान पनि दिए।

स्तम्भ-निबन्धहरू लेख्ने क्रममा मैले बेलाबखत निकै अप्ठेरा विषयहरूलाई उठाएर शर्मा र वाग्ले दुवैलाई अलि दुःख दिएको महशूस गरेको छु। त्यसलाई सहिदिएकामा पनि म उनीहरूप्रति आभारी छु।

यो पुस्तक छाप्न रुचि देखाउने नेपालयका किरणकृष्ण श्रेष्ठ, अत्यन्त मननयोग्य सल्लाह दिने साहित्यकार मञ्जुल, पुस्तकलाई सुन्दर कभर डिजाइन र लेआउटले हेर्दैखेरि चिटिक्क पारिदिने कलाकार नवीन जोशी अनि भाषागत दृष्टिकोणबाट मेरो खत्तम नेपालीलाई उत्तम बनाइदिने पारसप्रकाश नेपाललाई विशेष धन्यवाद दिन चाहन्छु।

यो पुस्तकको शीर्षक र सोही शीर्षकमा लेखिएको स्तम्भ-निबन्धलाई प्रेरित गर्ने मेरा निकटका मित्र श्रीराम रायमाझीकी श्रद्धेय आमा पवित्रदेवीप्रति म गहिरो सम्मान व्यक्त गर्न चाहन्छु।

परोपकारी काममा मलाई सधैँ सहयोग र प्रेरणा प्रदान गर्ने हेल्प नेपाल नेटवर्कका सम्पूर्ण सहधर्मी तथा देश र विदेशका अन्य मित्रहरूप्रति म कृतज्ञ छु। सामाजिक सञ्जालहरू फेसबुक र ट्वीटरमार्फत मलाई सधैँ सकारात्मक ऊर्जा प्रदान गरिरहने शुभचिन्तकहरूप्रति आभार प्रकट गर्न चाहन्छु। बीबीसी नेपाली सेवाका सबै सहकर्मीहरूको सहयोग र सद्भाव मेरा लागि सधैँ जीवनको स्मरणयोग्य पक्ष बनिरहनेछ।

कलात्मकता, सृजनात्मकता र निबन्ध लेखनमा आनुवंशिक छाप र वातावरणीय प्रेरणा प्रदान गर्ने मेरा बुवा कलाकार तथा निबन्धकार मनुजबाबु मिश्र, धैर्य, स्नेह र त्यागको अतुलनीय उदाहरण बनेकी मेरी आमा रमला मिश्र, मेरो शिक्षा, सकारात्मक सोच र सहनशीलताको विकासमा सानैदेखि सदा स्नेहपूर्वक सहयोगी र प्रेरणा बन्दै आएका मेरा 'अङ्कल' मोहन मिश्र अनि मलाई सदैव माया र स्नेह देखाउने मेरी 'आन्टी' मोहिनी मिश्रको मेरो जीवनमा धेरै ठूलो

महत्त्व र योगदान छ, जसलाई म कहिले पनि बिर्सनेछैन ।

अन्त्यमा, प्रेम, सकारात्मकता, इमानदारी र परोपकारी कामका लागि ठूलो प्रेरणाको स्रोत र सहयात्री बनेकी मेरी श्रीमती सारिका अनि उमेर कमै भए पनि त्यो सोचमा गर्व गर्ने र अरूलाई सधैँ सकेको सहयोग गर्न खोज्ने मेरो छोरा युराल र मेरी छोरी रेयाप्रति मैले जति आभार प्रकट गरे पनि कमै हुन जान्छ ।

## स्तम्भ–निबन्धक्रम

### *खण्ड एक : परोपकार*

क. कर्ण शाक्यको जवाफ

ख. गगन थापाको जवाफ

१४. प्रतिरक्षात्मक हुन चाहन्नँ

१५. सौभाग्यलाई सम्झँदा

१६. भगवान् पनि हाँस्छन् होला

१७. यस्तो डाक्टर पो डाक्टर

१८. अर्बपतिले आँसु झार्दा

१९. आफ्नै शैलीको नयाँ वर्ष

२०. प्रचार नखोजिएको एक करोडको दान

२१. भँगेरे मुटु

२२. दीनबन्धुजीले यसो पनि गरे कसो होला ?

२३. यो देशमा यस्ता मान्छे पनि छन्

२४. आपत्तिजनक पत्रकारिता

२५. बाह्रफुटे बुद्धि

२६. छुच्चो पेशा

२७. सबैको धरातल भासिएपछि

२८. 'जी' भन्दा झरेको आँसु

२९. चम्पादेवीमा केबलकार

३०. दिलशोभाको दिल

३१. शिवानी र इला प्रेरणा बनून्

३२. 'खान पुगोस्, दिन पुगोस्'

३३. हिमानीलाई शुभकामना !

३४. साम्यवादी र पूँजीपतिका कुरा

३५. विकास पर्यटन यात्रा

३६. को हुन् 'सिलेब्रटी' ?

३७. जे सोच्छौँ, ठूलो सोचौँ

३८. हामीले यस्तो कहिले गर्ने ?

३९. कहालीलाग्दो तथ्य र हाम्रो आडम्बर

४०. मासुभात र भोका पेट

४१. पूर्णमानका आँखा

४२. छोराछोरी नेपाल फर्काऔँ

४३. कल्याणकारी समाज, कल्याणकारी राज्य

## *खण्ड दुई : राजनीति*

१. गगन थापा सभापति किन नहुने ?

२. कोइरालालाई यसरी पनि हेर्ने कि ?

३. गरेर मर्ने कि लडेर मर्ने ?

४. समाजवाद र काङ्ग्रेस नेतृत्व

५. अब पैतृक कर र हदबन्दी

६. सिद्धान्तवादी अन्धाहरू

७. राजनीतिमा युवा : दुई विकल्प

८. पैसा, पढाइ छैन ? राजनीति नगर्नोस्

९. देशको माया भए भन्दिनोस्

१०. इतिहासको घाउ कोट्टयाउँदा

# नेपाल फर्किने बेलामा

अन्ततः पेशागत र व्यक्तिगत दुवै रूपमा नेपाल फर्किने मेरो लामो धोको पूरा हुन लागेको छ। पाकिस्तानमा झन्डै तीन र बेलायतमा १४ वर्ष बिताएपछि म स्थायी रूपमा अर्को महिना नेपाल फर्किँदै छु। बेलायतमा बिताएका १४ वर्ष मेरा लागि मेरो जीवनका अत्यन्त सुखद, उपलब्धिपूर्ण र सन्तोषजनक समयका रूपमा सदा रहिरहनेछन्। पाकिस्तानको तीन वर्षको बसाइले मेरो शैक्षिक जीवनमा एउटा इँटा थपेको थियो र मेरो पेशागत जीवनको जग निर्माण गरेको थियो। बेलायतको बसाइले मेरो शैक्षिक जीवनमा अर्को इँटा थप्यो र मेरो पेशागत जीवनलाई एउटा रूप र परिचय दियो। ती सबैले मलाई व्यक्तिगत रूपमा सुखद अनुभूति दिने गरेका छन्। तर मैले आफ्नो शिक्षा र पेशाको धरातलमा उभिएर

बेलायत बसाइका क्रममा देखेका र भोगेका क्षणहरूले मलाई जे सिकाए र मेरो पेशाभन्दा बाहिर मभित्र रहेको गहिरो विश्वासलाई अघि बढाउन जसरी प्रेरित गराए, त्यो मेरा लागि सबैभन्दा सन्तोषको पक्ष रहेको छ। यी अनुभूतिलाई दुइटा कारणले मैले यहाँ बाँड्ने धृष्टता गरिरहेको छु। आशा छ, प्रबुद्ध पाठकहरूले यसलाई अन्यथा लिनुहुनेछैन।

पहिलो कारण हो, जेले मलाई आफ्नो आजसम्मको यात्रामा सबभन्दा ठूलो सन्तोष प्रदान गरेको छ, त्यसका लागि म आफूलाई नभएर विदेशमा बस्ने र खास गरी बेलायतवासी अनगिन्ती नेपालीलाई धन्यवाददिन चाहन्छु। तिनको सद्भाव, विश्वास अनि नैतिक र आर्थिक सहयोग नभएको भए मैले तय गरेको त्यो सानै किन नहोस् तर सबभन्दा बढी सन्तोषजनक पाइला चाल्न सक्ने सम्भावनै रहने थिएन। आफ्नो १४ वर्षको प्रवासमा मैले नेपाल र नेपाली भनेपछि मरिमेट्ने कैयौँ नेपालीलाई भेट्ने, उनीहरूबारे सुन्ने/पढ्ने

र कतिपयसँग विचार आदानप्रदान गर्ने मौका पाएँ। उनीहरूबाट मैले धेरै सिकेको छु। यो आलेखमा ती सबैको नाम लिन सम्भव छैन; तर नेपाल र नेपाली समुदायलाई कुनै न कुनै रूपमा सहयोग गर्ने ती सबै नेपालीप्रति म पूर्णतः नतमस्तक छु। ती सबै मेरो बाँकी जीवनमा प्रेरणाका स्रोत रहिरहनेछन्। तिनको नैतिक या आर्थिक सहयोग नभएको भए म र समान विचारधाराका मेरा साथीहरूद्वारा स्थापित र सञ्चालित हेल्प नेपाल नेटवर्क (www.helpnepal.net) ले नौ वर्षको अवधिमा मूल रूपमा नेपालीहरूबाटै उठाइएको रकमबाट नेपालका गाउँहरूमा कैयौँ स्कुल बनाउने, स्वास्थ्यचौकी चलाउने, पुस्तकालय निर्माण गर्ने, कैयौँ स्कुल र स्वास्थ्यचौकीलाई शैक्षिक र स्वास्थ्य उपकरण प्रदान गर्ने र आपत्कालीन राहत उपलब्ध गराउने काम गर्न सक्ने थिएन।

'नेपालका लागि नेपालीले गरौँ' भन्ने नाराका साथ नौ वर्षअगाडि शुरू गरिएको 'नेपालका लागि महिनामा

एक पाउन्ड कोष' अभियान अहिले बेलायतसहित अरू कैयौँ देशमा फैलिएको छ । हामी सबै आपसमा मिलेर काम गर्ने गर्छौं। कतिपय ठाउँमा त समान नाराका अन्य संस्था पनि स्थापना भएका छन्। भविष्यमा हेल्प नेपाल नेटवर्क सञ्चालनका लागि सहयोग पुगोस् भनी स्थापना गरिएको प्रशासनिक कोषमा मात्रै विभिन्न देशमा रहेका २५ नेपालीले कम्तीमा अढाई लाखदेखि बढीमा पाँच लाख रुपैयाँसम्म चन्दा दिएका छन्। सो कोषलाई अरु ठूलो बनाउने प्रयास जारी छ । हेल्प नेपालमा काम गर्ने क्रममा मैले यति धेरै प्रेरणादायी नेपाली भेटेको छु, जसप्रति मेरो श्रद्धा सदा अटल रहिरहनेछ ।

१४ वर्षको प्रवास बसाइका क्रममा वास्तविक रूपमा काम गर्नेसँगसँगै कुराले संसार हाँक्ने तर नेपाल र नेपालीका लागि केही पनि नगर्ने या लाज छोप्नका लागि अत्यन्त नगण्य एक-दुई काम गरेर फुर्ती लगाउने, घरको गरीबी छल्न विदेशमा दुःखजिलो

गर्ने नेपालीलाई गन्दै नगन्ने, टन्न पैसा कमाएर पनि आफू पढेको गाउँको स्कुललाई जस्ताको तस्तै छोड्ने तर सिङ्गो देश बनाउने भाषण छाँटेर हिँड्ने, अनि नेपालमा 'हामी जस्ता सक्षमहरूको कदरै हुँदैन' भनेर सरकारलाई गाली गर्ने, कत्ति पनि सामाजिक दायित्वबोध नभएका, कपटभद्र नेपालीहरू पनि नभेटिएका होइनन् । तिनीहरू सधैँ मेरो लेखाइको तारो बने र भविष्यमा पनि बनिरहनेछन् ।

मैले यी अनुभूति बाँड्नुको अर्को कारण, विदेशमा बस्ने धेरै नेपालीमा व्याप्त नेपाल फर्किने या नफर्किने भन्ने द्विविधासँग सम्बन्धित छ । मेरा दुवै छोराछोरी लन्डनमा जन्मिएका हुन् । ११ वर्ष र आठ वर्षका हुँदा उनीहरूलाई मैले २०६४ सालमा स्थायी रूपमा नेपाल सारेँ । धेरै मित्र र आफन्तको दबावका बावजूद मैले र मेरी श्रीमतीले आफूहरूलाई मात्र होइन, छोराछोरीलाई पनि बेलायती नागरिकता लिन इन्कार गरिदिएकामा धेरैले हामीलाई मूर्ख सम्झिएका

थिए। त्यति मात्र होइन, हामी उनीहरूलाई यस्तो स्थितिमा नेपाल सारिरहेका थियौँ, जति बेला नेपालमा स्कुलहरू नियमित रूपमा चलिरहेका थिएनन्; दिनमा १२-१५ घण्टासम्म बिजुली गैरहेको थियो; काठमान्डु धूलो, धूवाँ, फोहोरमैलाले व्याप्त थियो र सुरक्षा स्थिति नाजुक हुँदै गैरहेको थियो। म भने काठमान्डुमा रहेका मेरा कैयौँ मित्रले ऊँ छोराछोरीलाई १२ कक्षासम्म भारतमा पढ्न पनि नपठाउने, बेलायतमा पनि नराख्ने र आफू पनि उमेर छँदै नेपाल फर्किने पक्षमा थिएँ। काठमान्डुमा आर्थिक स्थिति पूर्णतः मध्यमवर्गीय हुँदाहुँदै मेरो त्यस्तो ढिपी देखेर मेरा नातेदारहरू भन्थे– 'कुकुरलाई घिउ नपचेको,' 'बोकाको मुखमा कुभिन्डो नअँटेको' आदि-इत्यादि। तर मलाई त्यस्ता टिप्पणीले छुँदैछुँदैनथे। मेरा ती नातेदारहरू फोहोर मात्र हेरिरहेका थिए। म चाहिँ फोहोरमा कमल फुलाउने थोरै तर प्रेरणादायी ती नेपालीहरूलाई हेरिरहेको थिएँ, जसका कारण आज देशमा व्याप्त राजनीतिक दुर्गन्धका

बावजूद नेपाल नेपाल रहेको छ । त्यो देश, जसले म र म जस्ता दशौँ लाख नेपालीलाई नेपाली भन्दा गौरवको अनुभूति दिन्छ । त्यसैले विदेशमा बसेर नेपाल र नेपालीका लागि गर्ने मात्र होइन, देशभित्रै बसेर अनेकौँ रचनात्मक काम गरेर म जस्ता कैयौँलाई नेपाल फर्किन प्रेरित गर्ने ती नेपालीहरूप्रति पनि म उत्तिकै आभारी छु । ती फर्किएर सारा नकारात्मकताका बावजूद खुशीसाथ अत्यन्त रचनात्मक जीवन बिताइरहेका छन् भने म र मेरो परिवारले चाहिँ काठमान्डुमा बस्न नसक्ने भन्ने प्रश्नै उठ्दैनथ्यो । कुनै दुःखद घटना घट्नु छ भने त्यो भाग्यको खेल हो; जहाँ बसे पनि टारेर टर्दैन त्यो ।

हो, म फर्किएर कैयौँ नेपालीले झैँ हिलोमा कमल फुलाउन नसकुँला; आकाशको तारा खसाउन नसकुँला । म त्यस्तो कुनै महान् लक्ष्य लिएर फर्किन लागेको पनि होइन । मेरा धेरै दौँतरीले 'खूब शान देखाएर ठूलो मान्छे हुन गएको थियो, देख्यो ताइँ' भन्लान् ।

‘त्यो त महाको आडम्बरी हो नि; मुखले बडो राष्ट्रवादी कुरा गर्छ; केके व्यक्तिगत फाइदा हुने देख्यो अनि फर्कियो’ भन्लान्। भन्नेले यही आलेखलाई पनि ‘आफ्नो डम्फु आफैँ बजाएर शान दिएको’ भन्लान्। भोलि मेरा छोराछोरीले ‘हामीलाई लन्डनको स्वर्गबाट काठमान्डुको नर्कमा लेराएर जाकेको’ भनेर सराप्लान्। ती सबैको सामना गर्न म तयार छु। सबभन्दा डर मलाई अरूको नभै आफ्ना छोराछोरीले भोलि सराप्लान् भन्ने नै छ। छोराछोरी साना हुन्जेल तिनका मार्गनिर्देशक तिनले मन पराए पनि नपराए पनि तिनका बाबुआमा नै हुन्। आज मैले आफ्नो ब्रह्मले जे ठीक देखेँ, त्यो गरेँ। भोलि उनीहरूले मैले जेलाई आदर्श देखेँ, त्यसलाई भूल सम्झिए भने मलाई कुनै पश्चात्ताप हुनेछैन। त्यसमा म प्रस्ट छु। मैले रोजेको बाटोबाट उनीहरू अलिकति मात्र पनि प्रेरित भए भने म आफूलाई धन्य सम्झनेछु। भएनन् भने, त्यसलाई म आफ्नो जीवनको दुर्भाग्यको एउटा पाटो सम्झनेछु।

मैले यी अनुभूति नेपाल फर्किन लागेर या अलिकति कल्याणको काममा संलग्न भएर केके नै गरेँ भनी फुर्ती लगाउन पाठकहरूसमक्ष पस्किएको अवश्य होइन। तर, समाज कल्याणकारी भावनाबाट निर्देशित हुने हो भने सधैँ सरकारलाई गाली गरेर बस्नुपर्दैन र धेरै सकारात्मक काम आफैँ हुन सक्छन् भनेर पुनर्पुष्टि गर्न खोजेको चाहिँ अवश्य हो। त्यसै गरी वर्तमान परिस्थितिमा पनि दृढ मनोबल हुने हो भने नेपाल फर्किन सकिन्छ भनेर जिकिर गर्न खोजेको पनि हो। त्यति गर्दा म घमन्डी सुनिएको छु भने प्रबुद्ध पाठकहरूसँग क्षमायाचना गर्न चाहन्छु।

अन्तमा, तपाईंहरू, खास गरी विदेशमा बस्ने नेपालप्रेमी नेपालीहरू, कसैलाई पनि आफूले छोडेर गएका ती गरीब गाउँहरूमा शिक्षा र स्वास्थ्यको क्षेत्रमा केही गर्न इच्छा, त्यसका लागि उपयुक्त माध्यमको आवश्यकता र त्यो माध्यम हेल्प नेपाल नेटवर्क बनिदिन सक्छ भन्ने विश्वास छ भने कृपया मलाई निःसङ्कोच

सम्पर्क गर्नुहोला। नेपाल फर्किएपछिको आफ्नो निजी समय सकेसम्म विदेशमा बस्ने नेपालीहरूको कल्याणकारी चाहनालाई साकार पार्नमा व्यतीत गर्ने मेरो मनसाय हो। कल्याणको काममा कसैका लागि पनि सहायकसिद्ध हुन पाएँ भने म आफूलाई भाग्यशाली सम्झनेछु।

*कान्तिपुर दैनिक, २०६५ फागुन २६*

# कृपया पाँच रुपैयाँ दिनोस् न !

*कान्तिपुर* दैनिकमा *नेपाल फर्किने बेलामा* आलेख छापिएपछि त्यसबारे संसारभरिबाट सयौँको सङ्ख्यामा प्रतिक्रिया प्राप्त भए। लामो विदेश बसाइपछि नेपाल फर्किने मेरो नितान्त व्यक्तिगत निर्णय अनुभूति र अनुभवसँग सम्बन्धित हुनाले सो आलेख मैले बडो अप्ठेरो मानीमानी तयार पारेको थिएँ। त्यसलाई मपाइँत्वका रूपमा लिइएला भन्ने मलाई ठूलो डर थियो। तर, एकाध टिप्पणी त्यसतर्फ लक्षित भए पनि बाँकी सबै प्रतिक्रिया सहयोगात्मक र सकारात्मक रहे। ती प्रतिक्रियाहरूबाट मलाई के महशूस भयो भने, अत्यन्त व्यक्तिगत आकलन र अनुभूतिहरूलाई इमानदारीपूर्वक पाठकहरूसँग बाँड्ने हो भने त्यसले सकारात्मक सोच, कार्य र वैचारिक मन्थनका लागि सहयोग नै पुऱ्याउने रहेछ। सोही धारणाको परिणामस्वरूप

मैले 'नितान्त व्यक्तिगत' शीर्षकमा स्तम्भ शुरू गर्ने निर्णय गरेको हुँ।

राजनीतिबाहेक समाज निर्माणका अनगिन्ती वैकल्पिक बाटाहरू छन्। हरेक नागरिक त्यस्ता वैकल्पिक बाटाहरूमा, व्यक्तिगत नाम र दामबाट होइन, समाज रूपान्तरणको भावनाबाट प्रेरित भएर हिँड्ने हो भने, समाजको स्वरूप स्वत: परिवर्तन हुन्छ भन्ने मान्यता राख्ने हुनाले, यो स्तम्भका आलेखहरू सोही सोचको सेरोफेरोमा केन्द्रित रहनेछन्। त्यसै पृष्ठभूमिमा, यो पहिलो आलेखमा म नितान्त व्यक्तिगत अनुभव बाँडेर, नितान्त व्यक्तिगत आग्रह गर्न चाहन्छु, जुन कल्याणसँग सम्बन्धित छ। पत्रपत्रिकामा राजनीतिक आग्रहले पूर्ण लेखहरू छरपस्ट छापिन्छन् भने कल्याणकारी आग्रहले पूर्ण आलेख छाप्न किन नहुने भन्ने मान्यताबाट पनि यो स्तम्भ प्रेरित भएको छ। यसले सार्थक परिणाम ल्याएमा, मेरो भावी यात्रामा ठूलो बल पुग्नेछ। विगतमा शुभेच्छुकहरूबाट पाएको सहयोग र सद्भावका

कारण मैले निराश हुनुपर्नेछैन भन्ने आशा लिएको छु। यो आग्रहलाई मैले समाजमा रहेको आफ्नो सानो परिचयलाई अलि व्यापक स्तरको कल्याणकारी कार्यमा परिणत गर्नका लागि प्रयोग गर्न सकिन्छ या सकिँदैन, या त्यसो गर्न कति गाह्रो या सजिलो हुँदो रहेछ भन्ने एउटा परीक्षणका रूपमा पनि लिएको छु। विफल भएँ भने व्यङ्ग्य गर्नेहरू हाँस्लान्। तर, त्यसबाट मलाई कत्ति पनि पीडा हुनेछैन।

'नेपालका लागि महिनाको एक पाउन्ड कोष' को नारा दिँदै नौ वर्षअघि म र समान विचारका अन्य केही साथीद्वारा शुरू गरिएको हेल्प नेपाल नेटवर्क बेलायत, अमेरिका, अस्ट्रेलिया, स्विडेन र नेपालमा सरकारी मान्यताप्राप्त कल्याणकारी संस्थाका रूपमा कार्यरत छ। अन्य कतिपय देशमा नेटवर्कका सहयोगी समूहहरू पनि कार्यरत छन्। अवधारणाको तहमा हेल्प नेपाल नेटवर्कले मूल रूपमा 'नेपालका लागि नेपालीले गरौँ' र 'हरेक नेपालीको मनमा कल्याणकारी

भावनाको अभिवृद्धि गरौँ' भन्ने दुइटा लक्ष्य लिएको छ। कार्यान्वयनको स्तरमा चाहिँ शिक्षा र स्वास्थ्यका क्षेत्रमा सामुदायिक हितका कामहरू गर्नु नेटवर्कको उद्देश्य हो। अलिकति गर्न सक्नेहरूले गर्न नसक्नेहरूलाई थोरै मात्र सहयोग गरिदिने हो भने पनि यो समाज धेरै सहृदयी, सभ्य र शान्त हुन्छ भन्ने हाम्रो मान्यता हो। हामी पहिले पनि भन्थ्यौँ, र अहिले पनि भन्छौँ– विदेशमा बस्ने २५ लाखको सङ्ख्यामा रहेका भनिएका गैरआवासीय नेपालीमध्ये १० लाखले मात्र नेपालमा आफ्नो गाउँठाउँका एकएक विद्यार्थीको स्वास्थ्य र शिक्षाको जिम्मा लिइदिने हो भने वर्षमा १० लाख नेपाली बालबालिकाले सहजै तुलनात्मक रूपमा राम्रो स्वास्थ्य र शिक्षाको सुविधा पाउनेछन्। मन हुने हो भने त्यति गर्नका लागि न कुनै बाहिरी माध्यम चाहिन्छ, न त प्राविधिक समस्या पर्छ न आर्थिक नै। त्यसै गरी नेपालभित्रै रहेका तुलनात्मक रूपमा सम्पन्न नेपालीहरूले त्यसै गर्ने हो भने, हामीले धेरै कुरामा

विदेशीको मुख ताक्नैपर्दैन ।

नेपालीहरूबाट अहिले पनि धेरै कल्याणकारी काम भैरहेका छन् भन्नेमा शङ्का छैन । नेपालका गाउँगाउँमा त्यस्ता अनगिन्ती समाजसेवी छन्, जसको परिचय यो पङ्क्तिकारको जति फराकिलो नहोला र जो यो पङ्क्तिकारले जति लेख्न जान्दैनन् होला । तर मैले जे गर्न खोजिरहेको छु, त्यसका लागि मेरो प्रेरणाका स्रोत तिनै हुन् । तिनैको प्रेरणा लिएर कलमको दक्षतालाई प्रयोग गर्दै नेपाली-नेपालीबाटै व्यापक स्तरमा कल्याणको काम गर्न सकिन्छ कि भन्ने मेरो प्रयास हो । त्यसैले ठूला अन्तर्राष्ट्रिय दाताहरूबाट कोष सङ्कलन गर्न सक्ने शिक्षित, पेशागत, दक्ष र विश्वासिला नेपालीहरूको सञ्जाल भए पनि हेल्प नेपालले शुरूदेखि नै नेपाली-नेपालीबाटै कोष सङ्कलन गर्ने कामलाई प्राथमिकता दिएको छ । हामीले विदेशमा नेपालीहरूलाई 'महिनाको एक क्यान बियर या एक बोटल जुस कम खाइदिनोस् र बचेको रकम हामीलाई दान गर्नोस्' भनेर अपिल

गर्‍यौँ। नेपालमा, 'महिनाको एक प्लेट मम कम खाइदिन' आग्रह गर्‍यौँ। हाम्रो अनुरोध धेरैले सुनिदिए। त्यसैले, गत नौ वर्षमा हामीले गाउँगाउँमा १५ भन्दा बढी विद्यालयलाई भवन तथा पुस्तकालय निर्माणमा सहयोग पुर्‍यायौँ। ऋन्डै १२ विद्यालयमा नितान्त नयाँ तर अत्यन्त प्रभावकारी कम्प्युटर सञ्जालको सहायताले चल्ने 'इलेक्ट्रोनिक लाइब्रेरी' स्थापना गर्‍यौँ। मुगुको विकट मुर्मा गाउँमा हेल्थपोस्ट चलाइरहेका छौँ भने सर्लाहीमा अर्को हेल्थपोस्ट निर्माण गर्न लागिरहेका छौँ। १० भन्दा बढी स्वास्थ्य शिविर सञ्चालन गरिसकेका छौँ। धूलिखेलमा सुविधासम्पन्न अनाथालय निर्माण गरिरहेका छौँ। यी सब मूलत: नेपालीको सहयोग र दानबाट सम्भव भएका हुन्।

हामीलाई धेरै नेपालीले विश्वास गर्नुको एउटा मूल कारण के थियो भने, हामीले शुरूदेखि नै कल्याणकारी कोषका लागि गरिएको सहयोगबाट प्रशासनिक कामका लागि एक पैसा पनि खर्च गरेनौँ। साथसाथै, संस्थाका

कुनै पनि कार्यकारिणी सदस्यले तलब लिन नपाउने र सबैले पूर्णतया कल्याणकारी भावले स्वयंसेवीका रूपमा काम गर्नुपर्ने नियम बसाल्यौँ। कार्यकारिणी सदस्यले तलब लिने व्यवस्था गर्नेबित्तिकै त्यसले सेवाको होइन, पेशाको रूप लिँदो रहेछ। कल्याण सेवा हो, पेशा होइन भन्ने हाम्रो मान्यता हो। कुनै आर्थिक लाभ नहुँदा पनि हामीसँग सहकार्य गर्ने नेपालीहरूको सङ्ख्या ठूलो रह्यो। हामीले गर्छौं भनेको काम गरेर दाताहरूको विश्वास जित्यौँ। तर, ती सबै काम घरबाट गरेर सम्भव हुने थिएन। हामीलाई सानै किन नहोस्, सबै कामको समन्वय र कार्यान्वयन गर्न एउटा कार्यालयको आवश्यकता थियो। सो कार्यालयमा स्वयंसेवी होइन, पूर्णकालीन कर्मचारी नै नियुक्त गर्नुपर्ने थियो। सो कार्यालय सञ्चालन गर्न हामीले गत नौ वर्षमा धेरै सङ्घर्ष गर्नुपर्‍यो। कहिले आआफ्नै रकम खर्च गर्नुपर्‍यो भने, कहिले कार्यालय खर्चका लागि प्रायोजकहरू खोज्नुपर्‍यो। तर, त्यसरी हाम्रो दीर्घकालीन लक्ष्य पूरा

नहुने भएपछि मैले हेल्प नेपाल प्रशासनिक कोष स्थापनाका लागि एउटा अभियान सञ्चालन गरेँ। सहयोग गर्छु भन्ने दाताले कम्तीमा तीन लाख रुपैयाँ (या, चार हजार अमेरिकी डलर) चन्दा दिनैपर्ने मागका साथ शुरू गरिएको उक्त कोषमा नेपालसहित अस्ट्रेलिया, अमेरिका, बेलायत, रूस, कतार, आयरलन्ड, स्कटलन्ड, श्रीलङ्का र बङ्गलादेशमा कार्यरत २४ नेपालीले घटीमा तीन लाख र बढीमा छ लाख रुपैयाँ चन्दा दिइसकेका छन्। ती दाताहरूमा सामान्य गृहिणी, व्यापारी, समाजसेवीदेखि राष्ट्रसङ्घको उच्च ओहोदामा कार्यरत कर्मचारी र प्रतिष्ठित उद्योगपतिसम्म रहेका छन्। ती सबै नेपालीले हामीमाथिको विश्वास र हामीले गरेको राम्रो काम देखेर हामीलाई त्यति धेरै रकम दान गरेका हुन्। नेपालका वरिष्ठ चिकित्सक सुन्दरमणि दीक्षित र एक बेलायती महिलाले त हाम्रो सोच र कामबाट प्रभावित भएर स्वस्फूर्त रूपमा हामीले मागेभन्दा दोब्बर चन्दा दिए।

यसरी हामीले झन्डै ७५ लाख रुपैयाँ एक विदेशीबाहेक नेपाली-नेपालीबाट हेल्प नेपाल प्रशासनिक कोषका लागि सङ्कलन गरिसकेका छौँ। तर, सो रकम अहिले हामीले चलाएका छैनौँ। संस्थाको दिगो विकास, विस्तार र 'नेपालका लागि नेपालीले गरौँ' भन्ने भावनालाई देशभित्र र बाहिर तीव्र रूपमा फैलाउन हामीले प्रशासनिक कोषलाई कम्तीमा दुई करोड रुपैयाँको बनाउनैपर्ने अनुमान गरेका छौँ। त्यो लक्ष्य विदेशीलाई गुहारेर होइन, नेपाली-नेपालीलाई नै आग्रह गरेर हासिल गर्न सक्छौँ भन्ने हामीलाई पूर्ण विश्वास छ। तर यस पटक मैले तीन लाख दिने होइन, नेपालका कुनाकन्दरामा बस्ने एकएक रुपैयाँ दिन सक्ने नेपालीहरू पनि यो अभियानमा संलग्न हुन सकून् भन्ने चाहना राखेको छु, ताकि हेल्प नेपाल नेटवर्क वास्तवमै सबै नेपालीको कल्याणकारी संस्था बन्न सकोस्। आउँदो छ महिनाभित्र मैले नेपालभित्र र नेपाललाई माया गर्ने नेपालबाहिर रहेका नेपालीहरूबाट

कम्तीमा एक करोड रुपैयाँ सङ्कलन गर्ने लक्ष्य लिएको छु। त्यसका लागि आदरणीय पाठक, मेरा शुभेच्छुक, सहधर्मी पत्रकारहरू र सामाजिक दायित्वबोधबाट प्रेरित सबै नेपालीसँग म सहयोगका लागि विनम्र अनुरोध गर्छु। सबैले सानोभन्दा सानो रकम सहयोग गर्नुभयो भने पनि मैले राखेको एक करोड रुपैयाँको लक्ष्य सहजै पूरा हुनेछ। २० लाख नेपालीले मात्र पाँच-पाँच रुपैयाँ दिए भने पनि त्यो एक ठाउँमा राख्दा एक करोड हुनेछ।

सहयोग गर्ने चाहना भएका शुभेच्छुकहरूले चन्दा स्थानीय क्लब, संस्था, व्यापारिक समूह, स्कुल/कलेजका छात्रछात्रा या अन्य अनौपचारिक टोलीमार्फत समूहगत हिसाबले सङ्कलन गर्नुपर्नेछ। त्यसका लागि समूहगत रूपमा 'हेल्प नेपाल नेटवर्कलाई पाँच रुपैयाँ दिऔँ' अभियान सञ्चालन गर्नुपर्ने हुन सक्छ। पहिले-पहिले प्रशासनिक कोषलाई सहयोग गर्ने दाताहरूबाट झैँ एकै जनाबाट तीन लाख रुपैयाँ या सोभन्दा बढी दान

गरिएमा सोही व्यक्तिको नाम र परिचयसहित, र त्यसो हुन नसके, चन्दा दिने समूहको नाममा प्राप्त रकम हेल्प नेपालको वेबसाइट र अन्य दस्तावेजमा सूचीकृत गरिनेछ। 'हेल्प नेपाल नेटवर्कलाई पाँच रुपैयाँ दिऔँ' अभियानमा स्थानीय रूपमा सञ्चालित पत्रपत्रिका तथा एफएम रेडियो स्टेसनहरूबाट सहयोग मिल्ने मैले आशा लिएको छु। चन्दा सङ्कलन अभियानमा तिनले नेतृत्वदायी भूमिका निर्वाह गर्न सक्छन्। राष्ट्रिय रूपमा सञ्चालित पत्रपत्रिका, रेडियो र टेलिभिजन स्टेसनहरूले या ठूला व्यापारीहरूले सहयोग गर्ने हो भने त आफूले लिएको लक्ष्यभन्दा बढी रकम सङ्कलन हुनेछ भन्नेमा म विश्वस्त छु।

त्यसै गरी आजभोलि विदेशका कैयौँ शहर तथा कलेजमा नेपालीहरूको सङ्ख्या ठूलो छ। तिनले सानै स्तरमा रकम सङ्कलन गरिदिए पनि सो रकम नेपाल आइपुग्दा त्यसको मूल्य ठूलो हुनेछ। विदेशस्थित नेपालीहरूका संस्थाहरूबाट पनि सहयोग मिल्नेछ भन्ने

मैले आशा लिएको छु। सङ्कलित रकम हेल्प नेपाल नेटवर्कको नाममा पठाउनका लागि कार्यालय समयमा तल उल्लिखित फोन नम्बरमा सम्पर्क गर्न या इमेलमा खबर गर्न सक्नुहुनेछ।

नेपाली-नेपालीबीच कल्याणकारी भावनाको विकास गर्न, नेपाली-नेपाली मिलेर सञ्चालित कल्याणकारी संस्थालाई संस्थागत गर्न र गुनासो गरेर होइन, आफ्नो गच्छे अनुसार हामी आफैँले गरेर देखाउन सक्छौँ भन्ने विश्वासलाई स्थापना गर्न गरिएको एउटा नौलो प्रयास र प्रयोग हो यो। प्रबुद्ध पाठकहरूले अन्यथा लिनुहुनेछैन भन्ने मैले विश्वास लिएको छु। बाँकी, तपाईंहरूको तजबीज शिरोधार्य गर्नेछु।

सम्पर्क फोन : (०१) ४४९८३२८

इमेल : help_nepal@wlink.com.np

*कान्तिपुर दैनिक, २०६६ असार ३०*

# राजनीति र कल्याण

*कृपया पाँच रुपैयाँ दिनोस् न !* आलेख छापिएपछि राष्ट्रपति रामवरण यादवदेखि कैयौँ सर्वसाधारणसम्मले सहयोग गर्ने प्रतिबद्धता जनाएका छन्। कैयौँ पत्रपत्रिका तथा रेडियो स्टेसनले कोष सङ्कलन अभियान शुरू गर्ने भएका छन् भने, कैयौँ साथीले आफ्नो कार्यालयबाट एक दिनको तलब सङ्कलन गरिदिने बताएका छन्। अरू धेरैले विभिन्न विकल्प सुझाएका छन्। कुनैकुनै जिल्लाका उद्योग वाणिज्य सङ्घहरूले पनि साथ दिने वचन दिएका छन्। तर, म धेरै उत्साहित चाहिँ भैहालेको छैन। किनभने, अधिकांश स्थितिमा उद्देश्य र नतिजाका बीच ठूलो दूरी हुने गर्छ।

राजनीतिले फुटाउँछ; कल्याणले जोड्छ। राजनीति प्रतिस्पर्धा हो, कल्याण एकता। राजनीतिबाट धेरै समाज बिग्रिएका छन्; कल्याणबाट बिग्रिएकाहरू बनेका

छन् । जुनजुन राजनीतिले कल्याणलाई अङ्गीकार गर्न सके, तिनै राजनीति र देश सफल भएका छन् । तर पनि संसारभर कल्याण गौण र राजनीति प्रधान रहेको छ । त्यो प्रवृत्ति पत्रकारितासहित समाजको हरेक क्षेत्रमा स्पष्टसँग महशूस गर्न सकिन्छ ।

*कृपया पाँच रुपैयाँ दिनोस् न !* लेखेपछि सो आलेख मैले अत्यन्त श्रद्धा गर्ने एक पत्रकार मित्रलाई देखाएँ । उनले गम्भीरतापूर्वक भने, “तपाईंको सोच असाध्य राम्रो हो; तर यो लेख छाप्नुभयो भने तपाईंलाई *कान्तिपुर*लाई मञ्च बनाएर आफ्नो सङ्गठनलाई प्रवर्धन गरेको, एनजीओ स्थापना गर्न खोजेको र *कान्तिपुर*माथि पनि व्यक्ति र संस्थालाई प्रवर्धन गर्न खोजेको आरोप लाग्नेछ । त्यसै भएर, यो लेख नछाप्दा राम्रो हुन्छ । छापे पनि अलि पछि अन्य लेख छापिइसकेपछि छाप्नुहोला ।” आफ्ना मित्रले त्यसो भनेपछि म अलि हच्किएँ । यद्यपि आफूले जे लेखें, त्यस्ता विषयहरू व्यापक रूपमा पत्रकारितामा प्रतिविम्बित

हुनुपर्छ भन्नेमा म विश्वस्त थिएँ र छु। त्यसका केही स्पष्ट कारण छन्।

बाबुराम भट्टराईले माओवादी धारणा र अडानको पुष्टि गर्दै लेख लेखे भने त्यो छाप्न पत्रपत्रिकामाऊ हानथाप हुन्छ। त्यसलाई भट्टराई र उनको दलको प्रवर्धन गर्न पत्रिकालाई मञ्च बनाएको भनेर कसैले भन्दैन। नरहरि आचार्यले नेपाली काङ्ग्रेसबारे केही लेखे भने त्यो उनको राजनीतिक स्वार्थका लागि लेखेको भनेर कसैले भन्दैन। नेताको के कुरा, यहाँ कैयौँ यस्ता स्थापित टिप्पणीकार छन्, जसले कुनै दलविशेषका मूल्य र मान्यताहरू प्रवर्धन गर्छन्। तिनै आग्रहका आधारमा उनीहरूले राजनीतिक नियुक्ति पाउँछन्; राजदूत, सांसद र मन्त्री हुन्छन्। त्यस्ता लेख छाप्न कसैलाई अप्ठेरो लाग्दैन। बरु, सबै पक्षको धारणा पत्रिकामा आउनुपर्छ, त्यो नै निष्पक्ष पत्रकारिता हो भन्दै राजावादी रमेशनाथ पाण्डेदेखि माओवादी हरि रोकासम्मका लेखहरू खोजीखोजी छाप्छन् पत्रिकाहरू।

तर, साँच्चिकै असहायलाई थोरै भए पनि सहयोग पुग्ने कल्याणको आग्रह गरिएको लेख छाप्न किन नहुने! यदि त्यस्तो लेखमा व्यक्तिगत स्वार्थ लुकेको छ भने प्रबुद्ध पाठकहरूले केही लेखपछि नै लेखकको मनसाय सजिलैसँग बुझिहाल्छन्।

यो समाज राजनीतिमय होइन, कल्याणमय भयो भने स्वतः सभ्य, सुसंस्कृत र शान्त हुन्छ। आखिर राजनीतिको लक्ष्य पनि कल्याण नै हो र सबै तथ्यले पुष्टि गरेको कुरा के हो भने, जहाँ राजनीतिले कल्याणलाई प्रवर्धन गर्न सकेको छ, ती समाज र देश मानव विकासको सूचीमा सदा माथि रहने गरेका छन्। नर्वे, फिनलन्ड, स्विडेन जस्ता स्कान्डेनिभियाली देशहरू कल्याणकारी समाज र राजनीतिका ज्वलन्त उदाहरण हुन्। लोकतन्त्र, समाजवाद, साम्यवाद सबैको लक्ष्य कल्याणवाद नै हो। तर जे लक्ष्य हुनुपर्ने हो, त्यो संसारभरि गौण बनेको छ। कुनै कार्यक्रममा महावीर पुन, अनुराधा कोइराला या उत्तम सन्जेल

आउँदा पछि लाग्ने मान्छेहरूको सङ्ख्या जति हुन्छ, त्योभन्दा धेरै गुणा बढी सर्वसाधारण कुनै दलको नेता या मन्त्री आउँदा पछि लाग्ने गर्छन्, चाहे ती महा-अनैतिक र भ्रष्ट नै किन नहुन् ।

यस अर्थमा हाम्रो समाज निर्माणको आधारभूत मान्यता नै त्रुटिपूर्ण छ । हामीले महावीर पुन, अनुराधा कोइराला, उत्तम सन्जेलहरूको प्रशंसा त गर्‍यौँ; तर आफ्ना छोराछोरीलाई तिनको पदचिह्नमा हिँड्न कहिले पनि प्रेरित गरेनौँ । तिनलाई हामीले ठूलो हुन सिकायौँ; तर असल हुन सिकाएनौँ । 'तँ ठूलो मान्छे भएस्; समृद्ध भएस्' भनेर आशीर्वाद दियौँ; तर 'तँमा सामाजिक दायित्वबोध भएन भने तँ ठूलो हुनुको कुनै अर्थ छैन' भनेर कहिले पनि सम्झाएनौँ । कल्याणको प्रवर्धन मान्छेलाई असल हुन सिकाउने सबभन्दा उत्तम विकल्प हो । त्यसै भएर मैले जुन किसिमका लेख लेखेँ, त्यस्ता लेखहरूलाई प्रवर्धन गर्नैपर्छ; त्यो चुनौती पत्रकारहरूले उठाउनैपर्छ । आज मैले गरेँ;

भोलि त्यही काम स्थानीय तहमा स्रोतको अभाव भएको तर उल्लेखनीय काम गरिरहेको अर्को संस्थाले गर्नेछ । हामीले एउटा यस्तो वातावरण सृजना गर्नुपर्छ, जहाँ कल्याणको काम नगर्ने व्यक्तिले लज्जाबोध गरोस् । काठमान्डुको धूलो, धूवाँ, खाल्डाखुल्डी र गरीबीमाऊ पजेरो दौडाउनेले 'मैले यो समाजको निर्माणको लागि आफूसँग भएको सम्पत्तिको अनुपातमा पर्याप्त काम गरेको छु कि छैन ?' भनेर आफैँलाई प्रश्न गर्दै दोषको अनुभूति गरोस् । तर, त्यसका लागि मूलधारका सञ्चार माध्यमहरूले यस्ता विषयहरूलाई उठाउनैपर्छ ।

आफ्नो तीव्र लगाव, ऊर्जा र भावना गाँसिएको काम र संस्थाबारे आफैँले लेखे र बोलेजति सशक्त अरूले लेखिदिएर या बोलिदिएर हुनै सक्दैन । के रुम टु रिडका संस्थापक जन उड आफ्नै विचार र अनुभवबारे *लिभिङ माइक्रोसफ्ट टु चेन्ज द वर्ल्ड* लेखेर घमन्डी भए ? उनले त्यो लेख्दा उनको राम्रो कामको त

प्रवर्धन भयो-भयो, उनले अरू अनगिन्ती मानिसलाई कल्याणको मार्गमा प्रेरित पनि गरे। म त भन्छु– पत्रकार कनकमणि दीक्षितले आफूले स्थापना गरेको स्पाइनल इन्जरी रिह्याबिलिटेसन सेन्टरबारे अरूले लेखिदेलान् भनेर बस्ने होइन, आफैँ लेख्नुपर्छ। अनि सिकून् न मानिसहरूले आफूलाई परेको दुर्घटनालाई कसरी समाजमा ठोस रचनात्मक काममा परिणत गर्न सकिन्छ भनेर ! धूलिखेल अस्पतालका डा. रामकृष्ण श्रेष्ठले लेखून् न आफैँ, उनले आफ्नी आमाले राम्रो औषधि-उपचार नपाएको पीडाबाट त्यत्रो अस्पताल किन निर्माण गरे भनेर ! तिनले आफ्ना अनुभव र भावना आफैँ किन लेख्दैनन्? किनभने, हामीले त्यस्ता कुरा लेख्न तिनलाई कहिले पनि प्रेरितै गरेनौँ; त्यसैले तिनलाई आफ्नै बारे लेख्न र भन्न अप्ठेरो लाग्छ। तर, हामी बाबुराम भट्टराई र नरहरि आचार्यहरूकहाँ लेख खोज्दैखोज्दै पुग्छौँ। अझ उनीहरूसँग बसेर राजनीतिक दर्शन छाँट्न पाए र राजनीतिका भित्री

जानकारी लिन पाए दङ्ग पर्छौं। त्यसको अर्थ राजनीतिलाई घृणा गरौँ भन्न खोजिएको होइन। राजनीति मूलनीति नै हो। तर राजनीतिमा कल्याणको लेप लगाउन सकिएन भने, त्यसले समाजलाई बनाउने होइन, फुटाउने, टुटाउने र ध्वंस पार्ने काम गर्छ।

त्यही मान्यताका कारण 'नितान्त व्यक्तिगत' स्तम्भ शुरू गरेर नितान्त व्यक्तिगत अपिल गरेको हुँ, जसलाई *कान्तिपुर* दैनिकले एउटा चुनौतीका रूपमा स्वीकार गऱ्यो। मेरो अभियानमा कतिको सहभागिता रहन्छ भन्दा पनि, यो स्तम्भले कुनै पनि राजनीतिक वादलाई होइन, कल्याणवादको भावनालाई फैलाउन सक्यो भने म आफ्नो प्रयासलाई सार्थक सम्झनेछु।

*कान्तिपुर दैनिक, २०६६ साउन ६*

# उद्योगी-व्यापारीलाई खुला पत्र

प्रिय उद्योगी-व्यापारी मित्रहरू,

तपाईंहरूले आआफ्नो व्यस्तताका बावजूद यो पत्र पढ्न पाँच मिनेट समय निकालिदिनुभयो भने म अत्यन्त आभारी हुनेछु। तपाईंहरूलाई यसरी समूहगत रूपमा खुला पत्र लेखेको देख्दा अचम्म लाग्यो होला। तर जब मलाई कल्याणकारी कार्य र भावनाको प्रवर्धनका लागि अलि बलिया हातहरूको आवश्यकता पर्छ, मेरो ध्यान तपाईंहरू जस्ता उद्योगी-व्यवसायीतर्फ जाने गर्छ। किनभने, मन हुने आम मानिससँग धन हुँदैन, तर तपाईंहरूमध्ये कतिसँग धनसँगसँगै मन पनि हुन्छ। मलाई के थाहा छ भने, साना, मझौला र ठूला स्तरका कतिपय व्यापारीको छाती धेरै उदार छ र तिनले समाजमा धेरै कल्याणकारी काम गरेका छन्। तर के पनि सत्य हो भने, संसारभर धेरै व्यापारीको

मनलाई व्यापारको साङ्लोले यसरी बाँधिदिएको छ, ती मनहरूमा मानवताको लेश पनि छैन। ती एकाध सानातिना प्रतीकात्मक कल्याणको काम गर्छन्, सिर्फ दोषभाव पखाल्नका लागि। ती सबै जीवन जिउनुको अर्थ नबुझी पैसाले पुरिएको चेतना लिएर यो संसारबाट बिदा हुन्छन्। पैसा, पैसा, पैसा अनि व्यापार विस्तार, सुख-सयल, शान र नामबाहेक तिनलाई यो समाज र देशबारे खासै चासो रहँदैन। या, रहन्छ भने पनि त्यो आफू, आफन्त, आफ्नो व्यापार र व्यवसायको सुरक्षा र प्रवर्धनसँग मात्र जोडिएको हुन्छ। त्यस्तो चेतनालाई बदल्ने एउटै उपाय सक्दो बढी उदाहरणहरूको प्रस्तुति हो, ताकि केही नगर्ने या व्यापारबाट हुने नाफाको तुलनामा साह्रै कम दान गर्नेहरूले आफूलाई दोषी महशूस गरून्।

म पेशाले पत्रकार हुँ। मसँग आर्थिक स्रोत कम र कलमको दक्षता बढी छ। त्यो दक्षतालाई मैले मूल रूपले राजनीतिकेन्द्रित राखेँ। पत्रकारिता संसारभर

राजनीतिको सेरोफेरोमा केन्द्रित रहने हुनाले मैले त्यसलाई अस्वाभाविक पनि मानिनँ र पत्रकारिता गरुन्जेल म त्यसबाट टाढा रहन पनि सक्दिनँ। तर १५ वर्षभन्दा पनि बढीको राजनीतिक पत्रकारितापछि वास्तविक उपलब्धि के हासिल भयो त भनेर कहिलेकाहीँ आत्ममूल्याङ्कन गर्दा त्यसले मलाई परिचय, पेशागत सन्तुष्टि, नियमित आम्दानी, अलिकति सांसारिक ज्ञान र ती सबैले दिने नजानिँदो शानबाहेक खासै केही दिए जस्तो महशूस भैरहेको छैन। आफूले निकै पाएछु, तर यो समाजले चाहिँ के पायो त भनेर म बढ्दो रूपमा प्रश्न गरिरहेको छु। कहिलेकाहीँ मेरा शुभेच्छुक श्रोता र पाठकहरू भन्ने गर्छन्, "तपाईं किन यसो भन्नुहुन्छ थाहा छैन, तर तपाईंले पत्रकारितामार्फत यो समाजमा धेरै योगदान पुऱ्याउनुभएको छ नि!" म उनीहरूलाई प्रस्ट भन्ने गर्छु, "मैले यो समाजमा योगदान पुऱ्याउँछु भनेर पत्रकारिता गरेकै होइन। जसरी कोही डाक्टर, इन्जिनियर, वकील, अर्थशास्त्री

बन्छन्, आफूलाई जेमा रुचि भयो र परिस्थितिले जे अनुकूल भयो त्यही पेशा अँगाल्छन्, त्यसै गरी मैले पनि पत्रकारितालाई अँगालें। जसरी कतिपय अरूलाई आफ्नो पेशामा वृत्ति विकास गर्ने, इमानदार र स्वाभिमानी हुने इच्छा हुन्छ, त्यस्तै इच्छा मलाई पनि भयो। सो इच्छापूर्तिका क्रममा मैले काम गर्दा मेरा शुभेच्छुकहरूले भनेझैं सम्भवत: समाजले केही पायो होला, त्यो भिन्दै कुरा हो, तर म समाजलाई योगदान गर्छु भनेर पत्रकार बनेको चाहिँ हुँदै होइन।"

मेरो धारणा सधैं के रह्यो भने, पेशा सेवामुखी हुन सक्छ, तर त्यो आफैंमा सेवा चाहिँ होइन। उदाहरणका लागि, चिकित्सा सेवामुखी पेशा हो, तर पैसा लिएर बिरामी जाँच्ने डाक्टरले 'मैले डाक्टर भएर समाजको सेवा गरें' भन्न चाहिँ मिल्दैन। सेवा हुनका लागि त्यसमा त्याग र कल्याणको अंश हुनुपर्छ। उदाहरणका लागि, डा. भगवान कोइरालाको नाम लिन सकिन्छ। यसलाई मैले जोड्न खोजेको उद्योगी-व्यापारीहरूसँगको

प्रसङ्गमा हो। तपाईंहरूबाट देशले धेरै पाएको छ, त्यसमा कुनै शङ्का छैन। तर, त्यो तपाईंहरूले आफ्नो उद्योग र व्यापारलाई विस्तार गर्ने क्रममा स्वाभाविक परिणतिका रूपमा निस्किएको प्रतिफल मात्र हो। जसरी मैले समाज र देश बनाउन पत्रकारिता गरेको होइन, त्यसै गरी तपाईंहरूले समाज र देश विकास गरिदिनका लागि व्यापार गर्नुभएको होइन।

समाज र देशकै लागि गर्ने हो भने हामी सबैले कल्याणकारी कार्यहरूमा जोड दिनैपर्छ। र, उद्योगी-व्यापारीहरूका हकमा कुरा गर्दा, विश्वका कतिपय चेतनशील व्यापारीमा कल्याणकारी प्रवृत्ति बढ्दै गएको देखिन्छ। व्यवसायीहरूको सामाजिक दायित्व (कर्पोरेट सोसल रेस्पोन्सिबिलिटी) को अवधारणा त्यसै आएको होइन। सन् २००८ मा प्रकाशित *पर्सनल वेल्थ फ्रम ए ग्लोबल पर्सपेक्टिभ* पुस्तकका अनुसार, विश्वको ५० प्रतिशतभन्दा बढी सम्पत्ति सिर्फ दुई प्रतिशत

धनाढ्यहरूको हातमा केन्द्रित छ भने, अर्को एउटा अध्ययनका अनुसार, तल्लो तप्काका ५० प्रतिशत मानिसहरू विश्वको एक प्रतिशत सम्पत्ति मात्र बाँडचुँड गर्छन्। कुनै पनि किसिमबाट त्यसको औचित्य दर्शाउन सकिँदैन। त्यसैले, सबै धनाढ्यले सम्पत्तिको त्यस्तो असमान वितरणका असरहरूलाई कम गर्न कुनै न कुनै ढङ्गबाट योगदान पुऱ्याउनैपर्छ। त्यसका लागि एउटा राम्रो विकल्प कल्याण नै हो। सरकारलाई मात्र गाली गरेर हिँड्नु निर्दयता र नादानी हो।

यस परिप्रेक्ष्यमा मलाई सबभन्दा दुःख लागेको कुरा के हो भने, २०६६ असार ३० गते मङ्गलबार, *कृपया पाँच रुपैयाँ दिनोस् न !* र त्यसको एक हप्तापछि साउन ६ गते मङ्गलबार *राजनीति* र *कल्याण* लेखेपछि मलाई राष्ट्रपति रामवरण यादवदेखि सयौँ सर्वसाधारणले सहयोग गर्ने प्रतिबद्धता जनाए। तर ती सबैजसो थोरै धन, ठूलो मन भएका नेपाली थिए। उनीहरूप्रति म पूर्णतः नतमस्तक छु। तर,

सबभन्दा स्रोतसम्पन्न मानिने व्यापारीहरूबाट भने सहयोगका प्रस्तावहरू एकदमै कम आए। हेल्प नेपाल प्रशासनिक कोषका लागि नेपालीहरूबाट उठाएको ७५ लाख रुपैयाँमा मलाई तीन-तीन लाख रुपैयाँ चन्दा दिने बेलायत, अस्ट्रेलिया, अमेरिका, कतार, रूस जस्ता देशमा रहेका धेरै नेपाली व्यापारी छन्। नेपालभित्रै रहेका व्यापारीहरूमा भने हालसम्म वीरेन्द्रबहादुर बस्नेत र सिद्धार्थ राणा मात्र रहेका छन्।

अब एक जनाले तीन लाख होइन, सय नेपाली व्यापारीले एक-एक लाख या दुई सय जनाले ५०-५० हजार या चार सय जनाले २५-२५ हजार रुपैयाँ मात्र दिने हो भने पनि एक करोड रुपैयाँ जम्मा गर्ने मेरो लक्ष्य तुरुन्तै पूरा हुनेछ। तपाईंहरूले अन्त जत्ति नै कल्याणकारी कामहरू गर्नुभएको भए पनि, ममाथि विश्वास छ भने, त्यति या त्योभन्दा धेरै दान गर्न सक्ने साना, मझौला र ठूला व्यापारीहरू नेपालभर जत्ति भए पनि हुनुहुन्छ। साथमा थोरै धन, ठूलो मन

भएका नेपालीहरूबाट आउने सहयोग त आफ्नो ठाउँमा छँदै छ।

सानोमा कलम बलियो कि तरबार भनेर वादविवाद गर्दा मैले सधैँ कलमको पक्ष लिएँ। आज म कलमजीवी भएको छु। तर जब म कल्याणका लागि भीख माग्छु, त्यति बेला आफ्नो कलम कैयौँ राजनीतिकर्मीको धम्की र बन्दुकभन्दा कति निरीह रहेछ भन्ने मलाई बोध हुन्छ। मैले कैयौँ यस्ता व्यापारी चिनेको छु, जसले धम्की र बन्दुक या व्यापारिक र राजनीतिक स्वार्थका कारण दलहरूलाई दशौँ लाख चन्दा दिएका छन्। तर, गत नौ वर्षमा मुगु र सर्लाहीमा हेल्थपोस्ट बनाउन होस् या सल्यान र चितवनमा स्कुल बनाउन, मोरङमा 'इलेक्ट्रोनिक लाइब्रेरी' को स्थापना गर्न होस् या डोल्पामा सामान्य पुस्तकालयको निर्माण गर्न मैले धेरै धनी नेपालीसँग धेरै पटक भीख मागिसकेको छु। धेरैले कुनै वास्तविक र कुनै बनावटी कारण देखाएर केही पनि दिएनन्।

थोरैले अत्यन्त आत्मीयतापूर्वक त्यस्तो प्रयासमा सघाउ पुऱ्याए। तर कसैकसैले 'तैंले धेरै कचकच गरिस्, ला खा' भनेर कुकुरलाई हाड फालेझैँ गरेर पनि केही दिए। आफ्नो शब्द र कलमको निरीहपनाले मलाई त्यस्तो बेला बढी पीडा दिने गर्छ। तर हेल्प नेपाल नेटवर्कको प्राथमिक उद्देश्य ठूला विदेशी दाताहरूबाट भन्दा नेपाली-नेपालीबाटै कोष सङ्कलन गरेर कल्याणकारी काम गर्नु रहेको हुनाले सबै प्रकारका जवाफका लागि म तयार छु। सबै प्रतिकूल स्थितिको सामना नगरेको भए हामीले नेपाली-नेपालीको पैसाबाट गाउँगाउँमा ३५-४० वटा कल्याणकारी काम गर्न सम्भव नै हुने थिएन। *(यो पुस्तक प्रकाशित हुँदासम्म त्यस्ता कामहरूको सङ्ख्या सय वटाभन्दा बढी पुगिसकेको छ।)*

मलाई थाहा छ, तपाईंहरूमध्ये कतिले आआफ्नै ढङ्गले धेरै कल्याणका काम गरिरहनुभएको छ। तर, देशको नाजुक स्थितिका कारण आफ्ना कल्याणकारी कामको स्तरलाई हामी सबैले बढाउन आवश्यक छ।

देश र सरकार कमजोर भएको बेला नागरिकहरूको जिम्मेवारी बढी हुन्छ। धेरै शुभेच्छुकले देशभरिबाट समूहगत या संस्थागत रूपमा चन्दा सङ्कलन भैसकेपछि त्यसलाई दाखिला गर्नका लागि ब्याङ्क विवरण मागिरहेका छन्, जुन तपाईंहरूका लागि पनि काम लाग्ने आशा लिएको छु। देशमा सबभन्दा बढी शाखा भएको नेपाल बैङ्कको केन्द्रीय कार्यालय, न्युरोडमा हेल्प नेपाल नेटवर्कको नाममा खाता छ, जसको नम्बर २-१०-४२६६८४ रहेको छ। अन्य जिज्ञासाका लागि तल दिइएको इमेलमा मलाई सम्पर्क गर्न सक्नुहुनेछ। तपाईंहरूको जो इच्छा !

सहयोगको आशामा,

रवीन्द्र मिश्र

nitantabyaktigat@gmail.com

*कान्तिपुर दैनिक, २०६६ साउन १३*

# 'मेरो जिन्दगी, मेरो विश्वास'

*कृपया पाँच रुपैयाँ दिनोस् न !* प्रति अत्यन्त सकारात्मक प्रतिक्रियाहरू प्राप्त भैरहेका छन् । तर, सो अपिल गर्नुको अर्थ सबैले मलाई मात्र सहयोग गरून् भन्ने कदापि होइन । समाज र देशले राजनीतिमय भएर धेरै दुःख पायो, त्यसमा अलिकति कल्याणको लेप लगाउन सकिन्छ कि भनेर गरिएको एउटा प्रयास थियो त्यो । कसैलाई वृद्ध आश्रम, कसैलाई बाल आश्रम, कसैलाई शिक्षाका लागि, कसैलाई स्वास्थ्यका लागि सहयोग गर्न रहर होला । जहाँ गरे पनि गर्नु चाहिँ गर्नैपर्‍यो, अलिकति सक्नेले अलिकति नसक्नेलाई हेर्नैपर्‍यो, कुरा गरेर मात्र भएन, कामै गर्नैपर्‍यो भन्न खोजिएको हो । त्यसैले मेरो आग्रह आफ्नो ठाउँमा छँदै छ । तर, यो आलेखमा म अर्को एउटा प्रसङ्गको चर्चा गर्न चाहन्छु ।

नेपाल टेलिभिजन तथा देशका दर्जनौं रेडियो स्टेसनबाट हालैसम्म एउटा कार्यक्रम प्रसारण भैरहेको थियो– 'मेरो जिन्दगी, मेरो विश्वास'। जनकल्याण प्रसारणको विकासप्रति प्रतिबद्ध एन्टेना फाउन्डेसनद्वारा उत्पादित सो कार्यक्रममा आफ्नो पेशा, कर्म वा अन्य कुनै माध्यमबाट समाजमा उल्लेख्य योगदान पुऱ्याइरहेका व्यक्तिहरूको दृढ विश्वासमा आधारित अनुभव र भोगाइ समेटिएको हुन्थ्यो। त्यस्तो प्रेरणादायी कार्यक्रम नेपाल भित्र्याउने एन्टेना फाउन्डेसनका निर्देशक मधु आचार्यलाई धेरैधेरै धन्यवाद दिनैपर्छ।

हालै सो कार्यक्रमको अर्धवार्षिकीको अवसर पारेर, कार्यक्रमको छब्बीसौं अङ्कसम्म समेटिएका २६ जना 'कर्मनिष्ठहरूको आत्मकथा' समावेश गरिएको पुस्तक विमोचन गरिएको थियो। त्यहाँ यस्ता अनुहारहरू देखिए, यस्ता आवाजहरू सुनिए, जसले मलाई जिन्दगी जिउनुको सार्थकतामाथि जीवनभर बारम्बार प्रश्न गरिरहन प्रेरित गर्नेछन्। सो पुस्तकमा मूल रूपमा

तीन वर्गका व्यक्तित्वहरू समेटिएका छन्। पहिलो, आफ्नो पेशाप्रति इमानदार र प्रतिबद्ध; दोस्रो, सेवाप्रति इमानदार र प्रतिबद्ध अनि तेस्रो, पेशा र सेवा दुवैप्रति इमानदार र प्रतिबद्ध। यी तिनैको महत्त्व ठूलो छ, तर तीमध्ये सबभन्दा कठिन बाटो दोस्रो चाहिँ हो, जसमा व्यक्तिगत वृत्ति विकास र आर्थिक लाभको कुनै चाहना गाँसिएको हुँदैन। यो सङ्क्षिप्त आलेखमा २६ जनाकै नाम र कामको उल्लेख गर्न सम्भव हुँदैन। तर, मलाई जीवनको अर्थ खोज्न प्रेरित गर्ने २५ वर्षीया पुष्पा बस्नेतलाई म प्रतिनिधि पात्रका रूपमा उल्लेख गर्न चाहन्छु, जसलाई देख्दा मेरा आँखा साँच्चिकै श्रद्धाभावले रसाए। उनी काठमान्डुमा हुर्किएकी अविवाहित, शिक्षित र सम्पन्न परिवारकी, लाउँलाउँ-खाउँखाउँ उमेरकी युवती हुन्। उनको पनि त्यो उमेरका अन्य महिलाका जस्तै धेरै चाहना थिए होलान्। तर, उनले आमाबाबु कारागारमा परेपछि अलपत्र परेका ३५ बालबालिकालाई बालकेन्द्र खोलेर

पालन-पोषण गरिरहेकी छन्। उनी भन्छिन्, "यी केटाकेटीसँग मैले हरेक दिन ३५ आमाको आत्मा बोकेर बस-उठ गर्नुपर्छ। कोही औँला चुस्छन्; कोही बाहुलाले सिँगान पुस्छन्; कोही ओछ्यानमा सुत्छन्।" ती सबै बालबालिकाका लागि उनी 'पुष्पा मामु' हुन्।

पुष्पा मामुहरू जस्ताको कर्मको शक्ति र सार्थकतालाई बोध गरेर, अनि पत्रकारितामा हुने शब्द-आदर्शको खेतीको तुलनात्मक निरर्थकतालाई महशूस गरेर होला, 'मेरा जिन्दगी, मेरो विश्वास' का प्रस्तोता, चर्चित टेलिभिजन पत्रकार विजयकुमार पाण्डे आफ्नो मन्तव्यमा बारम्बार जोड दिँदै थिए, "शब्दहरू शक्तिशाली हुन्छन्, तर त्यति बेला मात्रै, जब तिनमा चेतना र कर्म पनि जोडिएको हुन्छ।" सम्भवतः म जस्तै अर्थहीन शब्द बेचेर थाकेका विजयकुमारले पछि अनौपचारिक कुराकानीका क्रममा मलाई भने, उनी बढ्दो रूपमा सेवामूलक सार्थक कर्म गर्ने उपायको खोजीमा छन्। उनलाई मेरो शुभकामना !

विजयकुमार पाण्डेले त्यसो भन्दा म सोही पुस्तक विमोचन समारोहका अर्का वक्ता र सो पुस्तकमा समेटिएका अर्का व्यक्तित्व मदन राईको उद्‌गार सम्झिँदै थिएँ। खोटाङको सामान्य किसान परिवारमा जन्मिएका ६० वर्षीय मदन राई संयुक्त राष्ट्रसङ्घमा कृषिविज्ञका रूपमा काम गरेर देश-विदेश घुमेपछि खोटाङ नै फर्किएर त्यहाँका युवाहरूलाई रोजगारीमूलक तालीम दिने, उद्योग सञ्चालन गर्न प्रेरित गर्ने र सूचना प्रविधिको ज्ञान बढाउने कार्यमा जुटेका छन्। आफ्नो मन्तव्यका क्रममा उनले भने, "पढ्न जान्ने, लेख्न जान्ने र बोल्न जान्ने मान्छे यो देशमा प्रशस्त भए। अब गर्न जान्ने मान्छे चाहियो।"

'गर्न जान्ने' भन्दा केलाई गर्न जान्ने र के चाहिँ गर्न जान्यो भने त्यो समाजका लागि वास्तविक योगदान ठहरिने हो भन्ने प्रश्न उठ्नु स्वाभाविक हुन जान्छ। त्यसको जवाफ आआफ्नो मान्यता, स्वार्थ र विश्लेषणले निर्क्योल गर्ने विषय हो। तर राईको

टिप्पणीलाई मेरो आफ्नो पृष्ठभूमिमा राखेर हेर्दा, भन्नैपर्ने हुन्छ, आफूले गरेको पत्रकारिताबाट देश र समाजले अर्थहीन देखिएको शब्दको वर्षाबाहेक ठोस केही पाए जस्तो मलाई लाग्दैन। त्यसै गरी, दाताको पैसा लेराएर पाँचतारे होटेलमा मानव अधिकार र देश विकासबारे दिनदिनैजसो हुने अन्तरक्रियात्मक आदर्शको खेती गर्नेहरूले पनि एकपल्ट एकान्तमा आफैँलाई 'मैले पढ्न जानेँ; मैले लेख्न जानेँ; मैले बोल्न जानेँ; तर आफ्नो गाउँ, आफ्नो ठाउँ र आफ्नो देशलाई मैले के दिएँ ?' भनेर प्रश्न गर्दा त्यो आत्म-शुद्धीकरणका लागि सहायकसिद्ध नै हुनेछ। पाँचतारे होटेलमा 'मैले गरेका अन्तरक्रियाले मानिसहरू सुसूचित र चेतनशील भएका छन्' भन्नु स्कुल जान नपाएका, राम्ररी खान नपाएका र बिरामी छोराछोरी र आमाबाबुको उपचार गर्न नसकेकाहरूको नाङ्गो उपहास हो। यहाँ त्यस्ता अन्तरक्रियाहरूको ठाडै अवमूल्यन गर्न खोजिएको होइन। तर, तिनका आयोजकहरूले

आत्मसमीक्षा गरेर 'मेरो जिन्दगी, मेरो विश्वास' मा समेटिएका कैयौँ पात्रबाट प्रेरणा लिनु र आफ्नो कर्मलाई बेलाबखत कर्तव्यबोधको चेतनाले पखाल्नु राम्रो हुन्छ भन्न खोजिएको चाहिँ अवश्य हो।

पुष्पा बस्नेत जस्ता आदर्श व्यक्तिहरूबाट मैले सधैँ ठूलो प्रेरणा लिने गरेको छु। फरक यति हो– पुष्पा जीवन बदल्ने कर्मनिष्ठ हुन्; म मूलतः खोक्रा शब्दहरूको वाहक हुँ। म पुष्पाबाट प्रेरणा लिन्छु; उनको प्रशंसा गर्दै आदर्श छाँट्छु, तर उनको बाटो हिँड्न सक्दिनँ। यो मेरो मात्र होइन, आम मानिसको नियति हो– आदर्शको प्रशंसा गर्ने, तर आफैँ आदर्शको प्रतिरूप बन्न नसक्ने। हामी, जो त्यस्तो बाटोमा हिँड्न सक्दैनौँ, के चाहिँ गर्न सक्छौँ भने, मैले पहिलो आलेखमा उल्लेख गरे जस्तो, महिनाको एक प्लेट मम कम खाएर बचेको रकम पुष्पाहरूलाई चन्दा दिन सक्छौँ। बजारमा किनेर महिनाको एक प्लेट मम पनि खान नसक्ने गरीबहरूबाट त्यो सहयोगको अपेक्षा

राख्न सकिँदैन। तर हामी जस्ता महिनामा १० प्लेट मम खानेहरूका लागि भने, एक प्लेट मम माया मार्दा केही फरक पर्दैन। त्यसबाट जोगाएर दिएको पैसा पुष्पा बस्नेतले हुर्काइरहेका ती निर्दोष बालबालिकाका लागि ठूलो सहयोग हुन सक्छ।

त्यसरी सानो स्तरमा व्यक्ति-व्यक्तिले आफ्नो दैनिक गतिविधि र जीवन शैलीमा कुनै असर नपारी सहज रूपमा गर्न सक्ने सहयोगलाई मैले 'व्यावहारिक परोपकार' (प्र्याक्टिकल फिलन्थ्रोपी) को संज्ञा दिएको छु। हरेक परिवारले घरमा कल्याणकारी कामका लागि एउटा-एउटा खुत्रुके राखेर त्यसमा खुद्रा पैसा मात्र हाल्दै गए भने, त्यतिले पनि कल्याणकारी काम गरिरहेका धेरै व्यक्ति र संस्थालाई ठूलो सहयोग पुऱ्याउँछ। त्यति मात्र होइन, त्यसबाट हामी, आफ्ना घरका केटाकेटीलाई सानैदेखि आफूभन्दा कमजोर र असहायहरूप्रति जिम्मेवार हुन सिकाइरहेका हुन्छौँ। त्यस्तो जिम्मेवारीबोधले मानिसहरूलाई इमानदार बन्न सिकाउँछ; आफ्नो मात्र

होइन, अरूबारे सोच्न सिकाउँछ; जीवनमा ठूलो मात्र होइन, असल मान्छे बन्न सिकाउँछ। यति भनिसकेपछि, व्यावहारिक परोपकारलाई प्रवर्धन गर्ने प्रयासमा अलिकति नै भए पनि सफलता मिल्यो भने आफ्नो शब्द-खेतीलाई म सार्थक सम्झनेछु। अहिलेलाई भने शब्द-आदर्श यति नै। पहिले, पुष्पा बस्नेतलाई ९८५११०१७४७ मा फोन गरेर उनीप्रति 'व्यावहारिक परोपकार' को हात बढाऔँ।

*कान्तिपुर दैनिक, २०६६ साउन २७*

# एकपल्ट गरेर त हेरौँ

सूचना विभागले उपलब्ध गराएको तथ्याङ्क अनुसार, २०६५ साल फागुन मसान्तसम्म नेपालमा दैनिक, साप्ताहिक, वार्षिक आदि सबै गरेर पाँच हजार दुई सय ५८ पत्रपत्रिका दर्ता भएका छन्। देशभर लगभग एक सय ७५ एफएम रेडियो स्टेसन सञ्चालनमा छन्। त्यसै गरी, झन्डै एक दर्जन टेलिभिजन पनि प्रसारणरत छन्। सञ्चार माध्यमको सञ्चालन आफैँमा व्यवसाय भए पनि सार्वजनिक हित यसको मूल लक्ष्य हो। त्यसैले अदालतमा मानहानि, निजी जीवनमा दखल या अन्य कुनै मुद्दा पर्‍यो भने सञ्चार माध्यमहरूले सबभन्दा पहिले 'सार्वजनिक हित' को प्रश्नलाई नै आफ्नो बचाउको सबभन्दा ठूलो हतियारका रूपमा प्रयोग गर्छन्। जे गरियो त्यो बृहत्तर सार्वजनिक हितका लागि गरिएको थियो भनेर औचित्य दर्शाउन

सकेको खण्डमा सो मुद्दामा सञ्चार माध्यमको जित हुन्छ ।

आफूलाई अप्ठेरो पर्दा सार्वजनिक हितलाई ढाल बनाउने हामी सञ्चारकर्मीहरूले सामान्य अवस्थामा सार्वजनिक हितको मन्त्रलाई कत्तिको आत्मसात् गर्छौं ? प्रश्न गर्नैपर्छ। संसारभर जुन प्रकृतिको पत्रकारिता अभ्यास भैरहेको छ, त्यसबाट सार्वजनिक हितमा ठोस योगदान नपुगेको महशूस गर्नेहरूले विकास पत्रकारिताको अवधारणा अघि सारेका थिए। विकास पत्रकारिताको स्पष्ट उद्देश्य सञ्चार माध्यमलाई प्रयोग गरेर सार्वजनिक हितलाई प्रवर्धन गर्नु, नीतिनिर्माताहरूको ध्यान विकाससँग सम्बन्धित विषयहरूमा आकर्षित गर्नु र सूचनामार्फत मानिसहरूको चेतना र जीवन स्तर उकास्नु थियो। तर, विकास पत्रकारिताले कहिले पनि आफूलाई मूलधारको पत्रकारितामा उभ्याउन सकेन। त्यसले आम पाठकको मनोविज्ञान बुझ्न सकेन र फलत: तिनको ध्यान खिच्न सकेन। आम मनोविज्ञान अनौठो

हुन्छ। सेतो कमिज लाउँदा, 'ओहो, तिमीले त सेतो कमिज लगाएछौ नि' भनेर कसैले भन्दैन; तर त्यो सेतो कमिजमा कालो मसीको एउटा दाग लागेछ भने, 'ओहो, तिम्रो कमिजमा कालो दाग लागेछ नि' भनेर सबैले टिप्पणी गर्छन्। पत्रकारिता सम्भवत: त्यही दागी आम मनोविज्ञानद्वारा निर्देशित छ।

त्यसैले हरेक दिन संसारभरि पत्रपत्रिकामा प्रकाशन हुने र रेडियो तथा टेलिभिजनमा प्रसारण हुने सबै भनेजसो सामग्री बिग्रिएको, भत्किएको, नासिएको, काटेको, मारेको, कुहिएको, गलेको, सडेको आदि विषयहरूमा केन्द्रित हुने गर्छन्। किनभने, गाउँमा कसैले स्कुल बनायो, सामाजिक कार्यका लागि जग्गा दान गऱ्यो या श्रमदान गरेर कुनै समुदायले कुलो र बाटो बनायो भन्ने समाचार छापियो भने अधिकांश पाठकले त्यसको शीर्षकसम्म पढ्लान्; त्योभन्दा तल सम्भवत: पढ्दैपढ्दैनन्। मैले आफैँले पनि त्यस्तो समाचार सबै पढ्न बल गर्नुपर्छ। दोष कसलाई दिनु

! हाम्रो मानसिकता र मनोविज्ञान नै यति पतित भैसक्यो, समाचारमा नकारात्मक तत्त्व र विचारमा नकारात्मकतामाथिको टिप्पणी नभएसम्म त्यसले हाम्रो ध्यान खिच्दैखिच्दैन । त्यही आम मनोविज्ञानलाई बुझेर नै होला, पत्रकारिताका विद्यार्थीहरूलाई शुरूदेखि 'खराब समाचार नै राम्रो समाचार हो' र 'कुकुरले मान्छे टोके समाचार हुँदैन; मान्छेले कुकुर टोके समाचार हुन्छ' भनेर सिकाइएको हुन्छ ।

विकास पत्रकारितालाई मूलधारको पत्रकारितामा रूपान्तरण गर्न नसके पनि सकारात्मक समाचारलाई मूलधारको पत्रकारितामा स्थानै नदिइएको भने होइन । तर माथि उल्लेख गरिएझैं त्यस्तो समाचारलाई सबैले राम्रो भनेर प्रशंसा गरिदिए पनि, कसैले राम्ररी नपढिदिएपछि त्यसको अर्थ नै के रह्यो र ! लन्डन, न्युयोर्क र हङकङबाट *पजटिभ न्युज* (सकारात्मक सन्देश) भन्ने एउटा त्रैमासिक पत्रिका छापिन्छ । अँध्यारैअँध्यारोका बीचमा अलिकति आशाको सञ्चार

गर्न सकारात्मक सन्देश मन त सबैलाई पर्छ; तर, विश्वकै त्यति ठूला तीन शहरबाट एकसाथ प्रकाशित हुँदा पनि सो पत्रिका एक लाख प्रति पनि छापिँदैन। पत्रिकाको स्तर नभएर त्यसो भएको होइन। उज्यालोको चाहना राख्ने तर अँध्यारो-उन्मुख सोच र व्यवहार गर्ने आम मनोविज्ञानका कारण त्यसो भएको हो।

यसै परिप्रेक्ष्यमा नेपालको कुरा गर्दा, गत १५ वर्षमा हाम्रो देशमा असाधारण र उदाहरणीय हिसाबले विकास भएको एउटा क्षेत्र पत्रकारिता हो। त्यसले समुदायहरूलाई ठूलो स्तरमा सूचित बनाइदिएको छ, जसबाट पत्रकारिताको सार्वजनिक हितको धर्म एक हदसम्म निर्वाह भएको छ भनेर तर्क गर्न मिल्ला। तर त्यसपछि दुइटा प्रश्न के आउँछन् भने, के सार्वजनिक हितको लक्ष्यलाई सूचना प्रवाहको घेरामा मात्र सीमित राख्न मिल्छ ? र, दोस्रो, सार्वजनिक हितको दायित्व निर्वाह गर्न मानिसहरूलाई सूचित बनाउनु मात्र पर्याप्त छ या तिनको प्रत्यक्ष हितलाई

नै लक्ष्य बनाउनुपर्छ ? अधिकांश अवस्थामा सूचना केवल ज्ञान हो, त्यसले कसैको हित नै गर्छ भन्ने ग्यारेन्टी छैन। हित नगर्ने ज्ञानले केवल अन्योल र भ्रम सृजना गर्छ। यो समाज र संसार वास्तवमै भन्ने हो भने अहिले अन्योल र भ्रमबाट ग्रस्त छ। जबसम्म पत्रकारिताले सार्वजनिक हितलाई शब्दमा मात्र होइन, कर्ममा रूपान्तरण गर्न सक्दैन, यो पङ्क्तिकारको विचारमा, पत्रकारिताको लक्ष्यबारे संसारभर दिइँदै आएको व्याख्या अत्यन्त साँगुरो, अप्रगतिशील र पुरातनवादी रहिरहनेछ। त्यसैले, सञ्चार माध्यमका हकमा उल्लेख गरिने 'सार्वजनिक हित' पदावलीलाई नै पुनर्परिभाषित गर्नु जरूरी छ।

गत १५ वर्षमा नेपालमा सञ्चार माध्यमहरूको यति विघ्न विकास भयो, मानिसहरू व्यापक रूपमा सूचित र चेतनशील भए। तर, गत १५ वर्षमै यो देशमा धेरै ठूलो राजनीतिक र सामाजिक क्षयीकरण पनि भयो। दुवै क्षेत्र अत्यन्त हिंसात्मक भए। त्यसबाहेक

दुःखलाग्दा अन्य धेरै पक्ष छन्। हालसालै राष्ट्रसङ्घद्वारा प्रस्तुत मानव विकास प्रतिवेदनमा नेपाल दक्षिण एसियामै सबभन्दा तल देखियो। यी सबैका लागि हामी सञ्चारकर्मीहरूले आफूलाई पनि दोषी सम्झिने कि नसम्झिने? बनेका कुराहरूमा चाहिँ सञ्चार माध्यमको ठूलो भूमिका छ भनेर तर्क गर्न हामी अघि सरिहाल्छौँ भने बिग्रेका कुराहरूको सबै दोष चाहिँ राजनीतिमाथि लगाएर उम्कन मिल्दैमिल्दैन।

पत्रकारितामा एउटा अद्वितीय क्षमता छ, जुन अरू कुनै पनि माध्यममा छैन। एकैपल्ट हजारौँ, लाखौँ र समय, परिस्थिति अनुसार करोडौँ मानिससम्म पुग्न सक्ने मात्र होइन, तिनको मनमस्तिष्कलाई प्रभावित गर्न सक्ने क्षमता सञ्चार माध्यमहरूमा छ। त्यति ठूलो शक्ति बोकेको माध्यमलाई सञ्चारकर्मीहरूले संसारभर मूलतः सूचना प्रवाह र वैचारिक मन्थनमा मात्र सीमित राखेका छन्। त्यसको शक्तिलाई सम्भव भएसम्म सीधै सामाजिक कार्यका लागि किन प्रयोग

नगर्ने ? कतिपयले भन्लान्, सञ्चार माध्यमको लक्ष्य कल्याण होइन भनेर। तर, सञ्चार माध्यमको लक्ष्य सबै हो– सूचना र समाचारको प्रवाह हो; राजनीति, अर्थशास्त्र, समाजशास्त्र, इतिहास, वर्तमान, भविष्य सबै हो। तर, सबभन्दा ठूलो लक्ष्य चाहिँ समाज कल्याण नै हुनुपर्ने हो, जुन अन्य लक्ष्यको छायामा परेको छ।

त्यसैले सञ्चार माध्यमहरूले अब कुरा मात्र नगरेर आफैँ काम गर्नतर्फ ध्यान दिनुपर्छ। तर सानोसानो कदम चालेर। एकै चोटि ठूलो कदम चाल्न खोज्यो भने समाजले त्यो पचाउनै सक्दैन। उदाहरणका लागि, देशमा दर्ता भएका पाँच हजारभन्दा बढी पत्रपत्रिकामध्ये पाँच सय वटाले मात्र आफ्ना पाठक भएको क्षेत्रमा, वर्षमा एउटा स्कुलमा सिर्फ एउटा पुस्तकालय निर्माण गरिदिने लक्ष्यका साथ कोष सङ्कलन अभियानको नेतृत्व गर्ने हो भने, वर्षमा पाँच सय वटा विद्यालयले नयाँ पुस्तकालय पाउनेछन्। एउटा एफएम स्टेसनले आफ्ना श्रोताहरू भएको क्षेत्रमा एक वर्षमा

एउटा विद्यालयको छानो छाउन कोष सङ्कलन गरिदिने हो भने वर्षमा एक सय ७५ विद्यालयले नचुहिने छानो पाउनेछन्। त्यस्तो काम गर्ने क्षमता सञ्चार माध्यमहरूमा मात्र छ।

त्यसो गर्दा हरेक सञ्चार माध्यममा 'हामीलाई सहयोग गरिदिनुपर्‍यो' भन्नेहरूको लाइन लाग्नेछ। तर पनि राजनीतिक र अन्य दबावका माझ जटिल निर्णयहरू लिने बानी परेका व्यवस्थापकीय र सम्पादकीय टोलीलाई कसलाई सहयोग गर्ने भनेर निर्णय लिन कुनै गाह्रो पर्दैन। त्यसमाथि, कस्तो कामलाई समर्थन गर्ने भनेर एउटा सानो निर्देशिका बनाए भैहाल्यो। त्यसबाट ती सञ्चार माध्यमहरूको छवि निर्माणमा पनि सघाउ पुग्नेछ र अत्यन्त गरीब र उपेक्षित समुदायको ठूलो हित हुनेछ। सञ्चारकर्मीहरूले संसारभर सञ्चार माध्यमको ठूलो अंश राजनीतिक समाचार र बहसमा खर्च गरेर समाजले के पायो? सूचना र ज्ञान पायो होला; तर, त्यतिले मात्र समाजको सकारात्मक रूपान्तरण

नहुने रहेछ भन्ने हामीले देखिसकेका छौँ। त्यसैले, देशका प्रमुख पत्रपत्रिका, एफएम र टेलिभिजन स्टेसनहरूले आपद्-विपद्को बेलाबाहेक सामान्य अवस्थामा पनि कल्याणकारी अभियानलाई किन जारी नराख्ने ? पत्रपत्रिकाले एउटा सानो ठाउँ र रेडियो तथा टेलिभिजनले अलिकति समय कल्याणकारी कार्यमा सहयोग नै पुऱ्याउने उद्देश्यले किन डिजाइन नगर्ने ? एक चोटि गरेर त हेरौँ। भएन भने भएन। के नै फरक पर्छ र! तर भयो भने, त्यति बेला चाहिँ सञ्चारमाध्यमहरूले साँच्चिकै सार्वजनिक हित गरेको ठहरिनेछ।

*कान्तिपुर दैनिक, २०६६ भदौ १६*

# सिटी सेन्टर र कमलपोखरी

काठमान्डुको केन्द्रमा रहेको कमलपोखरीनजिक अहिले एउटा भव्य सपिङ कम्प्लेक्स – सिटी सेन्टर – बनेको छ। त्यहाँ प्रवेश गरेपछि, भित्र देखिने नेपाली अनुहारहरूबाट मात्र आफू अझै नेपालभित्र रहेको महशूस हुन्छ। नत्र, त्यो सेन्टर कुनै पनि पश्चिमा मुलुकको व्यापारिक केन्द्रभन्दा कम छैन। हरेक दिन म कमलपोखरी र त्यहाँबाट एक मिनेटभन्दा पनि कम दूरीमा रहेको सो सिटी सेन्टर भएर कार्यालय जाने गर्छु। अनि हरेक दिन मलाई लाग्ने गर्छ– त्यत्रो भव्य सिटी सेन्टर बनाउनेहरूले छेवैमा रहेको साह्रै सुन्दर हुन सक्ने त्यो ऐतिहासिक पोखरीलाई कसरी त्यस्तो दुरवस्थामा छोड्न सकेका होलान्! कहाँ गयो होला त्यति ठूलो व्यापार गर्नेहरूमा हुनुपर्ने सामाजिक दायित्व बोधको चेतना ! त्यति सुन्दर सिटी सेन्टर

बनाइसकेपछि कति नै पैसा लाग्थ्यो होला छेवैको त्यो पोखरीलाई सुन्दर बनाउन ! आखिर त्यो पोखरीलाई सुन्दर स्थलका रूपमा विकास गरिदिएको भए, त्यसको छेउमा पार्किङ ठाउँको व्यवस्था गरिदिएको भए, सिटी सेन्टरमा आउने ग्राहकहरूकै सङ्ख्यामा ठूलो वृद्धि हुन्थ्यो होला । छेवैको रमणीय स्थलमा समय बिताउन पनि पाइने, अत्याधुनिक व्यापारिक केन्द्रमा किनमेल गर्न, खान र घुम्न पनि पाइने ! काठमान्डुका धनाढ्यहरूका लागि अहिले आधुनिकता र प्रकृतिको समायोजन भएको त्यस्तो स्थलको ठूलो अभाव छ, जुन सिटी सेन्टर र कमलपोखरी क्षेत्रले पूरा गर्न सक्थ्यो ।

दूषित काठमान्डुको माझमा रहेको कमलपोखरी एउटा अत्यन्त आकर्षक र मनोरम तलाउ हुने सम्भावना राख्छ । त्यहाँ धेरै वर्षअघि जस्तै सुन्दर कमलहरू फुल्न सक्छन् । हाँसहरू पौडिन सक्छन् । र, वरिपरि लगाइएका हरिया रूखहरू र सँगसँगै बनेको बगैँचाको छेउछाउमा राखिएका बेन्चहरूमा

बसेर युवायुवतीहरू लजाउँदै न्यानो भावुकता र संयमित वासना साटासाट गर्न सक्छन् । त्यसै गरी, छोराछोरी विदेशतिर पलायन भएर घरमा एक्लो जिन्दगी बिताइरहेका त्यस क्षेत्रका वृद्धवृद्धाहरू फेरि एकपल्ट ती पुराना दिनका प्रेमालाप, प्रेमावेग र अनावश्यक आवेगका क्षणहरू सम्झँदै र हाँस्दै बिहान-बेलुकी त्यहाँ टहलिन सक्छन् । मान्छे र समाजलाई भन्दा कुकुरलाई बढी माया गर्ने ढोडीहरू पनि कुकुर डोऱ्याउँदै पोखरीवरिपरि मर्निङ वक गर्न सक्छन् ।

तर अफसोच, कमलपोखरी त्यसका लागि अहिले योग्य छैन । पोखरीको वरिपरि फोहोरैफोहोरको डङ्गुर छ । त्यहाँ ढल पनि मिसिन्छ । आफ्नो जिम्मेवारीभित्रको कार्य नभए पनि, छेवैमा भएको कमलपोखरी चौकीका प्रहरीहरू सामाजिक जिम्मेवारीबोधले पोखरी र वरिपरिको क्षेत्र सफा राख्न प्रेरित हुनुपर्ने हो; तर, तिनलाई कुनै चासो भएको देखिँदैन । तिनले बरु प्रहरी चौकीकै लगभग अगिल्तिर बन्न लागेको विशाल भवनका

निर्माण सामग्रीहरू चौकी र पोखरीकै छेउमा थुपार्न दिएका छन्। यी सबैको चासो सरकारलाई हुने भए र सरकारसँग त्यसका लागि स्रोत उपलब्ध भए, सम्भवतः यो आलेख लेख्नैपर्दैनथ्यो। सरकार, प्रहरी चौकी र सिटी सेन्टरका साहूहरूले त केही गरेनन्-गरेनन्, पोखरीवरिपरि त्यत्रात्यत्रा घर बनाएर बसेका स्थानीयवासीलाई समेत बिहान उठ्नेबित्तिकै सुन्दर पोखरी हेर्ने रहर भएको देखिएन।

२०५० सालतिर सो पोखरीको स्थिति पूर्णतः नाजुक भैसकेको थियो। पानी झन्डैझन्डै सुकिसकेको थियो र जलकुम्भी झारले पोखरी ढाकिसकेको थियो। त्यो नाजुक स्थिति देखेपछि सो क्षेत्रका बासिन्दा पत्रकार देवेन्द्र गौतमले सो पोखरी पुनःस्थापित गर्ने अभियान शुरू गरेका थिए। उनको अग्रसरतालाई स्थानीय बासिन्दा, क्लब र अन्य सङ्घसंस्थाले पनि सघाए। त्यसैको परिणामस्वरूप अहिले कमलपोखरीको अस्तित्व बाँकी छ, कम से कम त्यहाँ पानी छ। नत्र,

कमलपोखरी सम्भवत: सुकुम्बासी बस्तीमा परिणत भैसक्ने थियो। तर, कमलपोखरी पानी जमेको पोखरीका रूपमा मात्र सीमित राख्न योग्य ठाउँ हुँदै होइन। त्यो काठमान्डुको 'ओएसिस' हो।

'ओएसिस' त होला, अब के गर्ने त भन्ने प्रश्न उठ्छ। 'सरकारले केही गर्दैन, हामीले गरेर मात्र के हुन्छ ?' भन्ने सरल जवाफ पनि आउला। तर स्थानीय बासिन्दा तथा स्थानीय संस्थाहरूमा कमलपोखरीलाई नमूना क्षेत्रका रूपमा विकास गर्ने दृढ चाहना मात्र हुने हो भने, माथि वर्णन गरिए जस्तो सो पोखरीलाई एउटा लोभलाग्दो केन्द्रमा परिणत गर्न कत्ति पनि गाह्रो छैन। सिर्फ स्थानीय बासिन्दा, खास गरी स्थानीय युवाहरूले त्यसमा अग्रसरता लिनुपर्छ। कत्ति नै लाग्ला सो पोखरीलाई सुन्दर बनाउनका लागि कुनै राम्रो ल्यान्डस्केप डिजाइनरलाई पारिश्रमिक दिन ? सो पोखरीको पानीको स्रोतलाई कायम राख्न, वरिपरि सरसफाइ गर्न, बगैंचा बनाउन, अलिअलि

वृक्षरोपण गर्न, ठाउँठाउँमा बस्ने बेन्च राख्न र अन्य भैपरी आउने खर्च गर्न? पाँच लाख? १० लाख? १५ लाख? २० लाख?

के त्यति पैसा उठाउन सक्ने सामर्थ्य कमलपोखरी क्षेत्रका बासिन्दासँग छैन होला? धेरै स्थानीय बासिन्दाको के कुरा, मन भए सो क्षेत्रका एउटै सम्पन्न व्यक्तिले पनि त्यो काम फत्ते गरिदिन सक्छन्। अन्यथा, के स्थानीय समुदायका प्रतिनिधिहरू गएर सिटी सेन्टरका मालिकहरूसँग अनुरोध गरे भने ती मालिकहरूले सहयोग गर्दिन भन्न सक्लान् र? ती मालिकहरूले व्यवसायीहरूको सामाजिक दायित्व (कर्पोरेट सोसल रेस्पोन्सिबिलिटी) बारे राम्रैसँग बुझेका छन्। कसैले नझकझक्याएको हुनाले मात्र ती बुझ पचाएर बसेका हुन्। भोलि सो पोखरीलाई सिँगारपटार गरिने भयो भने र स्थानीयवासीहरूले त्यहाँ रहेको प्रहरी चौकी अन्यत्र सार्न सरकारलाई अनुरोध गरे भने, के सरकारले त्यसो हुन सक्दैन भन्न सक्ला र? एकपल्ट सो

पोखरीलाई सौन्दर्य प्रदान गरिसकेपछि, त्यसलाई सुन्दर र व्यवस्थित राख्न पैसा खोज्नैपर्दैन। कमलपोखरीभित्र प्रवेश गर्न शुल्क लगाइदियो, भित्र एक-दुई फास्टफुड स्टल राखिदियो, बाहिर सवारी साधन पार्किङलाई सशुल्क बनाइदियो, त्यति गरे पुगिहाल्छ। तर त्यहाँ, पोखरीको स्वामित्व गुठीको हो या वडाको हो, या अरू कसैको भन्नेमा विवाद रहेको बुझिन्छ। उपल्लो राजनीतिक स्तरमा भएका यस्तै अर्थहीन विवादहरूले देश बरबाद भैसक्यो। काठमान्डुको केन्द्रमा एउटा नमूना स्थल हुन सक्ने ठाउँलाई पनि त्यस्तै विवादले दूषित र कुरूप तुल्याइराख्यो भने, त्यो अत्यन्त दु:खद कथा हुनेछ।

कमलपोखरीलाई आखिर टिपेर लान कसैले सक्दैन। त्यो ४६ रोपनी क्षेत्रफलबाट खुम्चिएर अहिले ३४ रोपनीमा सीमित भएको जानकारहरू बताउँछन्। सम्भवत: अब त्योभन्दा बढी खुम्चिने ठाउँ छैन। पोखरी थप खुम्चिएला भनेरै होला, त्यसको उत्तरतर्फ

गाईजात्रे पाराको बार लगाइँदै छ। दक्षिणतर्फ पनि कलाविहीन बार पहिलेदेखि नै ठडिएको छ। पोखरीको सुन्दरतालाई विचार गरेर त्यस्ता बारहरूलाई पनि धेरै कलात्मक बनाउन सकिन्छ। पोखरी कसको भन्ने अनुत्पादक बहसमा समय खर्चनुभन्दा वरिपरिका सबै मिलेर त्यो पोखरी सिँगार्न लाग्ने हो भने त्यसको फाइदा उनीहरूलाई नै हुने हो; कमलपोखरीबाट १० किलोमिटर टाढा बस्ने यो पङ्क्तिकारलाई हुने होइन। तर यति लेखिसकेपछि यो पङ्क्तिकार सो पोखरीको रूप फेर्ने अभियानमा स्थानीयवासीहरू जुटे भने थोरै नै किन नहोस्, सहयोग गर्न भने तयार हुनेछ। यस्ता पोखरीहरू देशभरि कति छन् कति! तिनलाई सुन्दरता प्रदान गर्न सरकारकै भर गरेर बस्नुपर्दैन; स्थानीयवासीहरू स्वयंले गर्न सक्छन्। कैयौँ ठाउँमा गरेका पनि होलान्। कमलपोखरी क्षेत्रमा ज्ञानी-मानी, देश-विदेश घुमेका-देखेका, प्रशस्त धन भएका, थोरै धन अनि थुप्रै ऊर्जा बोकेका धेरै भद्रभलादमी हुनुपर्छ। ती सबै मिले

भने त्यहाँ जे पनि हुन सक्छ। केवल समयसीमा तोकेर काम गर्नुपर्छ; अन्यथा कुरै मात्र हुन्छ, काम हुँदैन। आशा गरौँ, ती सबैले राजनीतिक, धार्मिक, व्यक्तिगत, भौगोलिक र अन्य मतभेदभन्दा माथि उठेर, सहमति, सहकार्य र परिवर्तनको एउटा अतुलनीय नमूना पेश गर्नेछन्। अनि कमलपोखरीलाई 'ओएसिस अफ काठमान्डु' मा परिणत गरिदिनेछन्, जहाँ म जस्ता १० किलोमिटर टाढा बस्नेहरू पनि आएर एक छिन आनन्दले सुस्ताउन सकून्।

*कान्तिपुर दैनिक, २०६६ भदौ ३०*

# पूर्वराजालाई खुला पत्र

सरकार,

मौसुफको दर्जा सामान्य नागरिकमा बदलिइसकेको भए पनि यो पत्रमा मैले मौसुफलाई 'सरकार' र 'हजुर' नै भनेर सम्बोधन गर्ने निर्णय गरेको छु। म सामन्ती भएर या राजतन्त्रवादी भएर त्यसो गर्न खोजेको होइन। त्यसको एउटै कारण छ– विगतका तमाम कमजोरीका अलावा सरकारबाट देशको शान्तिपूर्ण गणतान्त्रिक रूपान्तरणमा निर्वाह गरिबक्सेको भूमिका तथा त्यसपछि कायम राखिबक्सेको इज्जत या 'ग्रेस', जसलाई नेपालको परिप्रेक्ष्यमा असामान्य मान्नुपर्छ। त्यसैले, मुकुट खोसियो भन्दैमा नितान्त व्यक्तिगत रूपमा लेखिएको यो पत्रमा सरकारलाई 'तपाईं' मा झार्न मेरो मनले मानेन। 'सरकार' भनेर सम्बोधन गर्दा कतिपयलाई अनुपयुक्त लाग्न सक्छ। त्यस्तो

विमतिलाई सम्मान गर्न म तयार छु। मैले चाहेको कुरा लेखेपछि, पढ्नेले पनि चाहेको कुरा भन्न पाउनैपर्छ। त्यो नै सच्चा लोकतन्त्र हो। म राजतन्त्रवादी, लोकतन्त्रवादी, समाजवादी, साम्यवादी, अधिनायकवादी केही पनि होइन। म पत्रकारको हिसाबले भूमध्यरेखावादी र वैचारिक हिसाबले कल्याणवादी नागरिक हुँ। जे होस्, सरकारबाट पछिल्लो समयमा आएर प्रस्तुत गरिबक्सेको सम्मानजनक आचरणले मलाई बारम्बार प्रसिद्ध अङ्ग्रेजी कवि रुडयार्ड किप्लिङको अत्यन्त चर्चित इफ शीर्षक कविताको स्मरण गराउँछ, जसमा एक पिताले आफ्नो छोरालाई प्रतिकूल परिस्थितिमा शिर उचा कसरी राख्ने भन्ने सल्लाह दिएका छन्।

सरकारको वर्तमान अवस्था देखेर मलाई दुःख लाग्छ। सुन्दा अपत्यारिलो लाग्ला, तर सरकारबारे सोच्दा म कहिलकाहीँ भावुक हुने गर्छु। त्यति बेला चाहिँ, मलाई हरिभक्त कटुवालले लेखेको *यो जिन्दगी खै के जिन्दगी* कविता याद आउँछ। सरकारलाई

प्रारब्धले दुई पटक राजा बनायो; तर दुवै पटक त्यो अफापसिद्ध भयो। दाइको परिवार र आफन्तहरूको त्यसरी बीभत्स हत्या भयो; जनसङ्ख्याको ठूलो हिस्साले दोष आफैँमाथि लगाइदियो। दुई सय ४० वर्षको राजतन्त्र आफ्नै पालामा, र धेरैको दृष्टिकोणमा ठूलो हदसम्म, आफ्नै हठ, महत्त्वाकाङ्क्षा र कूटनीतिक विफलताका कारणले ढल्यो। दाजुभाइ कोही छैन। भएको एउटा छोरासँगको सम्बन्ध ठीक छैन; त्यसमा पनि, उसको नाम बदनाम छ। बाहिर जाऊँ, धेरै सर्वसाधारणले घृणा गर्छन्। केही बोलूँ, अर्थको अनर्थ लाग्छ। फेरि, बोलेको कुरामा कसैले विश्वास गर्दैगर्दैन। पहिले आफ्ना भनेकाहरू सब आफैँमाथि दोष लगाउँदै टाढाटाढा भैसके। नेपालका राजाहरू कोही ६० वर्षभन्दा बढी बाँचेका छैनन्; आफ्नो उमेर त्योभन्दा बढी भैसक्यो; अब जिन्दगीका पानाहरू कति पल्टिन बाँकी छन्, केही थाहा छैन। सीमाविहीन जिन्दगी जिउन सक्ने भौतिक गच्छे थियो; तर जिन्दगीको

मनोवैज्ञानिक र मानसिक सीमा यसरी साँगुरिएला भन्ने सम्भवतः मौसुफबाट सपनामा पनि सोचिबक्सेको थिएन होला ।

यस्तो अवस्थामा सरकारलाई बाँकी दिन कसरी बिताउने रहर छ, त्यसबारे मलाई ज्ञान हुने कुरा भएन । तर मैले, पहिले राजा वीरेन्द्र र पछि सरकारबाट गद्दी आरोहण गरिबक्सेपछि बारम्बार आफ्नो कलममार्फत गरेको बिन्तीलाई म यहाँ फेरि दोहोऱ्याउन चाहन्छु । आधुनिक युगमा जनताले राजालाई शब्दमा होइन, कर्ममा अनुभूति गर्न चाहन्छ । त्यसमा सरकार पूर्ण रूपमा चुकिबक्स्यो । मलाई अहिले पनि नेपालगन्ज अभिनन्दनको बेला सरकारबाट बक्स भएको भाषणको सम्झना छ, जहाँ सरकारबाट 'जनता' शब्द २७ पटक प्रयोग गरिबक्सेको थियो । अनि जनताको 'भावना र चाहना बुझ्न' विकट पहाडी जिल्लाहरू घुम्न सवारी हुँदा मौसुफबाट ससाना नानीहरूलाई हुकुम हुन्थ्यो– 'राम्रोसँग पढ; स्कुल

जानुपर्छ' आदि-इत्यादि। त्यति बेलै मैले जनताको त्यत्रो माया भए राजा वीरेन्द्रको सम्पत्तिबाट पाँच विकास क्षेत्रमा पाँच वटा भव्य स्कुल स्थापना गर्न किन सकिँदैन भनेर प्रश्न उठाएको थिएँ। आज म फर्किएर पुनः त्यस्तै प्रश्नमा आउँदै छु। त्यति बेला मैले उठाएको कल्याणको प्रश्नमा गरीबहरूको वास्तविक हित र राजतन्त्रको भविष्य गाँसिएको थियो भने, मैले अहिले त्यही सन्दर्भ उठाउँदा, त्यसमा गरीबहरूको हित र सरकारलाई बाँकी जीवनमा आध्यात्मिक शान्ति मिलोस् भन्ने चाहना जोडिएको छ।

सरकारसँग चल-अचल गरेर अर्बौं रुपैयाँको सम्पत्ति छ। सरकारको उमेर र अवस्था दुवैका कारण सरकारबाट अब बाँकी जीवनमा करोडौं खर्च हुने गरी मोजमस्ती गर्ने अवस्था रहेन। गर्न उचित पनि हुँदैन। सम्भवतः सरकारले आफ्नो सारा सम्पत्ति आफ्ना छोराछोरी र नातिनातिनालाई सुम्पिएर जाने विचार गरिबक्सेको होला। त्यसो गर्नु महाभूल हुनेछ।

सम्पत्तिको कुनै सीमा छैन। सरकारका छोराछोरीले जति पाइसके, राम्ररी व्यवस्था गर्न सके भने त्यो नै उनीहरूका लागि काफी छ। अहिले उनीहरूले जे पाएका छन्, त्यसमा उभिएर अरू उपलब्धि हासिल गर्न नसक्नेका लागि थप सम्पत्ति दिनु महामूर्ख्याइँ हुनेछ। सरकारलाई भोलि अमर बनाउने तिनले होइन, आम नेपालीले हो। दोस्रो कुरा, अलिकति मानवीय चेतना बोकेका अति धनाढ्यहरू भएभरको सम्पत्ति आफ्ना सन्तानलाई सुम्पेर मर्न छोडिसके। उनीहरूले सम्पत्तिको थोरै भाग सन्तानका लागि र धेरै चाहिँ कल्याणका लागि छोड्ने गरेका छन्। सरकारबाट मर्जी होला, "अन्य देशका राजा र राजपरिवारसँग तुलना गर्दा, मसँग के सम्पत्ति छ र, रवीन्द्र ?" तर, यो एउटा गरीबतम देश हो, जहाँ सरकारसँग जे छ त्यसलाई अत्यधिक मान्नुपर्छ। मानवीय चेतनाको हकमा कुरा गर्दा, सरकारले मानवीयताको बिगुल धेरै फुकिबक्सियो, तर व्यवहारमा

सर्वसाधारणले त्यसको अनुभव कहिले पनि गर्न पाएनन्। सरकारबाट गएको आफ्नो जन्मदिनको अवसरमा मर्जी भयो, "परिवर्तित परिवेशमा पनि देश तथा देशवासी प्यारा दाजुभाइ र दिदीबहिनीको स्थितिमा सुधार आउन नसकेकोमा म अत्यन्त उद्विग्न, अत्यन्त चिन्तित र अत्यन्त मर्माहत छु।" देश र देशवासीको चिन्ताले सरकार त्यसरी मर्माहत होइबक्सिन्छ भने त्यो शब्दमा मात्र होइन, कर्ममा पनि प्रतिविम्बित हुनुपर्‍यो, सरकार। अनि पो जनताले श्रद्धा र विश्वास गर्छ। एकपल्ट, खोक्रो विज्ञप्तिको होइन, कल्याणको बाटो हिँडिबक्सियोस् त, सरकारप्रति मानिसहरूको श्रद्धा कति बढ्छ, अनि देखिबक्सेला। कल्याणभन्दा ठूलो अध्यात्मवाद यो संसारमा अर्को हुनै सक्दैन। बाँकी सब मिथ्या हो, जसमा हामी सब फसेका छौँ। तर एउटा कुरा भनिहालूँ, बिग्रिएको राजनीतिको धमिलो पोखरीमा राष्ट्रवादको बल्छी फ्याँकेर गुमेको मुकुट पुन:स्थापित गर्नेतिर ध्यान केन्द्रित गरिबक्सियो

भने, सरकारको अलिकति भए पनि सुध्रिरहेको छवि पुनः भस्म हुनेछ। राजनीतिज्ञहरूको कुबुद्धि तन्किँदै गयो भने राजतन्त्र आफैँ फर्किनेछ। तर, सरकार स्वयंबाट त्यसका लागि तानाबाना बुन्नु देश र सरकार दुवैका लागि हितकर हुनेछैन।

यति लामो भूमिका बाँधेर, मैले सरकारलाई गर्न खोजेको बिन्ती एउटै मात्र हो– सरकारको जीवनमा जेजस्ता परिस्थितिहरू आइलागे, त्यसका कारण सरकारले अर्बौंको सम्पत्ति निर्मल निवासको विशाल परिसरमा अर्थहीन ढङ्गले पुरेर देहत्याग गरिबक्सियो भने त्यसबाट न सरकारको आत्मालाई चिरशान्ति मिल्नेछ, न त नेपाली जनताले सरकारको जयजयकार नै गर्नेछ। सरकारबाट बाँकी जीवन, र सम्भव भएसम्मको वैभव, कल्याणको काममा लगाइबक्सिए हुन्थ्यो भन्ने मेरो विनम्र आग्रह हो। पहिले मैले राजा वीरेन्द्रको परिवारको सम्पत्तिबाट पाँच विकास क्षेत्रमा भव्य स्कुल निर्माण गर्न आग्रह गरेको थिएँ, जसको सुनुवाइ

भएन। यस पटक म सरकारकै व्यक्तिगत सम्पत्तिबाट त्यस्तो काम होस् भन्ने आग्रह गर्न चाहन्छु। यो पटक पनि मेरो आग्रहको सुनुवाइ होला भन्ने विश्वास त छैन, तर पनि झिनो आशा नभएको चाहिँ होइन। तर सरकार पुरातनवादी धर्मकर्ममा अत्यन्त आसक्त व्यक्ति हुनाले, सरकारलाई स्कुल-सिस्कुलमा त्यति चाख नहुन पनि सक्छ। त्यसो हो भने, मेरो अर्को आग्रह छ। नेपाल सरकारले वाग्मती शुद्धीकरण अभियानका लागि १५ अर्ब रुपैयाँको एउटा कार्ययोजना बनाएको छ। सो रकम जुटाउन नेपाल सरकारलाई सहज हुनेछैन। सरकारबाट सो अभियानको एक हिस्सा या वाग्मती घाट क्षेत्र मात्र सुधार गर्ने जिम्मा लिइबक्सिए विश्वभरका हिन्दूहरूले जुनीजुनीसम्म सरकारको गाथा गाउने थिए। सरकारलाई त्योभन्दा बढी गरूँ जस्तो लाग्यो भने वाग्मतीको आसपासमा निर्माण गर्न खोजिएको युएन पार्कलाई पनि सहयोग गर्न सकिबक्सिन्छ। केही समयअघि प्रकाशित एक

रिपोर्ट अनुसार, सो पार्क निर्माणका लागि ३५ करोड रुपैयाँ लाग्ने अनुमान गरिएको छ। सो पार्क निर्माणको सम्पूर्ण जिम्मा मौसुफ सरकारबाट लिइबक्सिए धेरै कट्टर गणतन्त्रवादी पनि काठमान्डुको मुटुमा निर्माण हुने त्यो सुन्दर पार्क हेरेर सरकारलाई सम्झँदै एक पटक भावुक हुन बाध्य हुने थिए। यो सुझावप्रति सरकार अनपेक्षित रूपमा सकारात्मक भइहालिबक्सियो भने, सरकारबाट विगतमा वाग्मती शुद्धीकरणलाई सघाउन चाहने एक सम्भाव्य दाताले 'मैले सहयोग गर्ने भए वाग्मतीको पूरै घाट मेरी आमाको नाममा नामकरण गर्नुपर्छ' भनेर राखे जस्तो निकृष्ट शर्त चाहिँ राखिबक्सनेछैन भन्ने आशा लिएको छु।

कति बेला 'ऊ' आउने हो, टप्प टिपेर लाने हो, थाहा छैन। सामान्यतया मानिसहरूलाई लोभ र मोहको निरर्थकता घाटमा दन्किएको चिताले बोसो पगालेको र गिदी पड्काएको देखेपछि मात्र महशूस हुन्छ,जुन अनुभूति अत्यन्त क्षणिक हुने गर्छ। तर

जसलाई घाटमा जाँदा होइन, घरमै बस्दा पनि त्यस्तो चेतना आउँछ, तिनले नै समाज रूपान्तरणका कामहरू गर्न सक्छन्। राम्रो कामलाई थाती राखेर कमाएको धनको न जीवनकालमै, न त जीवनपर्यन्त कुनै अर्थ रहन्छ। त्यस्तो काम गर्नका लागि सरकारसँग अब धेरै समय बाँकी छैन। सार्वजनिक रूपमा यति बिन्ती गरिहालेँ। बाँकी सरकारको जो इच्छा !

शुभेच्छुक,
रवीन्द्र मिश्र

*नागरिक दैनिक, २०६६ भदौ ३१*

# तपशिलमा अल्झिएको देश

*पूर्वराजालाई खुला पत्र* प्रकाशन भएपछि त्यसप्रति व्यापक प्रतिक्रियाहरू जनाइए। मलाई पठाइएका इमेल, फेसबुक अनि यस पत्रिकाको वेबसाइटमा व्यक्त सबै भनेजसो प्रतिक्रिया अत्यन्त सकारात्मक रहे। तर, छापिएको पर्सिपल्ट *नागरिक* दैनिकमा सो आलेखबारे छापिएका प्रतिक्रियाहरू मूल रूपमा अत्यन्त आलोचनात्मक रहे। आलेखको मूल भावभन्दा त्यसमा प्रयुक्त शब्दहरू र पूर्वराजालाई सो पत्र लेखेकामा आक्रोश पोखिएको थियो। ती प्रतिक्रियाहरूले आलेखबारे व्यक्त आम धारणालाई प्रतिनिधित्व नगरे पनि तिनलाई नागरिक दैनिकले दिएको महत्त्व र तिनमा व्यक्त विचारहरूले हाम्रो समाजको आम चरित्रलाई ठूलो हदसम्म प्रतिविम्बित गर्छन्। त्यसैले यो आलेख लेख्नु उपयुक्त सम्झेको छु।

हाम्रो समाज अधिकांश स्थितिमा तपशिलका विषयहरूमा रुमलिँदै आएको छ। हाम्रा लागि सारभन्दा शब्दहरू महत्त्वपूर्ण हुने गरेका छन्। त्यसैले विकास होइन, हामीलाई दस्तावेज स्तरीय चाहिएको छ। मानौँ स्तरीय दस्तावेज तयार गरेपछि विकास आफैँ हुन्छ। चर्को मूल्यवृद्धिका कारण र कतै खाद्यान्न अभावका कारण कैयौँ नेपाली यो दशैँ मनाउन नसक्ने अवस्थामा छन्। तर काठमान्डुमा देश चलाउनेहरूमध्ये कसैको बहस राष्ट्रिय झन्डा फेर्नमा, कसैको ध्यान जसरी पनि सरकार जोगाउनेमा, कसैको ध्येय छोरीलाई उपप्रधानमन्त्री बनाउनेमा र कसैको लक्ष्य सरकार फेर्नमा केन्द्रित छ। सरकार फेरिएपछि, सरकारमा नगएकाहरूको ध्यान फेरि सरकार फेर्नमै केन्द्रित हुनेछ। सबैको लक्ष्य देश बनाउनेमा होइन, सरकार बनाउनेमै सीमित छ।

हामी ठोस कामभन्दा तातो बहस मन पराउँछौँ। हामी परिणामभन्दा पदलाई महत्त्व दिन्छौँ। हाम्रो

लक्ष्य सधैँ पद र पैसा भए। त्यसैले स्कुल, विश्वविद्यालय र वृद्धाश्रम निर्माण गर्न करोडौँको सम्पत्ति दान गर्ने दाङका टेकनाथ गौतमलाई धेरै कम नेपालीले चिन्छन्; तर, पद र पैसा भएका तर समाजका लागि योगदान नगरेका कैयौँ ठालुको भने देशभरि राम्रै परिचय छ। राजधानी काठमान्डुबाट ३०-४० किलोमिटर मात्र बाहिर निस्किएपछि थाहा हुन्छ, यो देशका अधिकांश भाग आजभन्दा दुई सय ५० वर्षअगाडि जस्ता थिए, अहिले पनि त्यस्तै छन् भन्ने कुरा। त्यसमा राजा र राजनीतिज्ञहरूको मात्र होइन, हामी जस्ता अलिकति लेख्नपढ्न जानेकाहरूको मानसिकताको पनि ठूलो दोष छ। हामीले राम्रोलाई प्रवर्धन गर्न सधैँ कन्जुस्याइँ गर्‍यौँ। मन नपरेकाहरू सबैलाई दानव बनायौँ। परिस्थितिहरूलाई सदा उल्टो आँखा र उल्टो विवेकले हेर्‍यौँ। हामी यसरी बहकियौँ, पट्टी लगाएको घोडाभन्दा कम भएनौँ। परिस्थितिहरूलाई सम्पूर्णतामा होइन, सदा आंशिक ढङ्गबाट व्याख्या गर्‍यौँ। असल र

खराब, प्रकृतिको अकाट्य नियम हो; त्यो प्रचण्डदेखि, गिरिजाप्रसाद कोइराला, माधवकुमार नेपाल, उपेन्द्र यादव र पूर्वराजासम्म सबैमा लागू हुन्छ भन्ने सत्यलाई हामीले सधैँ इन्कार गर्‍यौँ। फलत: सधैँ नकारात्मकतालाई मात्र हेर्‍यौँ, जसका कारण समाजमा घृणा यति बढ्यो, हामीले आफू र आफ्ना पक्षधरबाहेक अरू सबलाई दुश्मन सम्झियौँ। घृणाले घृणा यति बढाइदियो, हाम्रै आफन्त, साथीभाइ र छिमेकीहरू त्यसको शिकार भैसके; समाज, सिङ्गो देश त्यसको शिकार भैसक्यो तैपनि हामीले छि:छि: र दुर्दुर्को संस्कार छोडेनौँ। नराम्रोको आलोचना गर्नु एउटा कुरा हो; तर आलोचित व्यक्तिलाई सदाका लागि दैत्य बनाउनु र उसलाई राम्रो कामका लागि प्रेरितै नगर्नु सङ्कीर्णता हो।

अर्बपति पूर्वराजालाई लेखेको पत्र त्यही सङ्कीर्णताबाट अलिकति माथि उठ्ने प्रयास थियो। त्यस्ता पत्रहरू मैले अन्य व्यक्तिलाई पनि सार्वजनिक र व्यक्तिगत

रूपमा लेखेको छु र कतिबाट सकारात्मक परिणामहरू पनि आएका छन्। त्यसबाट मलाई होइन, सानै स्तरमा किन नहोस्, विकट गाउँका गरीबहरूलाई सहयोग पुगेको छ। यस पटकको मेरो पत्रको मूल उद्देश्य, पूर्वराजाले बृहत् कल्याणकारी कामहरू गरून्, जसले उनलाई बाँकी जीवनमा आध्यात्मिक शान्ति मिलोस् र हामी जस्ता शब्दमा तर्क गरेर शान देखाउनेहरू होइन, छोराछोरीलाई स्कुलसम्म पठाउन नसक्नेहरूलाई मदत पुगोस् भन्ने थियो। पूर्वराजाको रुचि त्यसमा नभए, वाग्मती घाट सफाइ र वाग्मती पार्क निर्माण जस्ता धार्मिक कल्याणको काम होस् भन्ने चाहना थियो। तर अफसोच, लेख्ने आलोचकहरूका आँखा सारमा होइन, 'सरकार,' 'हजुर' र 'बक्स्योस्' जस्ता शब्दहरूमा केन्द्रित भए। त्यति मात्र होइन, उनीहरूले आलेखसँग असम्बन्धित मेरो जीवनका अन्य पाटालाई समेत आलोचनामा मुछेका छन्, जुन सम्पादकीय दृष्टिकोणबाट पनि छाप्नु अनुपयुक्त हुन जान्थ्यो। तर

त्यो पत्रलेखक र सम्पादकहरूको मात्र दोष होइन, नकारात्मकतामुखी हाम्रो समष्टिगत समाजको प्रतिविम्ब हो। पत्रलेखकहरूले मेरो आलेखमा राजतन्त्र जगाउने षड्यन्त्र देखे, जबकि मैले आलेखभरि नै पूर्वराजाको भद्र तर कडा आलोचना गर्दै 'बिग्रिएको राजनीतिको धमिलो पोखरीमा राष्ट्रवादको बल्छी फ्याँकेर गुमेको मुकुट पुनःस्थापित गर्नतिर ध्यान केन्द्रित' नगर्न सुझाव दिएको छु। 'राजनीतिज्ञहरूको कुबुद्धि तन्किँदै गयो भने राजतन्त्र आफैँ फर्किनेछ' भन्ने कुरातर्फ त कतिपय नेताले स्वयं अनौपचारिक कुराकानीमा मात्र होइन, सार्वजनिक भाषणहरूमै समेत सङ्केत गर्ने गरेका छन्।

यो आलेखमा ऊँ, तेस्रो व्यक्तिका रूपमा उल्लेख गर्दा, पूर्वराजा या राष्ट्रपति कसैलाई पनि 'उनी' भन्नु अपमान हुँदैन। तर जसरी साह्रै घृणा गरे पनि घुस्याहा नेतालाई प्रत्यक्ष भेटमा या उनलाई सीधै लेखिएको पत्रमा 'तिमी' भनेर सम्बोधन गर्नु अनुपयुक्त

हुन्छ, त्यसै गरी मेरो दृष्टिले हाम्रो भाषाका परम्परागत तहहरूका कारण आफ्नै देशका पूर्वराजालाई लेखिएको पत्रमा उनलाई ‘तपाईं’ भनेर सम्बोधन गर्नु अनुपयुक्त हुन्छ । विदेशी राजदूतसम्मलाई हजुरको गजुर लगाउँदा लाज नमान्ने नेताहरू भएको देशमा, विगतमा गल्ती गरे भन्दैमा, प्रतिकारबिना गद्दी छोडेका तर देश छोडेर जान अस्वीकार गरेका व्यक्तिलाई कल्याणकारी कामका लागि फकाउन खोज्दा ‘हजुर’ भन्नु अनुपयुक्त हुनै सक्दैन । तर, त्यसो भन्नु गलत हुन्छ भनेर विमति राख्नेहरूको धारणालाई म सम्मान गर्छु । कुनै पनि भाषामा हाम्रामा जस्ता तहहरू नभएकै राम्रो हो भन्नेमा कुनै शङ्का छैन । तर, त्यस्ता परिवर्तनहरू आउन समय लाग्छ ।

म त भन्छु, पूर्वराजाले, कुनै पनि धनाढ्य व्यापारी या राजनीतिज्ञले गरीबहरूका लागि पाँच विकास क्षेत्रमा बूढानीलकण्ठ स्तरका पाँच स्कुल स्थापना गरिदिने अग्रसरता लिन्छन् भने म तिनलाई ‘हजुर’

भन्नुको त के कुरा, देउतै मानेर पूजा गर्न तयार हुनेछु। त्यस्ता नेपालीहरू सय जना निस्किए भने यो देश आफैँ बन्छ। तिनले विगतमा केके गल्ती गरे भनेर केलाउने पक्षमा म छैन। चोरलाई पनि सकारात्मक रूपले प्रेरित गरेर सुमार्गमा डोऱ्याउन सक्नु चाहिँ हाम्रो क्षमता हुन्छ। चोरलाई सदा चोरकै दर्जामा राख्ने हो भने समाजलाई नै घाटा हुन्छ। विगतको छिद्रान्वेषण गर्ने हो भने त पूर्वराजा ज्ञानेन्द्र मात्र होइन, कतिपय भ्रष्ट प्रधानमन्त्री र मन्त्री सबलाई जेल हाले हुन्छ। धनाढ्य समाजसेवीहरूले बनाइदिएका कैयौँ अस्पतालमा उपचार गराउनै नगए हुन्छ। किनभने, धन कमाउने सिलसिलामा तिनले कर छलेको र कैयौँलाई घूस खुवाएको हुनुपर्छ। त्यति मात्र होइन, हामीले दिनदिनै पढ्ने कैयौँ पत्रपत्रिका पनि नपढे हुन्छ। किनभने, गत वर्ष मात्र देशका वरिष्ठ सम्पादक तथा प्रकाशक कुन्द दीक्षितले भन्थे, “तपाईं विश्वास गर्नोस् या नगर्नोस्, यो देशमा

एउटाबाहेक कुनै पनि पत्रिका नाफामा छैन।" भनेपछि, एक दिन होइन, दुई दिन होइन, वर्षौंसम्म घाटा खाएर यति ठूलठूला, यति धेरै पत्रिका यो देशमा कसरी चलिरहेका छन् भन्ने प्रश्न उठ्छ।

हामी नकारात्मकतामा यति चुर्लुम्म डुबेका छौँ, कुरा गरेर साध्यै छैन। हरेकको अभिप्रायप्रति हामी यति सशङ्कित छौँ, हाम्रो दिमागले विमति राख्नेहरू सबैलाई स्वार्थी, पश्चगमनकारी, प्रतिक्रियावादी, राष्ट्रघातीबाहेक केही देख्दैन। दुःखलाग्दो कुरा त के हो भने, नकारात्मकतालाई रुचाउने आम मनोविज्ञानले सञ्चार माध्यमहरूलाई पनि गाँजेको छ। त्यसैको परिणाम हो, *नागरिक* दैनिकको वेबसाइटमा त्यति धेरै प्रशंसापूर्ण प्रतिक्रिया हुँदाहुँदै, आलेखको मूल भावसँग मेलै नखाने विषयका पत्रहरू चाहिँ छाप्नका लागि चयन गरियो। किनभने, सम्पादकहरूको निष्कर्ष त्यस्ता प्रतिक्रियाहरूले पाठकको ध्यान मजाले आकर्षित गर्छन् भन्ने रहेको हुनुपर्छ।

यो नकारात्मक मानसिकतालाई, सारमा होइन शब्दमा रुमलिएको सोचलाई, तत्त्वभन्दा तपशिलकेन्द्रित राजनीतिलाई हामीले बदल्न प्रयास गर्नैपर्छ। नत्र भने हाम्रो देश र हाम्रो समाजमा न कहिले शान्ति आउनेछ, न गणतन्त्र संस्थागत हुनेछ। अनि हामी तर्कसङ्गत आलोचना होइन, सधैँ एकले अर्कोलाई गाली गरेर, एकले अर्कोको आङको छारो उडाएर हिलो र फोहोरमा घस्रिरहनेछौँ। देश चाहिँ जहाँको त्यहीँ रहिरहनेछ, या अझै अधोगति लाग्नेछ।

*नागरिक दैनिक, २०६६ असोज ७*

# परम्परा सुधार्ने काइदा र मृत्यु-इच्छा

*नेपाल* साप्ताहिकको २०६६ सालको दशौँ अङ्क ( असोज १६, आइतबार) हेर्ने मौका ढिलो जुऱ्यो। सो अङ्कमा यो पङ्क्तिकारको दृष्टिले एउटा गज्जबको समाचार छापिएको रहेछ। तर त्यसले आम पाठकको ध्यानै नखिच्ने गरी सङ्क्षिप्त समाचारहरूका माझमा सानो स्थान पाएको थियो। इलामबाट विप्लव भट्टराईले लेखेको समाचार 'परम्परा सुधार्ने काइदा' को बेहोरा छोटो र बढीभन्दा बढी पाठकसम्म पुऱ्याउनैपर्ने खालको महशूस भएकाले म त्यसलाई यहाँ जस्ताको त्यस्तै उद्धृत गर्दै छु।

"मृत्यु भएको बाह्रौँ दिनमा हिन्दू संस्कार अनुसार पुरोहितलाई दान गर्न गाई-बाच्छीको ताँती लगाउनुपर्नेमा बरबोटे-८ की गायत्री भट्टराईले आँगनभरि ५० विद्यार्थी भेला पारिन्। खानपिन गराएपछि सबैलाई कापी र

बलपेन बाँडिन् । सेता कपडामा बेरिएकी घरमूलीले बरबोटे प्राविका लागि १० हजार रुपैयाँको अक्षय कोष स्थापना गर्ने र माईस्थानमा सञ्चालित वेद पाठशालालाई पाँच हजार रुपैयाँ सहयोग गर्ने घोषणा गरिन् ।

"गायत्रीका बाबु डिल्लीराम भट्टराईको निधन भएको बाह्रौँ पुण्यतिथिका दिनमा यो सब भइरहेको थियो । उनले परम्परा र धार्मिक मान्यतामा समयसापेक्ष सुधारका लागि यसो गरेको बताइन् । भनिन्, 'प्रत्येक वर्ष आउने श्राद्धमा कोषमा रकम थप्दै जानेछौँ ।' सामाजिक परिवर्तनका लागि परम्परागत काजकिरिया नगरेकामा उनीहरूले आलोचना पनि खेप्नुपर्‍यो । उनीहरूले सघाउनी लिएर आएका दलित, जनजातिलाई पनि निराश पारेनन् । ब्राह्मण परम्परा अनुसार शुभेच्छुकले दिएको रकम पनि जम्मा गरेर विद्यालयलाई उपलब्ध गराइयो ।"

गायत्री भट्टराईले जे गरिन्, त्यो आम सोच र समाज परिवर्तनकारी कदम थियो । पत्रिकामा त्यसले

भिन्न प्रकारको प्रस्तुति पाउनुपर्थ्यो भन्ने यो पङ्क्तिकारको धारणा हो। तर जति स्थान पायो त्यसलाई पनि धन्य भन्नुपर्छ। किनभने, त्यस्ता सकारात्मक समाचारहरू पाठक र पत्रकार दुवैका लागि विरलै समाचार बन्ने गर्छन्। परम्परागत काजकिरिया नगरेकामा गायत्री भट्टराईले कतिपयबाट आलोचना खेप्नुपरे जस्तै भट्टराईको कदमलाई सकारात्मक भन्दै सिङ्गो आलेख नै तयार पार्दा निश्चय पनि हिन्दू धर्मका कतिपय परम्परागत अनुयायीलाई चित्त नबुझ्न सक्छ। तर नेपालमा अभ्यास गरिने हिन्दू धर्मको सबभन्दा ठूलो शक्ति नै लचकता र नरमपना हो, जुन छिमेकी देश भारतमा त्यति देखिँदैन।

सारमा भन्ने हो भने, धर्म भनेकै कल्याण हो। तर दुर्भाग्यवश, धर्मलाई संसारभर कल्याणभन्दा प्रक्रिया र परम्परासँग बढी जोड्ने गरिन्छ। परिणामस्वरूप, मन्दिर जाने अधिकांश भक्तजन पूजा-सर्जामका लागि धेरै खर्च गर्न हिचकिचाउँदैनन्; तर मन्दिरबाहिर

माग्न बसेका असहाय र वृद्धवृद्धाहरूका लागि भने १०-१० पैसाका खुजुरा हुर्‍याउँछन्। पूजा-सर्जाममा गर्ने खर्च असहाय र वृद्धवृद्धाहरूलाई बाँडिदिने र मन्दिरमा चाहिँ भगवान्का सामु श्रद्धालु शिर मात्र झुकाउने हो भने भगवान्ले चित्त दुखाउलान् र ! आफ्नो शिरमा ओइलिएर जाने फूलमाला अनि कुहिएर जाने टीका र प्रसाद नपाए पनि दीनदु:खीहरूको पेट भरिएको देख्दा भगवान् खुशी हुँदैनन् होला र !

त्यसैले जन्मदिनमा बिहानभरि पूजाआजामा बिताउनेहरूभन्दा गरीब र असहायहरूलाई खुवाउने, अनि काठमान्डुका पाँचतारे होटेलमा बर्थ डे पार्टी गर्नेहरूभन्दा त्यसमा लाग्ने खर्च अनाथालयलाई दान गर्नेहरूलाई बढी धर्म लाग्छ भन्ने यो पङ्क्तिकारको मान्यता हो। तर यसको अर्थ पूजाआजा, बर्थ डे पार्टी गर्नै हुँदैन भन्न खोजेको चाहिँ अवश्य होइन। पूजाआजा र बर्थ डे पार्टीमा धेरै खर्च गर्न सक्नेहरूले सत्कर्मलाई पनि साथसाथै नसम्झिने हो भने, तिनलाई

धर्म होइन बरु पाप लाग्छ भन्न मात्र खोजिएको हो।

यो पङ्क्तिकार संलग्न कल्याणकारी कामहरूका लागि धेरै सामान्य नेपालीले सघाएका छन्। तर, सन्दर्भ मिल्दोजुल्दो भएकाले एउटा सहयोगबारे भने यहाँ उल्लेख गर्न उपयुक्त सम्झिएको छु। पत्रकार ध्रुवहरि अधिकारी उनका अधिकांश सहधर्मी जस्तै मध्यमवर्गीय पत्रकार हुन्। एक दिन उनले १० हजार रुपैयाँको चेक लेराएर मेरो हातमा थमाइदिए र भने, "यो मेरा पिता नन्दनहरि उपाध्याय 'ओखलढुङ्गे' को सम्झनामा।" म त्यतिमै औधि खुशी भैसकेको थिएँ; तर त्यसको केही दिनपछि एक मित्रबाट थाहा पाएँ, अधिकारीले गरीबगुरुबालाई सस्तो र सुलभ शिक्षा उपलब्ध गराउने काठमान्डुको जोरपाटीस्थित समता स्कुललाई पनि त्यसै गरी एक लाख रुपैयाँ दान गरेका रहेछन्। मेरो व्यक्तिगत परिचय नभएका र कतै उल्लेख नगरिएका अन्य कैयौँ नेपाली होलान्, जसले अधिकारीले जस्तै परलोक भएका आफन्तहरूको

सम्झनामा कैयौँ सत्कार्य गरेको हुनुपर्छ। केही धनाढ्य नेपाली व्यापारीले आफन्तहरूको सम्झनामा ठूलठूला कल्याणकारी कामहरू पनि गरेका छन्। कतिपयलाई आफ्नै नाममा पनि कल्याणकारी कामहरू गर्ने इच्छा हुन्छ। धेरैले त्यस्तो कामलाई 'नामका लागि गऱ्यो' भनेर व्यङ्ग्य गर्ने गर्छन्। अरूले नामका लागि राम्रो काम गरेको देखेर ईर्ष्या लाग्छ भने आफूले पनि त्यसै गरे भैहाल्यो। हालै वरिष्ठ जलस्रोतविद् रत्नसंसार श्रेष्ठले एउटा भिन्नै प्रसङ्गमा यो पङ्क्तिकारलाई एउटा इमेल लेख्दा उल्लेख गरेका थिए, उनलाई आफ्नो सम्पत्तिबाट आफ्नै नाममा एउटा स्तरीय शैक्षिक संस्था खोल्ने रहर छ। "त्यसो गर्दा, मलाई कतिपयले घमन्डी भन्लान्, तर म आफ्नो नाममै त्यस्तो संस्था खोल्न चाहन्छु, ताकि अरूले ईर्ष्याकै कारणले भए पनि त्यस्तै काम गरून्।" जवाफमा मैले उनलाई लेखेँ, "राम्रो काम हुन्छ भने त्यसमा तपाईंको नाम रहेर केही फरक पर्दैन। राम्रो कामले

मात्र समाजमा राम्रो तरङ्ग सृजना गर्न सक्छ।" श्रेष्ठले व्यापारिक उद्देश्यका लागि त्यस्तो संस्था खोल्न खोजेका होइनन् भन्ने यो पङ्क्तिकारको बुझाइ हो।

राम्रो कामले मात्र समाजमा राम्रो तरङ्ग सृजना गर्न सक्छ भन्ने कुराको अर्को ज्वलन्त उदाहरण, केही वर्षअघि चितवन र नवलपरासीका महिलाहरूले विधवाहरूले पनि रातो पहिरन लगाउन सक्छन् भनी शुरू गरेको अभियान हो। सो अभियानमा अत्यन्त पुरातनवादी र परम्परागत ठानिन सक्ने वृद्धाहरूले पनि आफ्ना विधवा बुहारीहरूलाई रातो पहिऱ्याइदिए। कति विधवाहरूले पुनर्विवाह पनि गरे। समाज सुधार्ने त्यो सकारात्मक अभियानको प्रभाव अन्य जिल्लामा पनि परेको थियो। तर, अहिले सो अभियान सुस्ताएको छ। त्यसलाई फेरि महिलाहरूले नै अगाडि बढाउनेछन् भन्ने आशा गरौँ।

माथि चर्चा गरिएका प्रसङ्गहरूको पृष्ठभूमि र गायत्री भट्टराईको काम र सोचबारेको समाचार

पढेपछि लामो समयदेखि यो पङ्क्तिकारले आफ्नी श्रीमतीलाई भन्दै आएको एउटा प्रसङ्गलाई यहाँ उठाउन प्रेरणा मिलेको छ। धेरैले तरुनै छँदा मृत्युको चर्चा गर्न अनुपयुक्त सम्झेलान्। तर, मृत्यु आखिर मृत्यु नै हो; त्यो जति बेला पनि आउन सक्छ। त्यसैले मृत्युको सामना गर्न मानसिक रूपमा सदा तयार रहनु र त्यससँग सम्बन्धित व्यावहारिक र आध्यात्मिक पक्षहरूबारे स्पष्ट रहनु बुद्धिमत्तापूर्ण हुन्छ। यसै सोचका कारण मैले आफ्नी श्रीमतीलाई दुइटा अनुरोध जोडदार रूपमा गरेको छु।

पहिलो, म पहिले मरेँ भने म मरेपछि कुनै हालतमा सेतो लगाएर, दु:खमनाउ गरेर नबस्नू। रातो लगाउन नछोड्नू। मरण जीवनको सामान्य नियम हो, त्यसलाई त्यही रूपमा ग्रहण गर्नू। र, म उमेर छँदै मरेँ भने, तिम्रो एक्लो जीवन अत्यन्त पीडादायी हुन सक्छ, त्यसैले कुरा बुझ्ने, मन मिल्ने साथी भेटेमा पुनर्विवाह गर्नू। कसले के भन्ला भनेर नसोच्नू।

दोस्रो, मृत्युपर्यन्त आफ्ना अङ्ग र शव दानका लागि म छिटै आवश्यक व्यवस्था मिलाउनेछु, जसबाट कुनै दृष्टिविहीनले आँखा देखोस्; कसैको मृगौला प्रत्यारोपण होस्; मेरा अङ्गहरू जेजति प्रयोग हुन सक्छन् सबै प्रयोग हुन् र बाँकी शवबाट चिकित्साशास्त्र अध्ययन गर्ने विद्यार्थीहरूलाई फाइदा पुगोस्। मेरा अङ्ग र शव इच्छ्याएको संस्थालाई जिम्मा लगाएर अन्त्येष्टिको न्यूनतम रीत पूरा गरेपछि, मेरो आत्माको चिरशान्तिको कामना गर्दै घर फर्किनू र भोलिपल्टदेखि सामान्य जीवनलाई निरन्तरता दिनू। मेरो छोरालाई पनि सेतो पहिरन लगाउन लगाएर, १३ दिनसम्म किरिया बस्न लगाउँदै गौदान र पिण्डदान गरेर खर्च नगर्नू। जो त्यसो गर्न चाहन्छन्, तिनको भावनालाई सम्मान गर्नू, तर आफू चाहिँ 'ओहो ! त्यसो नगर्दा आफन्त र वरिपरिकाले के भन्लान्' भनेर नसोच्नू। 'त्यस्तो कुरामा आलोचना गर्नेहरूले धर्मको वास्तविक अर्थ र परम्परामा निहित लचकतालाई बुझेका छैनन्' भन्ठान्नू।

पत्रपत्रिकामा श्रद्धाञ्जली छपाउने काम गर्दै नगर्नू र अरूलाई पनि त्यसो नगरिदिन आग्रह गर्नू। मेरो मृत्युपछि हुने सम्पूर्ण खर्चमा सकेको जति थपेर मैले आठदेखि १० कक्षासम्म पढेको दार्चुलाको खलङ्गास्थित महेन्द्र नमूना माध्यमिक विद्यालयलाई चन्दा दिइदिनू।

माथि उल्लेख गरिएका कतिपय विचार मैले आफ्ना बुवाबाट सिकेको हुँ। तर, गायत्री भट्टराईले मलाई थप राम्रो कुरा सिकाएकी छन्। त्यसैले मेरो मृत्यु-इच्छामा अर्को एउटा चाहना पनि थपिहालूँ– हरेक वर्ष मेरो वार्षिकीमा श्राद्ध होइन, सकिन्छ भने सानै किन नहोस्, परोपकारी काम गरिदिनू।

एक जनाको मृत्यु हुँदा अर्को एक जनाको भलाइ हुने काम गर्दा नै मृतकको आत्माले चिरशान्ति पाउला र बाँचेका आफन्तहरूलाई पनि धर्म होला भन्ने यो पङ्क्तिकारको ठम्याइ हो। एउटा दूर गाउँकी गायत्री भट्टराई 'परम्परा र धार्मिक मान्यतामा समयसापेक्ष सुधार' का लागि परिवर्तनकारी कदम

उठाउन सक्छिन् भने हामीजति पढेलेखेका र देखेसुनेकाहरूले त समाज सुधारका लागि अझ धेरै गरेर देखाउनुपर्ने होइन र !

*कान्तिपुर दैनिक, २०६६ कात्तिक १८*

# फेरि मृत्यु–इच्छाकै प्रसङ्ग

"म नरम टिस्युमा हुने इभिङ सारकोमा क्यान्सरको अन्तिम चरणमा छु र आफू कुनै पनि क्षण मर्दै छु भन्ने मलाई थाहा छ। तर मलाई रत्ती पनि दुःख छैन। अलिकति पीडा यस अर्थमा छ, मृत्यु थाहा दिएर भन्दा थाहा नदिईकन आइदिएको भए सम्भवतः त्यो मसहित परिवारका सदस्यहरू सबैका लागि बढी सहज हुने थियो। कति लामो समय बाँच्नेभन्दा पनि जिन्दगी कसरी बाँच्ने भन्ने कुराले बढी अर्थ राख्दो रहेछ। समाजको लागि केही गर्ने इच्छा थियो; सानै किन नहोस्, केही गरेर जाँदै छु। त्यसैमा म सन्तुष्ट छु।" ३२ वर्षीय अच्युत शर्माले आफ्नो मेहनतले आर्जन गरेर सञ्चित गरेको सबै भनेजसो ३५ लाख रुपैयाँ एउटा क्यान्सर उद्धार कोष स्थापना गर्न उपलब्ध गराएका छन्।

शर्माको त्यो उदाहरणीय कदमबारे थाहा पाएपछि मैले उनलाई फोन नगरी रहन सकिनँ। उनी भरतपुर क्यान्सर अस्पतालमा अत्यन्त कमजोर शरीर तर दृढ आत्मबलका साथ मृत्यु पर्खेर बसिरहेका छन्। *परम्परा सुधार्ने काइदा र मृत्यु-इच्छा* आलेखमा यो पङ्क्तिकारले मृत्युलाई सहज रूपमा ग्रहण गर्न सके र एक जनाको मृत्युबाट अरूको हित हुने उपाय अवलम्बन गर्न सके त्यसबाट सबैलाई धर्म हुने थियो भन्दै मृत्यु-इच्छाको चर्चा गरेको थियो। त्यसको लगत्तै महान् मृत्यु-इच्छा बोकेर मृत्यु पर्खिरहेका शर्माको सम्पर्कमा आउनु संयोगै थियो।

नवलपरासीको त्रिवेणीमा, शर्माकै भनाइमा, निम्न मध्यमवर्गीय परिवारमा जन्मिएका उनले गाउँको स्कुलमा कक्षा पाँचसम्म अध्ययन गरे। पछि काठमाण्डुको सिद्धार्थ वनस्थली स्कुलबाट एसएलसी र पोखरा इन्जिनियरिङ क्याम्पसबाट ग्र्याजुएसन गरे। त्यसपछि धेरै नेपाली युवाझैँ उच्च शिक्षा र सुनौलो भविष्यको

सपना बुन्दै उनी अस्ट्रेलिया गए। त्यहाँ अध्ययन पूरा गरेपछि उनले इन्जिनियरका रूपमा काम शुरू गरे। उनलाई विद्यार्थीकालमा लाग्थ्यो, ४०-५० लाख रुपैयाँ कमाउन सकियो भने जिन्दगी सहज रूपमा बित्नेछ। उनले ३०-३१ वर्षकै उमेरमा त्यति कमाए पनि। तर, भावीले उनको जीवनको गोरेटो उनले चाहेभन्दा धेरै भिन्न ढङ्गबाट कोरेका रहेछन्।

शर्मालाई २०६३ माघतिर सारकोमा क्यान्सर भएको थाहा भयो। उनको उपचार त शुरू भयो; तर साथसाथै स्थिति अत्यन्त नाजुक भैसकेकाले उनी धेरै समय नबाँच्ने पनि प्रस्ट भयो। त्यसैले नेपाल फर्किएर देहत्याग गर्ने इच्छा अनुरूप उनी नेपाल आए। मसँग फोनमा कुरा हुँदा मृत्युलाई आफूले स्वाभाविक रूपमा ग्रहण गरेकामा जोड दिँदै उनले भने, "मृत्यु पर्खिने क्रममा म एकपल्ट पनि रोएको छैन।"

उज्ज्वल भविष्य बोकेको ३२ वर्षको अविवाहित

युवकले हर पल मृत्यु कुरेर बस्दा त्यति ठूलो आत्मबल प्रदर्शन गर्नु त्यस अवस्थामा भएका अन्य मानिसका लागि आफैँमा एउटा उदाहरणीय र प्रेरणादायी कुरा हो। त्यसको साथमा शर्माले आफूले सञ्चय गरेको ३५ लाख रुपैयाँ क्यान्सरपीडितहरूको सहयोगका लागि कोष स्थापना गर्न उपलब्ध गराएका छन्।

मैले उनलाई सोधेँ, “तपाईं एउटा मध्यमवर्गीय व्यक्ति, त्यो रकम आफ्ना बुवाआमालाई छोडेको भए उहाँहरूको धेरै भलाइ हुन्थ्यो जस्तो तपाईंलाई लागेन ?”

उनले भने, “सो रकम नहुँदा पनि उहाँहरूको जीवन आफ्नै प्रकारले चलिरहेको अवस्थामा मैले सो रकम समाजको लागि खर्च गर्न उपयुक्त सम्झिएँ र त्यसमा मेरा बुवाआमा, दाइ तथा दिदीबहिनीहरू सबैको पूर्ण समर्थन छ। ४०-५० लाख कमाए जीवन सहज रूपमा बिताउन सकिन्छ भन्ने मेरो विद्यार्थीकालीन सपना त भावीले पूरा हुन दिएन; तर त्यो रकमबाट

अरू कसैको जीवन थोरै नै किन नहोस्, सहज हुन सक्छ भन्ने सोचबाट मलाई देहत्याग गर्ने बेला एक प्रकारको सन्तोष महशूस भैरहेको छ।"

हाम्रो समाजले अच्युत शर्माबाट धेरै प्रेरणा लिन सक्छ। पहिलो कुरा, यो मृत्युलाई सहज रूपमा ग्रहण गर्न नसक्ने समाज हो। त्यसै भएर होला, मृत्युको शोक अवधि नै हामीकहाँ औधि लामो छ। कतिपय पाठकलाई अचम्म लाग्ला, मेरा एक बेलायती हाकिम थिए। उनी आफ्नी वृद्ध आमाको खूब हेरविचार गर्थे, जुन बेलायती परिप्रेक्ष्यमा अलि असामान्य थियो। एक दिन उनकी आमाको निधन भयो। मैले सोचेँ, उनलाई ठूलो चोट पर्‍यो होला र अब उनी कैयौँ दिन कार्यालय आउनेछैनन्। तर, आमाको निधन भएको दोस्रो दिन अन्त्येष्टि सकेर तेस्रो दिन त उनी कार्यालयमा झुल्किए।

मैले भनेँ, "यो त हाम्रो समाजमा असोचनीय कुरा हो।"

उनले भने, “ईश्वरको इच्छामा आँसु बहाएर बस्नु हुँदैन।” शर्माले मृत्यु पर्खने क्रममा ‘म कहिले रोइनँ’ भन्दा मलाई तिनै बेलायती हाकिमको याद आइरहेको थियो।

दोस्रो, हाम्रो समाज पीडालाई रचनात्मक रूप दिन जान्दैन। उदाहरणका लागि, पश्चिमा मुलुकहरूमा आफू या आफन्तले भोगेको पीडा अरूले भोग्न नपरोस् भनेर अनगिन्ती कल्याणकारी अग्रसरता लिइएका हुन्छन् र तिनले यति धेरै रचनात्मक काम गरेका हुन्छन्, कुरा गरेर साध्य हुँदैन। हामीकहाँ त्यस्ता उदाहरणहरू एकदमै न्यून छन्। जे छन्, त्यसबारे पनि धेरैलाई थाहै हुँदैन। अहिले अच्युत शर्माले उपचार गराइरहेको भरतपुरको क्यान्सर अस्पताल पर्यटन व्यवसायी कर्ण शाक्यले आफ्नी पत्नी र छोरीको क्यान्सरबाट मृत्यु भएपछि भोग्नुपरेको पीडालाई दिएको रचनात्मक रूपको परिणाम हो। क्यान्सरबाट प्रियजनको मृत्यु भएपछि उनले सो अस्पताल निर्माणका

लागि अभियान सञ्चालन गरेका थिए। केही महिनाअघि एक सम्पन्न किशोरले रत्नपार्कमा एकैपल्ट छ जनाको ज्यान जाने गरी सडक दुर्घटना गरिदिएपछि मलाई लागेको थियो, त्यो घटना कुनै विकसित पश्चिमा देशमा भैदिएको भए, सम्भवतः दुर्घटना गर्ने किशोरका बाबुआमाले आफ्नो छोराले गरेको गल्तीको प्रायश्चित्तस्वरूप ट्र्याफिक चेतना जगाउनका लागि काम गर्न कुनै संस्था स्थापना या त्यस्तै कुनै अभियान सञ्चालन गरिसकेका हुने थिए। त्यस्ता कामहरू हामीकहाँ विरलै हुने गर्छन्।

अन्त्यमा, आफ्नो पत्रकारितामूलक लेखनबाट राजनीतिभित्र अर्थ खोज्न धेरै वर्षदेखि गरेको प्रयास अर्थहीन भएको महशूस गरिरहेको यो पङ्क्तिकारले व्यक्तिगत अनुभूतिलाई सामाजिक अनुभवसँग जोडेर अर्थहीनताभित्र अर्थ खोज्न गरिरहेको प्रयास भने केही फलदायी भएको महशूस गरिरहेको छ। *परम्परा सुधार्ने काइदा र मृत्यु-इच्छा* पढेपछि, नेपालको एउटा

ठूलो निजी क्षेत्रको कम्पनी सिप्रदी ट्रेडिङ लिमिटेडका प्रमुख कार्यकारी अधिकृत शम्भु दाहालले भने, “तपाईंको स्तम्भ पढेपछि मैले पनि श्राद्धमा हुने खर्च कल्याणकारी काममा लगाउने निर्णय गरेको छु।”

त्यसै गरी, अङ्ग्रेजी साप्ताहिक *स्पटलाइट*का सम्पादक केशव पौडेलले भने, “मेरी श्रीमती पनि अब श्राद्धमा, सप्ताहमा हुने खर्च गरीबगुरुबालाई सहयोग गर्नमा लगाउने निर्णयमा पुगेकी छन्।”

केही दिनअघि नेपाली काङ्ग्रेसका युवा नेता गगन थापालाई भेट्दा उनले भने, “कमलपोखरीबारेको तपाईंको लेख पढेपछि हामी त्यहाँ केही गर्न लागिपरेका छौं; अवश्य केही हुन्छ होला।” थापा कमलपोखरीनजिकै ज्ञानेश्वरमा बस्दा रहेछन्।

यी त मेरो सम्पर्कमा आएका थोरै व्यक्तिहरूमध्ये तीन जनाले गरेका टिप्पणी भए। त्यस्तै सोच राख्ने अरू नहोलान् भन्न सकिन्न। धेरै वर्षको राजनीतिक

लेखनीका क्रममा प्रशंसाहरू पाए पनि त्यसले एकाध घटनामा बाहेक कहिले कसैको सोच र कर्ममा परिवर्तन लेराएको थाहा भएन। तर, यो आलेखका लागि खर्चेको समय भने खेर नगएको महशूस भैरहेको छ। अच्युत शर्माले पीडालाई रचनात्मक रूप दिन लिएको अग्रसरताबारे आज गरिएको चर्चाबाट पनि कैयौँ नेपाली प्रेरित हुन सक्छन्। जोकोहीलाई शहीद घोषणा गरिने देशमा साँच्चिकै आदर्श पेश गरेर जान लागेका अच्युत शर्मालाई अमर रहून् भन्दा अवश्य फरक नपर्ला– अच्युत शर्मा अमर रहून्!

*(यो आलेख प्रकाशन भएको केही समयपछि नै अच्युत शर्माले यो संसारबाट बिदा लिएका थिए।)*

*कान्तिपुर दैनिक, २०६६ मङ्सिर २*

# यो जिन्दगी खै के जिन्दगी !

काठमान्डु र ललितपुर जोड्ने थापाथलीको पुल भएर कार्यालय जाँदा पुलमाथि पुगेपछि सामान्यतया सधैँजसो केही मिनेट ट्र्याफिक जाममा परिन्छ । अनि दुई वर्षजतिकी एउटी बालिकालाई ढाडमा बोकेर आठ वर्षजतिको एउटा बालक एकपछि अर्को मोटरको छेउमा उभिएर अलिकति सद्भावको भीख मागिरहेको हुन्छ । थापाथलीको पुलमाथिको सो दृश्य त्यहाँबाट यात्रा गर्ने धेरैका लागि सामान्य भैसकेको हुनुपर्छ । सो बालकको अनुहार हेर्दा ऊ कुनै दुर्व्यसनी या ठग भएजस्तो कत्ति पनि लाग्दैन । उसका अनुहार र आँखा निर्दोष र मलिन देखिन्छन् । ऊ मोटरको झ्यालको छेउमा पुग्नेबित्तिकै धेरैले सिसा बन्द गरिदिन्छन् । कसैकसैले भने केही पैसा दिने पनि गर्छन् । मैले पनि आफ्नो मोटरछेउ ऊ आइपुगेको बेला केही पैसा दिने

गरेको छु। तर, एक दिन अलि धेरै बेर ट्र्याफिक जाम भएको बेला मैले ऊसँग एक छिन गफ गर्ने मौका पाएँ।

"तिमी दिनदिनै यहाँ सानी बहिनी बोकेर माग्न किन बस्छौ? तिम्रा बुवाआमा हुनुहुन्न कमाएर खुवाउने?" मैले सोधेँ।

"आमा त एक वर्षअगाडि मरिसक्यो।" उसले भन्यो।

"अनि तिम्री बहिनीलाई कसले हेर्छ त?"

"उसलाई त आमा मरेदेखि मैले हेरेको। यसलाई ख्वाउने, गुहु-मूत पुछ्ने, सुताउने सबै मैले गर्छु।"

"अनि तिम्रा बुवा हुनुहुन्न?"

"बाले त हेर्दैन। रक्सी खाएर आउँछ; उल्टो झन् पिट्छ हामीलाई। बैनीलाई त झन् कस्तो गरेर पिट्छ!"

"खाना कहाँ, कसरी खान्छौ त?"

"बिहान उठ्यो; याँ आएर माग्यो; उः त्याँ पसलमा गएर खायो। राति त हामी उः त्यो पसलमा मम खाने अनि एकै चोटि गएर सुत्ने। उठिराख्यो भने त बाले कुट्छ।"

"अनि कहाँ बस्छौ?"

"उः त्याँ पुल तल।" उसले थापाथलीको पुलमुन्तिरको सुकुम्बासी झुपडपट्टीतिर औँल्याउँदै भन्यो।

"तिमीलाई त कस्तो गाह्रो रैछ, तर तिमीले आफूलाई, बहिनीलाई यस्तो राम्रोसँग हेरेका रैछौ; खुशी लाग्यो। नआत्तिऊ, सबै ठीक हुन्छ।" शब्द-बुट्टा भर्दै मैले उसको हातमा केही पैसा थमाइदिएँ।

उसले पैसा लिँदै भन्यो, "कैले त कस्तो गाह्रो हुन्छ ! कसैले पैसा दिँदैन, बैनी भोक लागेर रुन्छे अनि मलाई त कस्तो गाह्रो हुन्छ ! घर छोडेर भागूँभागूँ लाग्छ; फेरि बैनीको माया लागेर जान सक्दिनँ !"

उसले कुनै पनि कुरा बढाइ-चढाइ गरेको थिएन

भन्नेमा म पूर्ण रूपले विश्वस्त थिएँ। त्यसै बेला ट्र्याफिक खुकुलो भयो र म त्यहाँबाट मोटरमा गुडिरहेको आफ्नो आडम्बरपूर्ण चेतना बोकेर कार्यालयतिर बढेँ। आफ्नो आडम्बरको औचित्य दर्शाउन मैले आफूले आफैँलाई सान्त्वना दिएँ– व्यक्तिले त त्यस्ता स्थितिहरूलाई अत्यन्त सानो स्तरमा मात्र सम्बोधन गर्न सक्छ; ठूलो स्तरमा गर्ने भनेको त राजनीतिक नेतृत्वले नै हो।

संयोगले त्यो दिन बाल अधिकार सम्बन्धी महासन्धिको बीसौँ वर्षगाँठ परेको थियो। पत्रपत्रिकामा बालहित सम्बन्धी साह्रै राम्रा लेखहरू छापिएका थिए। साँझ हामीले पनि बीबीसी नेपाली सेवामा नेपाली बालबालिकाको स्थितिमा विगतका वर्षमा आएको सुधार अनि बाँकी रहेका चुनौतीहरूबारे राम्रै रिपोर्ट गर्‍यौँ। एभन्युज टेलिभिजनले काठमान्डुको ठमेलका सडक बालबालिकाको हृदयविदारक चित्र र वार्तालापहरू प्रस्तुत गरिरहेको थियो। फेरि अर्को संयोग भन्नुपर्छ, त्यो दिन माओवादी

र देशका तत्कालीन सात प्रमुख दलबीच विस्तृत शान्ति सम्झौता भएको पनि तीन वर्ष पुगेको थियो। नेताहरूले नयाँ नेपालको सपना अत्यन्त सफलतापूर्वक बेचेका ती तीन वर्षमा देशले गणतन्त्र, धर्मनिरपेक्षता र संविधान सभाको चुनाव जस्ता सैद्धान्तिक परिवर्तनहरू हासिल गरेछ। तर, नयाँ नेपाल निर्माणका लागि अत्यावश्यक माओवादी लडाकुहरूको समायोजन र नयाँ संविधान निर्माणको दिशामा भने खासै प्रगति भएनछ। सर्वसाधारणका समस्याको सम्बोधन त झन् परको कुरा भैहाल्यो। बरु माओवादी नेता, मन्त्री तथा उच्चपदस्थ कर्मचारीहरूले निर्लज्जताका साथ महँगा र विलासी गाडी चढेछन्। अनि भ्रष्टाचार निगरानी सम्बन्धी अन्तर्राष्ट्रिय संस्था ट्रान्सपरेन्सी इन्टरन्यासनलका अनुसार, नेपाल भ्रष्ट राष्ट्रहरूको सूचीमा गत एक वर्षमा १२१ औँ स्थानबाट झरेर १४३ औँ स्थानमा पुगेछ।

तर कसलाई के मतलब ! राजनीतिज्ञहरूलाई त

कसरी आफ्नो प्रतिद्वन्द्वीलाई पछार्ने, थचार्ने, सत्तामा जाने र सत्तामा टिक्ने भन्ने मात्र मतलब भएको देखिन्छ। कहिलेकाहीँ लाग्छ, हाम्रा अधिकांश नेता राति दिमागमा के लिएर सुत्न जान्छन् र बिहान के सोच्दै बिउँझिन्छन् होला? राष्ट्रिय महत्त्वका मुद्दाहरूलाई तिनका स्वार्थी आकाङ्क्षाहरूले यसरी गाँजिदिएका छन्, ती सम्भवत: हरेक साँझ राजनीतिमा कसरी हावी हुने भन्ने षड्यन्त्रकारी, कलुषित सोच लिएर सुत्छन् होला र हरेक बिहान कलुषित लक्ष्य बोकेर उठ्छन् होला। ती समाज रूपान्तरणको प्रतिबद्धताले होइन, राजनीतिसँग जोडिएको अर्थ, शक्ति र शानका कारण राजनीतिमा टाँसिएर बसेका मानवीय संवेदनाहीन परजीवी हुन्। ती स्वार्थकै लागि षड्यन्त्रको खाल्डो खन्छन्; महिनौँसम्म 'खाल्डो मैले हैन, तैँले खनेको, तैँ पुर्' भनेर झगडा गर्छन्; अन्त्यमा स्वार्थकै लागि खाल्डो पुर्छन् र त्यो उपलब्धि हासिल गरियो भनेर दङ्ग पर्छन्। केही महिनापछि फेरि अर्को खाल्डो खन्छन् र पुरानै चक्र

दोहोऱ्याउँछन्। हामी वर्षौंवर्षदेखि त्यही दुश्चक्रमा फसेका छौं। त्यो दुश्चक्र हामीले होइन, राजनीतिज्ञहरूले मात्र तोड्न सक्छन्।

यति लेख्दै गर्दा बिहान रेडियो नेपालबाट प्रो-पब्लिकले तयार पारेको 'असल शासन' कार्यक्रममा एउटा रिपोर्ट बज्दै थियो। दीपेश घिमिरेले तयार पारेको सो रिपोर्टमा दुर्गम जाजरकोटस्थित रोकाया गाउँ विकास समिति-७, धिआर गाउँको एउटा दलित बस्तीको चर्चा गरिएको थियो। रिपोर्ट अनुसार त्यहाँ एक व्यक्ति पनि साक्षर छैन, सो बस्तीका २२ परिवारमा कसैको पनि आफ्नो जमीन छैन र उनीहरू 'खलिया प्रथा' अनुसार वरपरका हुनेखानेहरूको घरमा काम गरेर, लुगा सिएर जीविकोपार्जन गर्छन्। साक्षरताको क्षेत्रमा विदेशी पैसा लिएर काम गर्ने संस्थाहरू र सरकारको साक्षरता कार्यक्रम, कसैको पनि धिआर गाउँमा आँखा नपुगेकामा रिपोर्टमा आश्चर्य व्यक्त गरिएको थियो।

तर, राजधानीको मुटुमा बसेको झुपडपट्टीको ख्याल कसैले गरेको छैन। त्यही झुपडपट्टीबाट निस्किएर आफ्नी दुई वर्षकी बहिनीलाई बोक्दै मागेर पेट पाल्ने आठवर्षे बालकको ख्याल कसैले गरेको छैन भने दूरदराजको धिआर गाउँका दलितहरूको के कुरा ! सङ्घीयता, धर्मनिरपेक्षता, लोकतन्त्र, गणतन्त्र, जनगणतन्त्र या जुनसुकै तन्त्र किन नहोस्, त्यसलाई त्यति बेलासम्म उपलब्धि भन्न मिल्दैन जति बेलासम्म देशका बहुसङ्ख्यक मानिसको गाँस, बास र कपासको सुनिश्चितता हुँदैन। त्यसैले त चीनले पश्चिमा राष्ट्रहरूलाई सधैँ भन्ने गर्छ, "हामीले ५० करोडभन्दा बढी जनता, झन्डैझन्डै सिङ्गो योरोपको जनसङ्ख्यालाई गत केही दशकमा तीव्र गरीबीबाट माथि उठायौँ। त्योभन्दा ठूलो मानव अधिकार उपलब्धि के हुन सक्छ?" हालै चीनले जनगणतन्त्र स्थापनाको ६० औँ वार्षिकोत्सव मनाउँदा अमेरिका, बेलायत लगायतका पश्चिमा राष्ट्रहरू चीनको त्यो उपलब्धिको प्रशंसा गर्न बाध्य भए।

भनाइको अर्थ के हो भने, व्यवस्था साधन मात्र हो, साध्य होइन। महत्त्वपूर्ण कुरा भनेको इमानदारी र देश बनाउने प्रतिबद्धता हो। तर, बीसौँ वर्ष राजनीति गर्दा पनि जनताको जीवनस्तरमा परिवर्तन लेराउन नसक्ने हो र जे परिवर्तन आएको छ त्यसमा पनि श्रमिकहरूबाट भित्रिएको रिमिटन्स अनि सरकारी र गैरसरकारी तवरमा आएको अन्तर्राष्ट्रिय दाताहरूकै बढी भूमिका रहने हो भने, सबै राजनीतिकर्मीले आफ्नो कर्म र जिन्दगीको सार्थकतामाथि एकपल्ट प्रश्न गर्नैपर्ने हुन्छ। देशमा शान्ति मऱ्यो; हिंसा बढ्यो; जातीय-क्षेत्रीय विद्वेष बढ्यो; सत्ताको लुछाचुँडी बढ्यो; षड्यन्त्रको राजनीति बढ्यो; सङ्क्रमणकालको दुहाई दिँदै ती सबको औचित्य दर्शाउने दुस्साहस गरियो; सत्ता र शक्तिको मात चढ्यो; प्रजातन्त्र आयो; लोकतन्त्र आयो; गणतन्त्र आयो; तर, दशकौँ राजनीति गरेर देशका भोका र नाङ्गालाई भोको पेट नभर्ने र नाङ्गो आङ नछोप्ने खोक्रा सिद्धान्तको ढर्राबाहेक

वास्तवमा के दिइयो भनेर सबै राजनीतिकर्मीले एकपल्ट सोच्नैपर्ने हुन्छ । त्यसैले, ती सबैले 'यो जिन्दगी खै के जिन्दगी !' भनेर एकपल्ट हरिभक्त कटुवाललाई सम्झँदै आफैँलाई धिक्कार्ने हो कि ? कहिलेकाहीँ आफूले आफैँलाई धिक्कार्दा चेतना र विवेक बढ्ने गर्छ ।

*कान्तिपुर दैनिक, २०६६ मङ्सिर १६*

# (अ)बौद्धिक बेइमानी

होटल व्यवसायी कर्ण शाक्य मैले श्रद्धा गर्ने एक नेपाली हुन्। मैले बेलाबखत आफ्ना आलेख तथा मित्रहरूबीचको कुराकानीमा उनको धेरै प्रशंसा गरेको छु। साथै उनी स्वयंसँग पनि मैले आफ्नो श्रद्धाभाव व्यक्त गरेको छु। उनको पछिल्लो कृति *म सक्छु* पढ्ने सोच बनाइरहेकै बेला *नेपाल* साप्ताहिकको २०६६ मङ्सिर १४ को अङ्कमा रमण घिमिरेले लेखकको उक्त पुस्तकको समीक्षा पढ्ने मौका मिल्यो। समीक्षामा घिमिरेले शाक्यको कृतिको प्रशंसा गरेका छन्; तर लेखकका रूपमा उनमा हुनुपर्ने इमानदारी र उदारताको अभावका केही ठोस प्रसङ्ग उल्लेख गरेका छन्।

शाक्यको प्रशंसक भए पनि उनको बहुचर्चित पुस्तक *सोच* पढेपछि मलाई पनि ठ्याक्कै घिमिरेलाई

जस्तै महशूस भएको थियो र त्यति बेलै केही लेखूँलेखूँ लागिसकेको थियो । तर *म सक्छु*को समीक्षा पढेपछि, त्यसले केही महिनाअगाडि मैले श्रद्धा गर्ने अर्का एक नेपाली, युवा नेता गगन थापाले एउटा अन्तर्वार्तामा गुमाएको इमानदारी र उदारताको प्रसङ्ग पनि याद गरायो । हामीकहाँ बौद्धिक बेइमानी अलि गम्भीर समस्या भएकाले यी दुवै प्रसङ्गबारे एकपल्ट चर्चा गर्न यो पङ्क्तिकारले उपयुक्त सम्झिएको छ र यसको अन्यथा अर्थ लाग्नेछैन भन्ने आशा लिएको छु ।

डा. नर्मन भिनसेन्ट पिलले लेखेको एउटा पुस्तक छ– *द पावर अफ पजटिभ थिङ्किङ* (सकारात्मक सोचको शक्ति) । कर्ण शाक्यले जीवनमा सो पुस्तकबाट ठूलो प्रेरणा लिएका छन् र उनले *सोच*को पहिलो परिच्छेदको शीर्षक पनि त्यही दिएका छन् । उनले त बिर्सिसके होलान्, तर उनले मलाई सन् १९९८ को नेपाल भ्रमण वर्षपछि उनीसँग होटल अम्ब्यासडरमा भएको एउटा भेटमा सो पुस्तकबारे धेरै चर्चा गर्दै

जीवनमा सकारात्मक सोचको शक्तिको महत्त्वबारे व्याख्या गरेका थिए। त्यसै क्रममा आफ्नी छोरी र पहिली श्रीमतीको क्यान्सरबाट भएको मृत्युको पीडालाई उनले कसरी सकारात्मक सोचको सहायताले रचनात्मक कार्यमा परिणत गरे भन्नेबारे पनि मलाई बताएका थिए।

*सोच*को प्रकाशनपछि शाक्यले विभिन्न शैक्षिक संस्थासहित धेरै ठाउँमा सकारात्मक सोचको शक्तिबारे भाषणहरू दिए। ती भाषणमा उनले आफूलाई सकारात्मक सोचका लागि ठूलो प्रेरणा दिने *द पावर अफ पजटिभ थिङ्किङ*बारे उल्लेख गरेका छन् या छैनन्, मलाई थाहा भएन। तर, उनले बहुचर्चित *सोच*मा भने 'सकारात्मक सोचको शक्ति' शीर्षककै खण्डमा समेत सो पुस्तकबारे उल्लेखसम्म गरेका छैनन्। त्यति मात्र होइन, केही समयअघि निर्मित लोकप्रिय 'मेरो जिन्दगी, मेरो विश्वास' टेलिभिजन शृङ्खलामा पनि उनले सकारात्मक सोचको खूब चर्चा गरे, तर सो पुस्तकबारे

उल्लेखै गरेनन्। त्यो, उनी जस्ता आदर्श व्यक्तिबाट हुनै नहुने बेइमानी हो। त्यो, पूर्णतः नकारात्मक सोचको परिचायक हो। आफूलाई ठूलो बनाउन अरूले दिएको प्रेरणा र योगदानलाई लुकाउनुपर्दैन।

त्यसै गरी नेपाली काङ्ग्रेसका युवा नेता गगन थापा दुर्गन्धित राजनीतिक वातावरणबीच एक आशालाग्दा राजनीतिज्ञका रूपमा उदाएका छन्। उनी विचारमा प्रस्ट छन् र आदर्शलाई व्यवहारमा उतार्न प्रयास पनि गर्छन्। उनीबाट भविष्यमा नेपाली समाजले धेरै आशा गर्न सक्छ। त्यसैले उनी इमानदारीबाट चुक्न थाले भने खबरदारी गर्नु हामी सबैको कर्तव्य हो। २०६६ असारको पहिलो हप्तातिरको कुरा हो, टेलिभिजनको च्यानल बदल्दाबदल्दै मेरा आँखा इमेज च्यानलमा एक समयका मेरा सहपाठी विजय लामाले लिइराखेको थापाको अन्तर्वार्तामा पर्न गए र म त्यहीँ रोकिएँ। अन्तर्वार्तामा थापा आफूले दुर्गमकी केटीलाई पढाइका लागि गरिरहेको सहयोगबारे बताउँदै थिए। कल्याणकारी

कार्यको प्रवर्धन आफ्नो चासोको विषय भएकाले थापाले विगतमा बेलाबखत गरेका कल्याणका कामहरूलाई मैले उल्लेख्य उदाहरणका रूपमा सम्झने गरेको थिएँ। उनले एक असहायलाई नियमित रूपमा सहयोग गर्ने गरेको सुनेर म झनै खुशी भएँ। तर, सो सहयोगको कुरा गरेलगत्तै थापाले जे भने त्यसबाट म स्तब्ध भएँ। उनले लगभग यसो भने, "यसै गरी हरेक सक्षम नेपालीले एकएक बालबालिकालाई मात्र पढाउने हो भने हामीलाई शिक्षाका लागि काम गर्न गैरसरकारी संस्थाहरूको आवश्यकतै पर्दैन। यसलाई मैले 'भाइबहिनी अभियान' को नाम दिएको छु।"

गगन थापालाई राम्रोसँग थाहा छ, 'भाइबहिनी अभियान' 'नेपालका लागि नेपालीले गरौँ' भन्ने नारा बोकेको कल्याणकारी सञ्जाल हेल्प नेपाल नेटवर्कले २०६२ सालतिर शुरू गरेको अभियान हो। त्यसबारे थापालाई एउटा भिन्दै प्रसङ्गमा हेल्प नेपाल नेटवर्ककै चाबहिलस्थित सानो कार्यालयमा संस्थाका अध्यक्ष

अरुणसिंह बस्नेतले जानकारी गराएका थिए। सो अभियान अन्तर्गत नेटवर्कका १५ शुभेच्छुकले दुई वर्षसम्म १५ बालबालिकालाई सहयोग पनि गरे। तर, प्राविधिक कठिनाइ उत्पन्न भएपछि सो अभियानलाई केही समयका लागि स्थगन गरिएको छ। थापा नेटवर्कका अन्य गतिविधिसँग पनि अपरिचित छैनन्। उनले हामीबीच भएका एकाध भेटघाटमा नेटवर्कले गरेका कामको प्रशंसा गर्ने गरेका छन्। तर, सार्वजनिक अन्तर्वार्तामा अरूले दिएको नाम र कामलाई उनले आफ्नो भनेर प्रस्तुत गरे। आदर्शको अगुवाइ गर्न खोज्ने एक उदीयमान युवा नेताका लागि त्यो पूर्णतः अशोभनीय कार्य थियो।

वैचारिक चोरी सधैँको एउटा ठूलो समस्या हो। साहित्यमा हुने त्यस्तै चोरीबारे २०६६ मङ्सिर १३ गतेको *कान्तिपुर* दैनिकमा मेदिनीप्रसाद शर्माको राम्रो लेख छ। सो लेख रामेछापका कवि भनिएका पिता र पत्रकार भनिएका छोराबारे भए पनि त्यसमा प्रसिद्ध

साहित्यकार शङ्कर लामिछानेदेखि रमेश विकलसम्मका बौद्धिक बेइमानीका प्रसङ्गहरूको चर्चा गरिएको छ। त्यस्तो चोरी नेपालको प्राज्ञिक क्षेत्रमा पनि व्याप्त भएको मेरा प्राज्ञ मित्रहरू बताउँछन्। तर, म आफू प्राज्ञ नभएकाले त्यसबारे धेरै जानकारी हुने कुरा भएन। त्यसबारे प्राज्ञहरूले नै छलफल गर्नु राम्रो हुनेछ। आफू पत्रकार भएकाले के चाहिँ याद गरेको छु भने, कुनैकुनै सञ्चार माध्यमले कहिलेकाहीँ अन्य सञ्चार माध्यमबाट टिपेको खबरलाई आफ्नै जसरी प्रस्तुत गरिरहेका हुन्छन्। अरूबाट समाचार त्यसरी साभार गरेपछि, त्यसलाई उल्लेख गर्नैपर्छ। पश्चिमा देशहरूमा हो भने त्यस्तो चोरीलाई अपराधै मानिन्छ। त्यस्तो आरोप लागेका विद्यार्थी, प्राध्यापक या संस्थाले छानबिन टोलीसमक्ष उपस्थित भएर स्पष्टीकरण दिनुपर्ने हुन्छ। लोकप्रिय इन्टरनेट साइट फेसबुकका संस्थापक मार्कजुकबर्गले सो साइटको सोच अरूबाट चोरेको आरोप लागेपछि वर्षौंसम्म मुद्दा खेपेका थिए। पछि

उनले करीब ५० करोड रुपैयाँ तिरेर सो विवादलाई टुङ्ग्याए ।

धेरै मानिसलाई आफूलाई घत परेको, कहीँ सुनेको या कहीँ पढेको विचारलाई अरूबाट प्रशंसित हुनका लागि आफ्नै जसरी प्रस्तुत गर्ने ठूलो लालसा हुन्छ । तर खास गरी स्थापित परिचय भएका व्यक्तिहरूका लागि त्यो अत्यन्त खतरनाक लालसा हो, जसले धेरै मुस्किलले निर्माण गरेको विश्वसनीयता र हासिल गरेको श्रद्धालाई भङ्ग गरिदिन सक्छ । जसले त्यस्तो काम गर्छन्, तिनले के बुझ्नुपर्छ भने, अरूले गरेको कामबाट मैले सिकेँ या प्रेरणा लिएँ भन्दा मान्छे ठूलो मानिन्छ, सानो होइन । कर्ण शाक्यले आफ्नो पुस्तकमा या सकारात्मक सोचलाई प्रवर्धन गर्ने आफ्ना भाषणहरूमा *द पावर अफ पजटिभ थिङ्किङ*बारे उल्लेख गरेका भए पढ्ने र सुन्नेहरूले पनि 'ओहो, यस्तो पो गर्नुपर्ने रहेछ; कस्तो उदार र इमानदार मान्छे!' भन्ठान्ने थिए होलान् । त्यसै गरी गगन थापाले "हेल्प नेपाल

नेटवर्क भन्ने एउटा कल्याणकारी संस्थाले 'भाइबहिनी अभियान' चलाएको रहेछ; त्यसबारे थाहा पाएपछि मलाई पनि ठूलो प्रेरणा मिल्यो" भनेका भए उनको इज्जत घट्ने होइन, अरू बढ्ने थियो। अनि, कुनै पत्रिका, रेडियो या टेलिभिजनको समाचार टिपेर आफ्नै जसरी प्रस्तुत गर्ने स्थापित समाचार संस्थाका सम्पादकहरूले भावी पुस्ताले त्यस्तो अभ्यासबाट के सिक्ला भनेर एकपल्ट सोचिदिए राम्रो हुने थियो। त्यसमा पनि चोरीबारे समाचार लेख्ने र आलोचना गर्ने पेशा बोकेका पत्रकारले आफैँ चोर काम गर्नु युक्तिसङ्गत हुनै सक्दैन।

यति भनिसकेपछि, मैले यसै पुस्तकमा सङ्गृहीत एउटा स्तम्भ-निबन्ध *'मेरो जिन्दगी, मेरो विश्वास'* मा चर्चा गरिसकेको सोही शीर्षकको पुस्तकको परिचय खण्डबारे अलिकति उल्लेख गर्नु उपयुक्त हुनेछ। एन्टेना फाउन्डेसन र खास गरी त्यसका निर्देशक मधु आचार्यले 'मेरो जिन्दगी, मेरो विश्वास' कार्यक्रमलाई

कर्ण शाक्य र गगन थापाको सिको गर्दै आफ्नै मौलिक सोचका रूपमा प्रस्तुत गरेका भए पनि त्यसको वास्तविकताबारे धेरै कम नेपालीले मात्र थाहा पाउने थिए। तर, सो पुस्तकको परिचयमा आचार्यले अत्यन्त इमानदारीपूर्वक अमेरिकाको प्रख्यात न्यासनल पब्लिक रेडियोमा प्रसारित हुने 'दिस, आई बिलिभ' कार्यक्रमबाट 'मेरो जिन्दगी, मेरो विश्वास' प्रेरित भएको र सो शृङ्खला त्यसैको नेपाली संस्करण भएको बताएका छन्। त्यस्तो इमानदारीबाट हामी सबैले सिक्दा निश्चय पनि त्यसले सकारात्मक सोच मात्र होइन, व्यक्तिको इमानदारी र विश्वसनीयतालाई पनि बढाइदिनेछ। भौतिक भए पनि बौद्धिक भए पनि चोरी आखिर चोरी हो।

*कान्तिपुर दैनिक, २०६६ मङ्सिर २३*

# *(अ)बौद्धिक बेइमानीलाई*
# कर्ण शाक्य र गगन थापाले दिएका जवाफहरू

## नैतिक बेइमानी

● कर्ण शाक्य

रवीन्द्र मिश्रज्यू, आजकल म तर्क-वितर्क र वादविवाद गरेर समय खर्च गर्दिनँ। तर, तपाईं जस्ता हितैषी मित्रले मेरो बारे केही टीकाटिप्पणी गर्नुभएको हुँदा मैले यो पत्र लेख्दै छु। हामी सबैलाई आफूले गरेको काम र योगदानबारे चर्चा गर्न मन लाग्छ, जुन अस्वाभाविक होइन। तर, च्याउ जस्तो उम्रिरहेको नेपालको समाजसेवाको भीडमा आफ्नो कामलाई अर्कोको काँधमा टेकेर वा चढेर प्रदर्शन गर्नुपर्दैन। यो बौद्धिक बेइमानी मात्र होइन, नैतिक बेइमानी पनि हो।

साँच्चै भन्नुपर्दा, तपाईंले मलाई दिनुभएको टिप्पणीभन्दा

पनि गगन थापालाई लक्ष्य गरी लेख्नुभएको प्रतिक्रिया मलाई पटक्कै मन परेन। किनभने, नेपालमा हिजोआज सकारात्मक राजनीतिको दिवालिया भइरहेको छ। यस्तो अवस्थामा सौभाग्यवश गगन थापा जस्ता एउटा सक्षम युवा नेता देखा परेका छन्। तपाईं जस्ता विवेकशील चिन्तकले त त्यस्ता राष्ट्रिय स्तरका नेतालाई प्रोत्साहन पो गर्नुपर्ने! 'उनले मेरो भावना चोरे' भनेर लाञ्छना लगाउनु के ठीक कुरा हो? देश विकास गर्ने हो भने भाषण, लेखन र केही सामाजिक क्रियाकलापले मात्र पुग्दैन,'स्टेट्सम्यान' हरू आवश्यक पर्छन्। गगन थापा एउटा 'स्टेट्सम्यान' का रूपमा स्थापित हुन सक्ने सक्षम युवा नेता हुन्। त्यस्ता व्यक्तिहरूलाई हामीले प्रोत्साहन गर्नुपर्छ। जहाँसम्म उनले तपाईंको विचार चोरे भन्ने कुरा छ, त्यसमा मेरो आपत्ति छ। हुन त उनले तपाईंको विचार लिए/लिएनन्, मलाई थाहा छैन; तर लिइहालेको भए पनि तपाईं जस्तो स्वच्छ, पवित्र समाजसेवी हुन

चाहनेले यस्ता कुरा उठाउन मिल्दैन। एउटा समाजसेवी त आफ्नो भावना अरूले साट्यो भने खुशी पो हुन्छ त! यदि तपाईंले गगन थापा जस्ता प्रतिष्ठित व्यक्तिको काँधमा टेकेर आफ्नो कार्यक्रमको प्रचार गर्न खोज्नुभएको हो भने यो धेरै दुःखद कुरा हो।

जहाँसम्म *द पावर अफ पजटिभ थिङ्किङ*को कुरा छ, मैले थुप्रै त्यस्ता व्यक्तित्व विकासका किताब देखेको छु। तर इमानदारीसाथ भन्नुपर्दा, मैले ती किताब पढेको छैन। मलाई किताब पढ्न असाध्यै अल्छी लाग्छ र किताब पढ्ने धैर्य पनि ममा छैन। सायद त्यसैले होला, म सधैँ स्कुल र कलेजको परीक्षामा तृतीय श्रेणीमा मात्र उत्तीर्ण हुन्थेँ। *सोच* र *खोज* मेरो आत्मकथामा आधारित किताबहरू हुन्। आफूले भोगेका घटना र साँचेका अनुभवलाई मैले पाठकसमक्ष पस्केको हुँ।

स्मरण रहोस्, मेरा किताबहरू त्यस्ता व्यक्तित्व विकासका प्रवचनात्मक दार्शनिक पुस्तक होइनन्।

मेरा किताबहरू त आम मानिसले पढ्ने साधारण स्तरका पुस्तक मात्र हुन् । म तपाईं जस्तो ठूलो लेखक पनि होइन । त्यसैले मेरो किताबमा थुप्रै कमी-कमजोरी होलान् । र, मैले आफूलाई कहिले लेखक र चिन्तकको रूपमा सोचेको पनि छैन ।

म तपाईं जस्तो महान् समाजसेवी पनि होइन । मैले केही सामाजिक काम गरेर आफूलाई आदर्शवान्, नैतिकतावान् र निःस्वार्थ मान्छे भन्ठानेको छैन । म एउटा आम मान्छे हुँ । आम मान्छे जस्तै म पनि स्वार्थी छु । तर, म आफ्नो स्वार्थपूर्ति गर्न अरूलाई हानि पुऱ्याउँदिनँ । तर मलाई गर्व छ, अहिलेसम्म मैले जिन्दगीमा कहिले कसैको काँधमा टेकेर वा चढेर माथि उक्लने प्रयास गरेको छैन ।

जुन बेला तपाईंबारे दरबारसित मुछेर थुप्रै लेख छापिए, त्यस बेला मलाई दुःख लागेको थियो । 'विदेशमा बसोबास गरेर नेपालमै फर्की केही गरौँ भन्ने भावना बोकेका रवीन्द्र मिश्र जस्ता सपूत

नेपालीलाई आलोचना गर्‍यो भने को प्रवासी नेपालमा आउँछ' भनेर मैले ठाउँठाउँमा कुरा उठाउने गर्थें। तपाईंको योगदानबारे नेपालमा मात्र होइन, अमेरिकाका विभिन्न रेडियो र पत्रपत्रिकाका अन्तर्वार्तामा समेत उल्लेख गरेको थिएँ। तर यहाँ विडम्बना के छ भने, आफ्नै आँखाले र कानले आफ्नो प्रशंसा सुनेपछि मात्र मानिस खुशी हुँदो रहेछ।

तपाईंले ममाथि हिजोआज 'सकारात्मक सोचबारे थुप्रै भाषण दिएर हिँड्छ' भनी टिप्पणी गर्नुभयो र साथै '*द पावर अफ पजटिभ थिङ्किङ* किताबबारे उल्लेख गरेन' भनी लाञ्छना पनि लगाउनुभयो। हो, हिजोआज म स्कुल र कलेजहरूमा विद्यार्थीहरूलाई सकारात्मक सोचबारे 'लेक्चर' दिन जान्छु। युवा र विद्यार्थीबीच जान मलाई किन मन पर्छ भने, यदि मैले उनीहरूको हृदयमा सकारात्मक सोचको एउटा सानो मैनबत्ती पनि बाल्न सकें भने अरू हजारौं मैनबत्ती बल्न सक्छन्। त्यसैले म आजकल स्वस्फूर्त रूपले

स्कुल र कलेजमा लेक्चर दिन जान्छु। के मैले यो नराम्रो काम गरेँ?

अर्को महत्त्वपूर्ण कुरा के हो भने, 'सकारात्मक सोच' भन्ने शब्द र भावना कुनै एउटा लेखक र कृतिको पेवा होइन। यो त सर्वमान्य दर्शनको कुरा हो। गीतादेखि रामायणसम्ममा सकारात्मक सोचबारे उल्लेख छ। के कसैले सकारात्मक सोचको नाममा किताब लेख्दैमा त्यो शब्द नै उसको हुन्छ र? यदि त्यसो भएको भए, मैले *खोज* भन्ने एउटा किताब लेखेको थिएँ र आजकल कान्तिपुर टेलिभिजनमा 'खोज' नामक कार्यक्रम सञ्चालन भइरहेको छ, के मैले त्यो शब्दको 'कपिराइट' पाउनुपर्छ भनेर दावी गर्ने? तपाईं जस्ता प्रसिद्धि कमाएका लेखकलाई यस्ता कुरा मैले भनिरहनुपर्दैन। माफ गर्नुहोला, म एउटा साधारण व्यापारी र उद्यमी भएर पनि एउटा लेखक हुने साहस गरिरहेको छु र तपाईं जस्ता एउटा सच्चा चिन्तक र लेखकलाई प्रतिक्रिया दिन खोजिरहेको छु।

यदि मबाट यहाँ कुनै अपशब्द प्रयोग भएको छ भने कृपया माफ गरिदिनुहोला ।

धन्यवाद !

*कान्तिपुर दैनिक, २०६६ मङ्सिर २४*

**(अ)बौद्धिक टिप्पणी**

● गगन थापा

आदरणीय रवीन्द्र मिश्रज्यू, २०६६ मङ्सिर २३ गते *कान्तिपुर*मा प्रकाशित तपाईंको लेख पढेपछि तपाईं र आम पाठकमा समेत भ्रम नपरोस् भन्नका खातिर यो प्रतिक्रिया लेख्न आवश्यक ठानेको छु। मेरो राजनीतिक तथा सामाजिक यात्रामा कुनै गल्ती नहोस् भनेर सचेत गराउन तपाईंले लेखमार्फत गर्नुभएको खबरदारीलाई मैले आफूप्रतिको सद्भाव र विश्वासकै रूपमा लिएको छु र त्यसका निम्ति तपाईंलाई धन्यवाद ।

तपाईंको स्तम्भको म नियमित पाठक हुँ र यहाँहरूले प्रारम्भ गर्नुभएको हेल्प नेपाल नेटवर्कको 'नेपालका लागि नेपालीले गरौँ' भन्ने अभियानको शुभचिन्तक र प्रशंसक पनि हुँ। जीवनका विभिन्न मोडमा भेटिएका यस्तै निःस्वार्थ व्यक्ति र संस्थाहरूले नै मेरो सामाजिक जीवनमा उत्साह र प्रेरणा प्रदान गर्दै आएका छन्। तपाईं र कर्ण शाक्य दुवै मेरा निम्ति प्रेरणाका स्रोत हुनुहुन्छ। यस्तै अभियानको प्रेरणा र रुम टु रिडका जन उडको पुस्तक पढेपछि मसहित केही युवाले पढ्नबाट वञ्चित भएकाहरूलाई केही सहयोग गर्न सकिन्छ कि भन्ने मनसायले 'नेपाल एजुकेसन फस्ट' अभियान शुरू गर्ने निधो गरेका हौँ। यसै अन्तर्गत अहिले हामी चितवनको माडीमा विद्यालय बनाउँदै छौँ। यो अभियान कुनै गैरसरकारी संस्था वा दातृ निकायसँग जोडिएको छैन, न यसमा एक रुपैयाँ पनि सरकारी-प्रशासनिक खर्च नै विनियोजित छ। यो तपाईंहरू जस्तै धेरैबाट सिकेको हो र यो नाम वा

यसको कामको प्रकृति कसैसँग मिल्न गएमा अहिले नै क्षमा माग्न चाहन्छु ।

जहाँसम्म 'भाइबहिनी' अभियानसँग जोडेर लेखमा मलाई बौद्धिक बेइमानको रूपमा हेर्नुभएको छ, यसबारे केही प्रस्ट पार्न चाहन्छु । भाइबहिनी अभियानलाई मैले कहिले आफ्नो मौलिक अभियानको रूपमा व्याख्या गर्ने धृष्टता गरेको छैन । यही नाममा हेल्प नेपालले जस्तै अनेकौँ व्यक्ति र संस्थाले अभियान थालेको मलाई थाहा छ ।

बूढानीलकण्ठ स्कुलका पूर्वविद्यार्थीहरू धेरै पहिलेदेखि भाइबहिनी बनाएर यस्तै अभियानमा क्रियाशील छन् भने, अमेरिकामा बसोबास गरिरहेका हरिमान श्रेष्ठले एक दशकअघिदेखि प्रत्येक वर्ष एक जनालाई भाइबहिनी अभियानकै नाममा पढाउने गरेका छन् र चार वर्षदेखि हेल्प नेपालले चलाएको यो अभियान यसैका केही उदाहरण हुन् । मैले जानकारी नपाएका अरू पनि कैयौँ होलान् । प्रचार नगरीकन गर्नेहरू पनि धेरै

होलान्। तपाईं र मेरो कलम र दृष्टि नपुगेका धेरै ठाउँ होलान्। र, मैले शुरू गरेपछि मेरो नाम नलिईकन गर्नेहरू पनि प्रशस्तै होलान्। अब तपाईंको व्याख्यामा सम्भवत: तिनीहरू पनि बौद्धिक बेइमान वा चोर ठहरिएलान्।

म नेपाललाई सुन्दर समृद्ध बनाउन सकिन्छ र त्यो नेपालीबाट सम्भव छ भनेर राजनीतिक सङ्घर्ष गरिरहेको एउटा युवाले कम से कम अरू मौका पाएका नेपालीले मौका नपाएका नेपालीलाई सहयोग गरौँ भनेर आह्वान गर्नुपूर्व आफैँबाट थालनी गरेमा मात्रै ममा त्यो नैतिक धरातल रहन्छ भन्ने लागेर नै यो अभियान थालेको हुँ। यसै क्रममा, अपङ्गता भएका एक बाबुकी छोरीलाई आफू अभिभावक भएर पढाउन शुरू गरेको छु। मैले यो आफ्नो अभियान हो भन्नुको र यसको प्रचार गर्न चाहनुको एउटा ध्येय म जस्तै अन्य युवाले पनि यस्तो थालनी गरून् र त्यो एक व्यक्तिबाट पनि सम्भव छ भन्ने ज्ञान सबैमा हुन

सकोस् भन्ने पनि हो। जसरी तपाईंहरू लगायत धेरैले थालेका कामका कारण मलाई प्रेरणा भयो, त्यसै गरी मेरो यो थालनीले अरूहरूलाई पनि थप उत्साह मिलोस् भन्ने चाहना हो। सबै नेपालीले बुझ्ने, सजिलो र धेरैले प्रयोग गरेको शब्दावली भएकाले सजिलोकै लागि मैले 'भाइबहिनी' अभियान भनेको हुँ। यसमा मेरो कुनै स्वार्थ छैन। असल नियतले शुरू गरेको यो असल काम नै हो भन्ने लाग्छ। तर, यसमा हेल्प नेपालको दावी रहेपछि म त्यो नाम छोडेको जानकारी गराउन चाहन्छु; तपाईंको नाम तपाईंसँगै रहोस्। यद्यपि भाइबहिनीहरू पढाउने र त्यस्तो कार्यका लागि अरूहरूलाई आग्रह र प्रोत्साहन गर्ने मेरो अभियान भने थप उत्साहका साथ निरन्तर जारी रहने प्रतिबद्धता जनाउन चाहन्छु।

निश्चय पनि एउटा स्वच्छ छवि भएको स्थापित सञ्चारकर्मी र समाजसेवीले एउटा राजनीतिकर्मीलाई 'बौद्धिक चोर' भनेपश्चात् जनमत र पाठक तपाईंकै

पक्षमा उभिनेमा कुनै शङ्का छैन। त्यसमा पनि अहिलेको दुर्गन्धित र निराशाजनक राजनीतिक वातावरणमा समग्र राजनीतिकर्मीप्रतिको आम धारणा पनि यस्तै छ। तर पनि मलाई राम्रो कुरा सिक्नका लागि कुनै सङ्कोच छैन र यसलाई चोरी नै भन्नुहुन्छ भने पनि कुनै गुनासो छैन। कल्याणकारी कार्यले मलाई आत्मसन्तोष दिलाउँछ। समाजमा भएको नकारात्मक चिन्तनलाई सकारात्मकतर्फ रूपान्तरण गर्ने प्रयास अनुरूप मैले यस किसिमका कार्यलाई थप निरन्तरता दिनेछु। मेरो विचारमा यस्ता कार्य जसले गरे पनि, जुन नाममा गरे पनि हुन्छ र यस्ता नाम या काममा कुनै व्यक्ति या संस्थाको ठेक्का रहन्छ र हुनुपर्छ भन्ने मलाई लाग्दैन। किनकि, यस्ता कार्य सबैका हितका लागि गरिएका हुन्छन्। यस्तो कार्य गर्दा तपाईंले भनेझैं यो काम (अ)बौद्धिक बेइमानी हुन्छ या तपाईंको टिप्पणी (अ)बौद्धिक टिप्पणी हुन्छ, यो छुट्ट्याउने जिम्मा फेरि पनि पाठकहरूमा नै

छ ।

उही तपाईंको शुभचिन्तक,

गगन थापा

*कान्तिपुर दैनिक, २०६६ मङ्सिर २५*

# प्रतिरक्षात्मक हुन चाहन्नँ

२०६६ मङ्सिर २३ गते मेरो स्तम्भ 'नितान्त व्यक्तिगत' मा छापिएको *(अ)बौद्धिक बेइमानी* शीर्षक आलेखबारे कर्ण शाक्य र गगन थापा दुवैका प्रतिक्रियाहरूलाई मैले अत्यन्त गम्भीरतापूर्वक लिएको छु। सो आलेखमा मैले मूल रूपमा नेपालमा बौद्धिक चोरीलाई जुन सहजताका साथ लिइन्छ, त्यसो गरिनु हुन्न भन्ने प्रसङ्गलाई उठाउन खोजेको थिएँ, जसमा अहिले पनि म विश्वस्त छु। सन्दर्भवश त्यसका मूल पात्र शाक्य र थापा बन्न गएका थिए। केही पाठकले आशङ्का गरेझैँ कुनै पनि हालतमा मैले उनीहरूबाट भएका राम्रा कामको अवमूल्यन गर्न खोजेको थिइनँ। सो कुरा सोही आलेखमा पनि स्पष्ट पारिएको छ। नेताहरूमा निहित 'इगो' (अहं) कै कारण राजनीति र देशले दुःख पाइरहेको बेला, 'मै

ठीक’ भनेर बुँदागत विवाद गर्दै जानु अत्यन्त गलत हुन जान्छ। त्योभन्दा राम्रो, म शाक्य र थापा दुवैमा पर्न गएको चोटप्रति नि:सङ्कोच क्षमायाचना गर्छु। त्यसका तीन कारण छन्।

पहिलो, शाक्य र थापा दुवै मेरा लागि सधैँ ठूलो प्रेरणाका स्रोत रहिआएका छन्। यस्तै नेपालीहरू हुन् जसले ‘नेपालीले नेपालकै लागि गर्नुपर्छ’ भन्ने म र म जस्ता अन्य कैयौँलाई निरन्तर ऊर्जा प्रदान गर्छन्। यो म अहिले मात्र भनिरहेको छैन; मैले आफ्ना आलेखहरूमा लेखेको र कैयौँ ठाउँमा बोलेको कुरा हो। त्यस्ता प्रेरणादायी नेपालीहरूलाई चोट पुऱ्याउँदा मलाई वास्तवमै दु:ख लागेको छ। भोलि उनीहरूको चरित्र बदलियो भने निश्चित रूपमा उनीहरूप्रतिको मेरो धारणा पनि बदलिनेछ, त्यो भिन्दै कुरा हो।

दोस्रो, हाम्रो समाज कसैले आलोचना गऱ्यो कि प्रतिरक्षात्मक भैहाल्ने समाज हो। राजनीतिदेखि लिएर साहित्य र पत्रकारितासम्म बारम्बार त्यस्तो प्रवृत्ति

व्यापक रूपमा देख्न सकिन्छ। धेरै मानिस अरू आक्रामक र तिक्ततापूर्ण ढङ्गबाट प्रतिरक्षात्मक हुने गर्छन्। सार्वजनिक काम नगरी चुप लागेर बस्ने हो भने भिन्दै कुरा, सार्वजनिक काम गरिसकेपछि त्यसको प्रशंसा र आलोचना दुवै हुन्छ, जसलाई सहजतापूर्वक ग्रहण गर्नुपर्छ। लेख्नेले चाहेको लेखेपछि भन्नेले पनि चाहेको भन्न पाउनुपर्छ। यद्यपि त्यो विषय र सन्दर्भभन्दा बाहिर नजानु राम्रो। त्यो नै सच्चा लोकतन्त्र हो।

तेस्रो, अङ्ग्रेजीमा एउटा भनाइ छ– 'जज योरसेल्फ थ्रु अदर्स आइज।' अर्थात्, आफ्नो मूल्याङ्कन अरूका आँखाबाट गर। मैले आफ्नो गत आलेखको मूल्याङ्कन शाक्य र थापाका आँखाबाट गर्दा, सम्भवतः सो विषय जुन ढङ्गबाट प्रस्तुत भयो त्यसरी नहुनुपर्थ्यो। कुनै पनि व्यक्ति सही र गलतको सङ्गम हो। त्यो प्राकृतिक नियमबाट कोही पनि पर जान सक्दैन। कोही पनि व्यक्तिले सधैँ सही काम गर्न सक्दैन।

त्यसमा पनि सकारात्मक सोचको अनुयायी भएकाले आलोचनालाई सहजताका साथ स्वीकार गर्दा सानो भइँदैन भन्ने मेरो मान्यता हो। यस अर्थमा म पटक्कै प्रतिरक्षात्मक हुन चाहन्नँ। यसबाट शाक्य र थापामा रहेको तिक्तता पखालिनेछ तथा शाक्य, थापा र यो पङ्क्तिकारका बीच 'यस्तो विवाद नभैदिएको भए हुन्थ्यो' भन्ने शुभेच्छुक पाठकहरू पनि खुशी हुनुहुनेछ भन्ने मैले आशा लिएको छु।

रवीन्द्र मिश्र

*कान्तिपुर दैनिक (पाठक मञ्च), २०६६ मङ्सिर २६*

# सौभाग्यलाई सम्झँदा

२०६६ पुस १ गते बुधबार म कार्यालय प्रवेश गर्नेबित्तिकै मेरा सहकर्मी पत्रकार शरद केसीले "सौभाग्य शाह आज बिहान हार्टअट्याक (हृदयाघात) बाट बितेछन्" भन्दा मैले जीवनमा कसैको मृत्युबाट कहिले पनि महशूस नगरेको झट्का महशूस गरेँ। मेरो सम्पूर्ण शरीर शिथिल भयो र म एक छिन निःशब्द भएँ। जन्म जस्तै मृत्युलाई पनि सहज र स्वाभाविक रूपमा ग्रहण गर्नुपर्छ भन्ने धारणा राख्ने यो पङ्क्तिकारले कतिपय निकटका व्यक्तिको मृत्युलाई सहजतापूर्वक नै ग्रहण गरेको थियो। तर, शाहको मृत्युको असर नितान्त फरक रह्यो। म सोच्न थालेँ, 'यो के भएको ! देशलाई ध्वस्त पार्ने चोर, फटाहा, भ्रष्ट अनि आदर्श र चेतनाहीनहरू चाउरी परुन्जेल बाँच्नुपर्ने, अनि सौभाग्य शाह चाहिँ पचास वर्ष पनि नपुग्दै मर्नुपर्ने !

धिक्कार छ यो विधिको विधानलाई !'

मैले टेबलमा झुकाइरहेको शिर उठाएपछि शरद केसीले भने, "कर्णालीका नक्षत्र थिए, गए !"

४८ वर्षीय मानवशास्त्री डाक्टर शाह विश्वविद्यालय कालदेखिका मेरा मित्र थिए र अघिल्लो दिन मङ्गलबार मात्र मैले उनलाई संयोगवश खाजा खाने बेला भेटेको थिएँ। हामीले एकै छिन राजनीतिक कुरा गर्‍यौँ र १०-१५ मिनेटको पैदल दूरीमा बसेर पनि हाम्रो भेट नभएकामा दुःखमनाउ गर्‍यौँ। "तिमी बिहान अलि ढिलो अफिस जाँदा रहेछौ, म एक दिन फोन गरेर आउँछु, अहिले म जान्छु है त" भनेर उनी एक छिनमा गए। अहिले मलाई लाग्छ, ममा उनीप्रति भएको श्रद्धाका कारण मात्र उनी साँच्चिकै जानुअगाडि हाम्रो त्यो संयोगपूर्ण भेट भएको रहेछ।

मुगुको विकट गाउँमा जन्मिएका सौभाग्य शाहले जिल्लास्तरीय प्रतिस्पर्धामा उत्कृष्ट भएपछि त्यति बेला

बेलायतीहरूद्वारा सञ्चालित काठमान्डुको बूढानीलकण्ठ स्कुलमा पढ्न पाएका थिए। त्रिभुवन विश्वविद्यालयबाट समाजशास्त्रमा सर्वोत्कृष्ट स्थान हासिल गरी स्नातकोत्तर पूरा गर्दा उनी राम्रा पत्रकार बनिसकेका थिए। त्यसपछि फुलब्राइट छात्रवृत्ति अन्तर्गत उनले अमेरिकाको विश्वप्रतिष्ठित हार्वर्ड विश्वविद्यालयमा मानवशास्त्रमा विद्यावारिधि गर्ने मौका पाए। सो छात्रवृत्तिको नियम अनुसार, सो छात्रवृत्ति पूरा गर्ने व्यक्तिले कम्तीमा दुई वर्ष आफ्नै देशमा गएर काम गर्नुपर्छ। तर, सो छात्रवृत्तिमा जाने धेरैले मौका पाए भने सो शर्त पूरा गर्दैनन्। त्यसमा पनि हार्वर्डको उत्पादन भएपछि, सो शर्त पूरा गर्न नचाहने हो भने, धेरै बाटा खुला हुने गर्छन्। तर आठ वर्ष हार्वर्डमा बिताएर विद्यावारिधि पूरा गरी शाह केही वर्षअघि उनी जस्तो पृष्ठभूमि भएका धेरैले हेय दृष्टिले हेर्ने त्रिभुवन विश्वविद्यालयमा पुरानो जागिर सम्हाल्न फर्किएका थिए। 'शाह रैछ; बेस्कन सम्पत्ति थियो होला अनि फर्कियो, नत्र काँ

फर्किन्थ्यो!' भन्लान् उल्टा नजरधारीहरूले। भन्दिइहालूँ, उनी अत्यन्त सामान्य स्तरका नेपाली थिए। 'हार्वर्डको डिग्री, मन्त्री, राजदूत हुने आशामा फर्किएको होला' भन्लान् कलुषित सोचधारीहरूले। त्यो पनि भन्दिइहालूँ, उनले कहिले कसैलाई खुशी पार्न लेखेको या काम गरेको यो पङ्क्तिकारलाई थाहा भएन।

उनी त्रिभुवन विश्वविद्यालय अन्तर्गत 'द्वन्द्व, शान्ति तथा विकास अध्ययन' का कार्यक्रम संयोजक थिए। विद्यार्थीहरूलाई पढाउँथे; प्राज्ञिक,पत्रकारितामूलक लेखनहरू गर्थे; एउटा इमानदार प्राध्यापकको जीवन बिताउँथे र जीविकोपार्जनका लागि विदेशी दाताहरूका लागि केही काम गर्थे। उनका सहकर्मी समाजशास्त्र विभागका उपप्राध्यापक सुरेश ढकाल भन्छन्, "त्रिभुवन विश्वविद्यालय र प्राज्ञिक क्षेत्रप्रतिको शाहको लगाव उदाहरणीय थियो।" त्रिविको नियमले अध्ययन बिदा आठ वर्षभन्दा बढी मिल्दैनथ्यो। तर, विद्यावारिधि सक्दा शाहले आठ वर्षको समय अलिकति नघाएका

थिए। त्यसैले उनलाई लामो समयसम्म विश्वविद्यालयमा हाजिर गर्न पनि दिइएन। ढकाल भन्छन्, "त्रिविको नियम नियतवश तोडेर आफ्नो जागिर कायम राख्दै बाहिर काम गर्ने प्राध्यापकहरू थुप्रै भएको ठाउँमा शाहलाई जे गरियो, त्यो उनको अपमान थियो। आफ्ना स्तरीय प्रकाशनहरू र हार्वर्डको डिग्री लिएर उनी कहीँ पनि जान सक्थे। तर, त्यति हुँदा पनि उनी त्रिविमै रहन चाहे। उनको मृत्यु वास्तवमै एउटा ठूलो क्षति हो। उनी इमानदार प्राध्यापकहरूको एउटा पुस्ताका प्रतिनिधि पात्र हुन्।" सौभाग्य शाह वास्तवमै 'नेपाली प्राज्ञ' भनेर विदेशीहरूमाझ गर्व गर्नयोग्य थोरै नेपाली विद्वान्हरूमध्ये एक थिए।

उनकी बूढी आमा र आफन्तहरूको मन चिर्ने रोदन र उनका दर्जनौँ विद्यार्थीको अश्रुपूर्ण उपस्थितिलाई छिचोल्दै आर्यघाटमा मैले उनको पार्थिव शरीरप्रति मनमनै श्रद्धाञ्जली अर्पण गर्दा, उनी बाँच्दा जसरी सधैँ मुस्कुराइरहेका, शान्त र सौम्य देखिन्थे, मृत्युशय्यामा

पनि त्यस्तै देखिन्थे। शाह लोकप्रियताका लागि कहिले पनि भीडसँग बहकिएनन्; उनले नागरिक समाजका नाममा कहिले पनि 'नागरिक राजनीति' गरेनन्। पक्का प्राज्ञका रूपमा उनले निःस्वार्थ ढङ्गबाट आफ्नो ब्रह्मले जे ठीक देखे त्यही लेखे। उनले परिस्थितिलाई सधैँ शान्त र सौम्य ढङ्गबाट निश्चित दूरीमा बसेर मूल्याङ्कन गरे। प्राज्ञिक र पत्रकारितामूलक लेखहरू उनले धेरै लेखेका भए पनि, पुस्तकाकारमा उनको एउटा मात्र कृति प्रकाशित छ। सन् २००८ मा प्रकाशित *सिभिल सोसाइटी इन अनसिभिल प्लेसेज : सफ्ट स्टेट एन्ड रेजिम चेन्ज इन नेपाल* यो देशको

गणतान्त्रिक रूपान्तरणका वर्षहरूको एउटा सबभन्दा वस्तुपरक, वास्तविक र गहकिलो विश्लेषणका रूपमा रहिरहनेछ। उनका लेखहरू पढ्न नपाएकाहरूले उनलाई चिन्न सो पुस्तक मात्र पढ्दा पनि हुन्छ, जहाँ नेपालको परिवर्तनबारे उनको दृष्टिकोण राम्रैसँग प्रतिविम्बित भएको छ। सो पुस्तकमा निहित नागरिक

समाजको भूमिकाको आलोचनालाई नागरिक समाजका कतिपय अगुवाले आग्रहपूर्ण अभिव्यक्तिका रूपमा हेरे। तर, जो आफैँ भीडको आग्रहबाट निर्देशित थिए, तिनले भीडभन्दा पर बसेर स्वार्थहीन ढङ्गबाट गरिएको विश्लेषणलाई 'आग्रहपूर्ण' भन्दा त्यसबाट आफ्नै पूर्वाग्रह प्रतिविम्बित भैरहेको थियो भन्ने बिर्सिएका थिए।

जे होस्, कुन वस्तुनिष्ठ र कुन आग्रहपूर्ण भन्ने कुरा सापेक्षित विषय हो। तर, यो श्रद्धाञ्जलीको मूल उद्देश्य सौभाग्य शाह गलत थिए या ठीक भन्नेभन्दा पनि उनी नेपाली समाजका लागि एउटा ठूलो उदाहरण थिए र उनीबाट हामी सबैले प्रेरणा लिन सक्छौँ भन्ने जिकिर गर्नु हो। उनको जस्तो पृष्ठभूमि र क्षमताका व्यक्तिले, आदर्श र इमानदारीको खडेरी परिरहेको यो देशमा जुन आचरण प्रस्तुत गरे, त्यसले देशप्रति जिम्मेवारीबोध गर्न चाहने भावी पुस्तालाई सधैँ ऊर्जा प्रदान गरिरहनेछ।

*नागरिक दैनिक, २०६६ पुस ३*

# भगवान् पनि हाँस्छन् होला

हालसालै एक दिन अनपेक्षित रूपमा डा. शुद्ध रौनियारको फोन आयो। उनले झन्डै एक दशकदेखि सञ्चालन गरेको सडक बालबालिकालाई खाना खुवाउने 'बाल भोजन' कार्यक्रमको म ठूलो प्रशंसक भए पनि हाम्रो कुराकानी र भेटघाट कहिले पनि भएको थिएन। घरअगाडिको एउटा दृश्यले उनलाई भित्रभित्रै जलन भैरहेको रहेछ; त्यसैले फोन गर्न नपाई कुनै भलाकुसारीबिना भन्न थाले, "हेर्नोस् न रवीन्द्रजी, यो त अति भयो। म यहाँ एउटा पाँचतारे होटेलको छेउमा बस्छु। होटेलमा एउटा धनाढ्य परिवारको घरको विवाह छ। बाहिर बाटोदेखि यसरी द्वारहरू बनाएर सिँगारिएको छ, कुरा गरेर साध्यै छैन। बाहिर त यस्तो छ भने भित्र कस्तो होला! पहिलेपहिले राजारानीको स्वागत गर्न पनि यस्तो तडकभडक

गरिएको हुँदैनथ्यो। सयौँ नेपाली बालबालिका तुइनमा झुन्डिएर नदी पार गर्दै स्कुल जान्छन्; सयौँ बालबालिका खान नपाएर मरिराखेका छन्। यस्तो पनि गर्ने हो? के गरेको यस्तो? यो देखेर त भगवान् पनि हाँस्छन् होला!"

उनले मनको पीडा पोखिसकेपछि व्यस्तताका कारण सङ्क्षिप्त कुराकानी गरेर हामीले संवाद टुङ्ग्यायौँ। मङ्सिरको महिना, विवाहको याम थियो। विवाह गर्ने र विवाहको निम्तो मान्न जाने अधिकांशले तडकभडक गर्ने समय हो यो। अधिकारको कुरा गर्ने हो भने, आआफ्नो गच्छे अनुसार सकेको तडकभडक गर्ने छूट सबैलाई छ। तर त्यो छूटको प्रयोग कुन हदसम्म गर्ने भन्ने आआफ्नो विवेकको विषय हो।

सन्न्यासी बन भन्दा कोही बन्नेवाला छैन। मदर टेरेसा जस्तै त्यागी हुनु महान् कुरा हो भन्दा पनि कसैले सुन्नेवाला छैन। सबै धनाढ्यलाई वारेन बफेट जस्तो उदार र परोपकारी हुनुपर्छ भन्यो भने तिनले

त्यस्तो विचारलाई विदेशी ह्वीस्कीको चुस्कीसँगै उडाइदिनेछन्। तर, समाजलाई सहृदयी र न्यायसङ्गत बनाउने हो भने धनको सीमा र त्यसको उपभोगका सम्बन्धमा भने सार्वजनिक रूपमा बारम्बार बहस गर्नुपर्ने भएको छ। धन व्यक्तिगत अधिकारको वस्तु मात्र हुनै सक्दैन।

अधिकांश स्थितिमा हिँड्नेहरूलाई साइकल, साइकल चढ्नेलाई मोटरसाइकल, मोटरसाइकल चढ्नेलाई मोटर, मोटर चढ्नेलाई अन्य शानदार वाहन चढ्ने रहर हुन्छ। आवास लगायत जीवनका अन्य आवश्यकताबारे पनि त्यही नियम लागू हुन्छ। त्यो नियमलाई जसले चाँडै तोड्न सके, ती सबै महान् हुन्। नेपालको परिप्रेक्ष्यमा राजनीतिक क्षेत्रमा डा. बाबुराम भट्टराई र परोपकारी क्षेत्रमा गरीबगुरुबालाई सस्तो शिक्षा उपलब्ध गराउने उत्तम सन्जेल या गाउँमा बसेर गाउँकै सेवा गर्ने महावीर पुन त्यसका ज्वलन्त उदाहरण हुन्। नाम सुनिएका र नसुनिएका त्यस्ता अरू धेरै नेपाली

छन् । तर, हामी अधिकांश त्यो बाटोमा हिँड्न सक्दैनौँ । जो त्यो बाटोमा हिँड्न सक्दैनन्, तिनले के चाहिँ बुझ्नु जरूरी छ भने, एउटा निश्चित विन्दुपछिको आर्थिक उपलब्धिलाई समाजमै फिर्ता नगर्ने हो भने दीर्घकालमा त्यो समाजले तिनको या तिनका सन्ततिको रक्षा गर्न सक्दैन । अर्थ आर्जन गर्ने स्वतन्त्रताका लागि यो सबभन्दा ठूलो चुनौती हो । त्यसैले सामान्यबाट शानदार वाहन चढिसकेपछि, र सामान्यबाट आलिसान महलमा सरिसकेपछि त्योभन्दा पर कतिसम्मको सम्पत्तिलाई आफ्नै भनेर सम्झने, मान्छेले सोच्नैपर्छ । हालै आफ्नो घरछेउको एउटा गरीब सरकारी विद्यालयलाई दुई लाख रुपैयाँ चन्दा दिन आयोजित सानो समारोहमा वरिष्ठ चिकित्सक एवं नागरिक समाजका एक अगुवा डा. सुन्दरमणि दीक्षितले भने, “जसले जेजति पाएको छ, त्यो यही समाजबाट पाएको हो र आफूलाई चाहिनेभन्दा बढी जेजति छ, त्यसमा यही समाजको हक लाग्छ । गर्दन काटेर कसैले दिनुपर्दैन; तर

आफूलाई चाहिनेभन्दा बढीबाट दिनु चाहिँ पर्‍यो।" उनको टिप्पणीमा साम्यवादी सोचको झल्को आउँछ। तर, त्यो धेरैको दृष्टिमा नकार्न गाह्रो हुने वास्तविकता हो। 'म बुद्धिमान् र मेहनती हुनाले या मेरा पुर्खाहरू धनी हुनाले मैले बढी पाएको हुँ; त्यसमा कसैले ईर्ष्या गर्न मिल्दैन' भनेर अनावश्यक धन भण्डारणको औचित्य दर्शाउन कम से कम मानवताको दृष्टिकोणबाट मिल्दैमिल्दैन।

अहिले धेरै उद्योगी-व्यापारी आफ्ना उद्योगधन्दा बन्द गर्नुपरेकामा, माओवादीहरूले जबरजस्ती चन्दा सङ्कलन गरेकामा ठूलो गुनासो गर्ने गर्छन्। त्यो सही हो। तर त्यत्तिकै सही के पनि हो भने, यो संसारको ८५ प्रतिशत सम्पत्ति सिर्फ १० प्रतिशत धनाढ्यको हातमा केन्द्रित छ र विश्वका ५० प्रतिशत गरीब चाहिँ विश्वको सिर्फ एक प्रतिशत सम्पत्ति मात्र बाँडचुँड गर्छन्। नेपालको सम्पत्ति वितरणबारे त्यस प्रकारको अध्ययन भएको मलाई थाहा छैन। तर, नेपालको

परिस्थिति पनि खासै फरक नहोला भन्ने सहजै अनुमान गर्न सकिन्छ। छिमेकी भारतमा ‘उदाइरहेको भारत’ बारे खूब चर्चा गरिन्छ। त्यहाँ, भारतका सबभन्दा धनाढ्य मुकेश अम्बानीको एक अर्ब डलर (लगभग ७५ अर्ब रुपैयाँ) लागतको विश्वमै सबभन्दा महँगो आवास निर्माण हुँदै छ। उनलाई त्यस्तो महल बनाउन राजनीतिक र आर्थिक स्वतन्त्रता छ र त्यो अधिकारबाट उनलाई कसैले वञ्चित गर्न सक्दैन। तर जुन देशमा करोडौँ नागरिक तीव्र गरीबीमा जीवन बिताउँछन् र तथ्याङ्कका आधारमा भन्दा ८० प्रतिशत नागरिक दिनको ७५ रुपैयाँभन्दा कममा जीवन निर्वाह गर्छन्, त्यो देशमा विश्वकै सबभन्दा महँगो आवासका लागि अर्बौं खर्च गर्नु शोभायमान कुरा हो कि होइन? त्यस्तो परिस्थितिमा अर्थोपार्जन र उपभोगको स्वतन्त्रताको सीमालाई मानवीय नैतिकताको डोरीले बाँध्ने कि नबाँध्ने? धनीहरूले स्वचेतनाबाट त्यसरी प्रश्न गरिदिने हो भने, कुनै पनि समाजमा

माओवादीहरू सम्भवत: जन्मँदैजन्मँदैनन् ।

अढाई सय, तीन सय वर्षअघि हातखुट्टामा हतकडी र नेल लगाएर अफ्रिकाबाट लाखौँ कालालाई दासका रूपमा काम गर्न बेलायत लैजाने प्रचलनलाई त्यति बेलाका धनाढ्यहरूले सामान्य र पाच्य मान्थे । तर आज आएर कसैले पनि त्यसको औचित्य दर्शाउन सक्दैन । त्यसै गरी आजभन्दा वर्षौंवर्षपछि, यदि जलवायु परिवर्तनले संसारमा कुनै अनिष्ट लेराएन अनि मानव समाज चाहिँ बढी चेतनशील बन्दै गयो भने, हाम्रा सन्तानहरूले भन्नेछन्, “हरेक दिन खान नपाएर मान्छे मरिरहेको देख्दादेख्दै, हाडछाला सुकेर मर्न लागेका बालबालिकाको अनुहारमा भुनभुन झिँगा भन्किरहेको हेर्दाहेर्दै हाम्रा पुर्खाहरूले सम्पत्तिका भकारीमाथि भकारी थोपर्दै मानवीय संवेदनाहीन जिन्दगी कसरी जिउन सके होलान् !”

यो लोकतन्त्र र स्वतन्त्रतामाथिको प्रश्न हुँदै होइन । जसरी कालाहरूलाई हतकडी र नेल लगाएर दास

बनाइने प्रचलनको कुनै दृष्टिकोणबाट पनि अहिले औचित्य दर्शाउन सकिँदैन, त्यसै गरी वर्तमान विश्वको सम्पत्ति वितरण प्रक्रियाको कुनै पनि हालतमा औचित्य दर्शाउन सकिँदैन। यसको परिणति अन्ततोगत्वा घातक हुने निश्चित छ। हामी बिस्तारै आफ्नो र आफ्ना छोरा-नातिको चिहान आफैँ खनिरहेका छौँ।

डा. शुद्ध रौनियारले कुनै धनाढ्य परिवारले पाँचतारे होटेलमा निःसङ्कोच आयोजना गरेको भव्य विवाह समारोहबारे व्यक्त गरेको जलन कुनै ईर्ष्या या अप्राप्य समृद्धिप्रतिको आकाङ्क्षाको परिणाम होइन। त्यो वास्तवमै मानवीय चेतनाको उपज हो। रौनियारले भनेझैँ तुइनमा झुन्डिएर नदी काट्दै बालबालिका स्कुल जाने या झाडापखालाले भटाभट मान्छे मर्ने देशमा कुनै पनि धनाढ्यले आफूले कमाएको सम्पत्तिलाई कुन हदसम्म आफ्नै मात्र भनेर सोच्ने? प्रदूषित, धूलाम्मे र खाल्डैखाल्डाले भरिएको सडकमा पाँचतारे होटेलमा बनाइएका द्वारहरू पार गर्दै विवाह मण्डपमा प्रवेश

गर्ने दुलहा-दुलहीले त्यहाँ पूरा गर्ने सम्पूर्ण धार्मिक विधिहरूको के अर्थ ! सम्पूर्ण धर्म गुमाएर, धार्मिक अनुष्ठानमा सहभागी हुनुको कुनै अर्थ रहँदैन। ती सबैले बुझे हुन्छ, अहिले निर्लज्जतापूर्वक देखाएको शानको सराप तिनका छोरा-नातिकै पुस्तामा एक या अर्को ढङ्गबाट प्रकट हुनेछ।

केही दिनअघि भूतपूर्व राजदूत दुर्गेशमान सिंहले एउटा भिन्दै प्रसङ्गमा टेलिफोन गर्दा, भूतपूर्व अमेरिकी राष्ट्रपति जोन एफ केनडीको राष्ट्रपतीय उद्घाटन भाषणबाट एउटा मार्मिक र मननयोग्य अनुच्छेद कण्ठै सुनाएका थिए। सो अनुच्छेदको अन्तिम वाक्यलाई यहाँ निष्कर्षका रूपमा उद्धृत गर्नु सान्दर्भिक सम्झिएको छु, “यदि स्वतन्त्र समाजले बहुसङ्ख्यक गरीबको हित गर्न सकेन भने, त्यसले अल्पसङ्ख्यक धनीको कहिले बचाउ गर्न सक्दैन।”

*कान्तिपुर दैनिक, २०६६ पुस ८*

# यस्तो डाक्टर पो डाक्टर

यो आलेख तयार पार्दासम्म काठमान्डुको वीर अस्पतालका आवासीय डाक्टरहरूले प्रत्यक्ष रूपमा मान्छेको जीवन-मरणसँग गाँसिएको अस्पतालको आकस्मिक सेवा बन्द गरेको कैयौँ दिन भैसकेको छ। त्यसअघि देशभरका डाक्टरहरूले आकस्मिक सेवाबाहेक सम्पूर्ण स्वास्थ्य सेवा बन्द गर्दा दशौँ हजार बिरामीले दु:ख पाए। डाक्टरहरूले यसरी स्वास्थ्य सेवा ठप्प पारेका यी पहिला घटना होइनन्। यो आलेख चाहिँ मूल रूपमा डाक्टरहरूको देशव्यापी हडतालको प्रसङ्गसँग जोडिएको छ। नेपाल चिकित्सक सङ्घका अनुसार, गत एक वर्षमा मात्रै रुन्डै ५० पटक स्वास्थ्यकर्मी र संस्थामा आक्रमण भैसकेको छ। डाक्टरहरूको पछिल्लो देशव्यापी हडताल खास गरी स्वास्थ्यकर्मीको सुरक्षासँग सम्बन्धित छ। त्यसको साथमा, उनीहरूलाई सरकारले

पर्याप्त सरसुविधाको व्यवस्था नगरिदिँदा डाक्टरहरूको विदेश पलायनबाट देशको स्वास्थ्य सेवामा पर्न सक्ने नकारात्मक असरबारे पनि गम्भीर चिन्ता लागेको छ । सोही चिन्ताका कारण उनीहरूले स्वास्थ्यकर्मीहरूको सुरक्षाका अलावा उनीहरूको नियुक्तिमा पदीय स्तर वृद्धि, पाँच प्रतिशत स्वास्थ्य सेवा शुल्क खारेजी अनि निश्चित सेवा अवधि पूरा गरेका डाक्टरलाई एउटा सवारी साधन खरीद गर्दा लाग्ने शुल्कमा छूट दिनुपर्ने माग पनि गरेका छन् । माने लिऊँ, त्यति गरेपछि डाक्टरहरू विदेश पलायन हुँदैनन् या कम हुन्छन् ।

डाक्टरहरूको सुरक्षाको माग अत्यन्त जायज छ भन्नेमा कुनै शङ्का छैन । उनीहरूको सुरक्षाका लागि सरकार र समुदायले सकेको गर्नैपर्छ । तर, डाक्टरहरूका अन्य मागबारे पर्याप्त बहस गर्ने ठाउँ छ । मागैमागको भारीले थिचिएर घस्रिरहेको सरकारसमक्ष पढेलेखेका र तुलनात्मक रूपमा चेतनशील ठानिने डाक्टरहरूले अत्यावश्यकीय सेवामा बन्द-हडताल गर्न नपाउने

कानून तोड्दै बन्द गर्न हुन्थ्यो कि हुन्थेन, त्यो उनीहरूले बुझ्ने कुरा थियो। तर अफसोच, तिनले बुझेनन्। त्यस्ता डाक्टरहरूलाई तुलनात्मक रूपमा कम शिक्षित र कम चेतनशील यातायात व्यवसायी या राजनीतिक दलका कार्यकर्ताहरूले बन्द-हडताल गर्दा गुनासो गर्ने कत्ति पनि नैतिक अधिकार छैन। हडतालकारी डाक्टरहरूले डाक्टर हुनुको नैतिक धरातल पूर्ण रूपमा गुमाउँदै गैरहेका छन्। तिनले आफूलाई देशका विवेकहीन अन्य हडतालकारीको तहमा झारेका छन्। त्यस्ता डाक्टरहरूलाई डाक्टर भनेर श्रद्धा गर्न पनि नसकिने अवस्था आइसकेको छ।

डाक्टरहरूले हडताल गरेको साँझ यो पङ्क्तिकारलाई लागिरहेको थियो, यो देशमा हडतालको प्रचलन यति व्यापक भैसक्दा पनि हडताल गर्नेहरूकै समूहभित्रबाट कहिले कसैले 'हडताल त गरियो; हाम्रा पनि त यस्तायस्ता नैतिक दायित्व हुन्छन् नि' भनेर बोलेको या लेखेको थाहा भएन। त्यसरी बोल्दा या लेख्दा सबै

सहधर्मीहरू चिढिन्छन् अनि भोलि आफैँलाई पर्दा सहयोग गर्ने कोही पनि नहुन सक्छ भन्ने भयका कारण पनि सबै 'तैँ चुप, मै चुप' भएको हुनुपर्छ। त्यसैले लाग्यो, कैयौँ डाक्टरलाई गरीब बिरामीको आँसुले पोले पनि उनीहरू मौन बसेको हुनुपर्छ।

तर, भोलिपल्ट बिहान *नागरिक* दैनिकमा पत्रकार मित्र गुणराज लुइँटेलद्वारा लिखित 'डा. पाण्डेको प्रेस्क्रिप्सन' शीर्षकको सङ्क्षिप्त समाचारले भने मनै फुरुङ्ग बनाइदियो। लाग्यो, वास्तविक र सार्वजनिक हित हुने पत्रकारिता भनेको यो पो हो त ! आफू कार्यरत बीबीसी नेपाली सेवा लगायत अधिकांश सञ्चार माध्यमले हडतालकारीको भनाइ के छ र बिरामीहरूले कति दुःख पाए भनेर मात्र समाचार सम्प्रेषण गरिरहेको बेला लुइँटेलले चाहिँ बिरामी र डाक्टरहरूबीचको तिक्ततालाई कम गर्न के गर्न सकिन्छ होला भनेर एक जना वरिष्ठ र साथै इमानदार र आदर्श व्यक्ति डा. चक्रराज पाण्डेका

विचारहरू सम्प्रेषण गरेका रहेछन्। सबभन्दा पहिले पाण्डेका केही विचार उद्धृत गरूँ–

- बिरामीको मृत्यु भएपछि परिवारका सदस्य रोइरहेको देख्दा संवेदनशील अवस्थालाई ध्यानमा राखेर शुल्क फिर्ता गरिदिन्छु। ... हाम्रा दाजुभाइले घरबाट १० हजार ल्याएर मृत्यु भइसकेका सदस्यका लागि शुल्क तिर्दा मनमा थप चोट पर्नु स्वाभाविक हो।
- बिरामीको उपचारका क्रममा पहिलो शल्यक्रिया सफल नभएर दोस्रो गर्नुपर्‍यो भने म पुनः शुल्क लिन्नँ।
- यो अभियानलाई मैले आफ्नै 'लोभविरुद्धको लडाइँ'को संज्ञा दिएको छु।
- म राति १२ बजे पनि खबर पाउनासाथ अस्पताल पुग्छु।
- उपचार मानवताका लागि गर्ने हो। मैले

उपचार गरेका १० मध्ये पाँच जनाले शुल्क तिरेनन् भने पनि म भोकै पर्दिनँ।

आफ्ना माग पूरा गराउन सम्पूर्ण पेशाकर्मी आन्दोलनमा उत्रिरहेको बेला एक प्रतिष्ठित डाक्टरले सार्वजनिक रूपमा त्यस्ता विचारहरू व्यक्त गरेपछि उनका धेरै सहधर्मीले 'खूब आदर्शवादी भएको' भनेर उनीप्रति व्यङ्ग्य गरे होलान्। तर, यो समाजमा डा. पाण्डे जस्ता आदर्श व्यक्तिहरू नभै भएको छैन र त्यस्ता व्यक्तिहरूलाई हामी जस्ता सञ्चारकर्मीहरूले प्रकाशमा नल्याई भएको छैन। निःसन्देह, डा. पाण्डेका विचारहरूले अरू धेरै डाक्टरलाई डाक्टर हुनुको आदर्श र जिम्मेवारीबोध गराउन मदत पुऱ्याउँछन्।

विभिन्न माग राखेर हडताल गर्ने कतिपय डाक्टरले एसएलसी प्रथम श्रेणीमा पास गरेपछि, अब के पढ्ने भनेर आफन्तहरूले सोध्दा 'डाक्टर बनेर गरीब र दुःखीहरूको सेवा गर्ने' भनेको हुनुपर्छ। टेलिभिजनका अन्तर्वार्ताहरूमा पनि हामी धेरैले डाक्टर बन्ने आकाङ्क्षा

भएका किशोरकिशोरीले त्यसो भनेको सुनेकै छौँ। हरेक पेशाका आआफ्ना पेशागत आदर्श हुन्छन्। स्वाभिमानका साथ बाँच्ने र काम गर्ने हो भने, पेशागत आदर्शहरूको पालना गर्नैपर्छ। नेपाल जस्तो गरीबी नै गरीबीले भरिएको देशमा डा. चक्रराज पाण्डेले प्रेस्क्राइब गरेजति न्यूनतम आदर्श पनि अनुसरण गर्ने आँट छैन भने, त्यस्ता डाक्टरहरू डाक्टर नै नबनेको बेस। गरीब नेपालीहरूलाई तिनको कुनै काम छैन। ती जहाँजहाँ जानुपर्छ, गए हुन्छ। हो, खास गरी नयाँ डाक्टरहरूलाई गाह्रो छ; त्यसमा कुनै शङ्का छैन। तर, यो देशमा अधिकांश पेशाकर्मीलाई डाक्टरहरूलाई भन्दा धेरै गाह्रो छ। देश नै दुःखी भएपछि देशभित्रका सबैले दुःख त पाउने नै भए, जसमा हामी सबै पर्छौं। पत्रकारकै कुरा गर्ने हो भने, कैयौँ पत्रकार कुटिएका मात्र छैनन्, मारिएकै छन्। उनीहरूको स्थिति डाक्टरहरूको भन्दा धेरै नाजुक छ। के अब उनीहरूले पनि देशभरिका प्रकाशन र

प्रसारणहरू बन्द गरिदिने ? हामीजति पढेलेखेका र जानेबुझेकाहरूले पनि 'बन्दबाहेक माग पूरा गराउने अर्को विकल्पै छैन; बन्द गर्नु हाम्रो रहर होइन, बाध्यता हो' भन्न थाल्यौँ भने, स्पष्ट छ, यो देशमा बन्द, हडताल, हिंसा र द्वन्द्वको शृङ्खला कहिले पनि अन्त्य हुनेछैन । बीबीसी नेपाली सेवाका अन्तर्वार्ताकार जितेन्द्र राउतलाई नेपाल चिकित्सक सङ्घका अध्यक्ष डा. केदारनरसिंह केसीले हडतालको औचित्य दर्शाउने प्रयास गर्दै "हामी उपचारको सिलसिलामा गैरहेको चिकित्सकको गाडी तोडिन्छ, फोरिन्छ, चिकित्सकलाई कुटपिट गरिन्छ, त्यो चाहिँ संवेदनशील होइन ?" भनेर प्रतिप्रश्न गरे । उनले औँल्याएका बुँदाहरू संवेदनशील होइन भनेर कहाँ कसले भन्यो? तर त्यस्ता परिस्थितिलाई आधार मान्ने हो भने, यो देशमा सबै भनेजसो पेशाका मानिसहरूले वर्षका ३६५ दिनै देशभर बन्द र हडताल गरिदिए हुन्छ । किनभने, यहाँ उनीहरूले डाक्टरहरूको जस्तै या त्योभन्दा नराम्रो नियति भोगेका

छन् । के त्यसो गर्नु ठीक होला ? चिकित्सा जस्तो प्रत्यक्ष रूपमा मानवता र नैतिकतासँग गाँसिएको पेशा अँगालेको कुनै पनि डाक्टरलाई त्यस प्रकारको तर्क गर्न अप्ठेरो लाग्नुपर्ने हो ।

जहाँसम्म डाक्टरहरूको विदेश पलायनको कुरा छ, पाएसम्म सबैले विदेश जानुपर्छ, पढ्नुपर्छ, सिक्नुपर्छ, सकेदेखि अलिकति कमाउनुपर्छ । तर नेपाल जस्तो देशबाट डाक्टर बनेर डाक्टर हुनुको आदर्श पालना गर्ने हो भने, सकभर नेपालै फर्किनुपर्छ । हैन भने बाहिरै बसेर पनि थोरै तर अत्यन्त श्रद्धेय कतिपय नेपाली डाक्टरले जस्तै नेपाललाई विभिन्न ढङ्गबाट सहयोग पुऱ्याइरहनुपर्छ । चिकित्सा जस्तो प्रत्यक्ष रूपमा गरीबको पीडा र आँसुसँग जोडिएको पेशामा प्रवेश गरेर, पैसै मात्र कमाउने, सुविधै मात्र खोज्ने आकाङ्क्षा राख्ने हो भने, त्यस्ता डाक्टरहरू धनी देशतिरै पलायन भएको बेस । गरीब बिरामीको पीडाले नदुख्ने र आँसुले द्रवित नहुने मुटु छ भने तिनीहरूको नेपाल

बसाइ अस्पतालको चीसो छिँडीमा रात बिताउन बाध्य विपन्न नेपालीहरूप्रतिको व्यङ्ग्य मात्र हुनेछ ।

आफ्ना सारा सहधर्मी हडतालमा उत्रिएको बेला डा. पाण्डेले जे भने, त्यसले अरू हडतालकारी समूहभित्र रहेका आदर्श र आत्ममूल्याङ्कनमा विश्वास गर्ने इमानदार नागरिकहरूलाई पनि सरकारसँग केही माग्दा आफ्नो दायित्व चाहिँ पूरा गरिएको छ कि छैन भनेर सार्वजनिक रूपमा प्रश्न गर्ने आँट र साहस प्रदान गर्नेछ भन्ने आशा गर्न सकिन्छ । शिक्षकहरूले हडताल गर्दा शिक्षकभित्रैबाट, पत्रकारहरूले विरोध गर्दा पत्रकारभित्रैबाट, कर्मचारीहरूले बन्द गर्दा कर्मचारीभित्रैबाट र त्यसै गरी माओवादी या अन्य जातिगत, क्षेत्रगत समूहहरूबाट हिंसात्मक प्रदर्शनहरू हुँदा उनीहरूभित्रैबाट आआफ्ना दायित्व पनि पूरा गरिएका छन् कि छैनन् भन्ने प्रश्न गरिन थाल्यो भने सम्भवतः मन परी हुने बन्द-हडतालमा पनि स्वतः कमी आउनेछ । आउने दिनहरूमा हेरौँ, डा. पाण्डेको जस्तो आँट भएका

पेशाकर्मीहरू कति निस्किँदा रहेछन् ।

अन्त्यमा, यो पङ्क्तिकारले धेरै राम्रा र आदर्श डाक्टरहरू भेटेको छ या त्यस्ता डाक्टरहरूबारे सुनेको छ । ती सबैको यहाँ चर्चा गर्न सम्भव हुँदैन । तर हामी जस्ता सञ्चारकर्मीहरूका आँखा नपुगेका अरू कति धेरै डाक्टर होलान्, जसले डा. पाण्डेले जस्तै आफ्नै 'लोभविरुद्धको लडाइँ' लडिरहेका होलान् ! ती अनगिन्ती अज्ञात डाक्टरहरूप्रति सबै नेपाली नतमस्तक हुनुपर्छ । आशा गरौँ, लोभविरुद्धको लडाइँ लड्ने त्यस्ता डाक्टरहरूको चेतनाले डाक्टरहरूलाई मात्र होइन, अन्य पेशाकर्मीलाई पनि कठिन घडीहरूमा सार्वजनिक रूपमै आत्ममूल्याङ्कन गर्न प्रेरित गर्नेछ ।

*कान्तिपुर दैनिक, २०६६ पुस २२*

# अर्बपतिले आँसु झार्दा

आफ्नो विगतको स्थिति सम्झिँदा उनी भावुक भए र उनको गला अवरुद्ध भयो। अनि देशको वर्तमान स्थिति सम्झिँदा उनले भक्कानो फुटाए र आँसु झारे। खल्तीबाट रुमाल झिकेर आँखा पुछ्दै र अनुहार छोप्दै माइकबाट टाढा सरेर उनी एक छिन रोइरहे। यो कुनै नाटक थिएन र त्यो आँसुभित्र आडम्बरको लेश पनि थिएन। म श्रद्धाविभोर भएँ; अन्तर्वार्ता रिकर्डिङमा सघाइरहेका मेरा प्राविधिक मित्र विनोद गिरी अश्रुविभोर भए। एक छिनको मौनतापछि मैले अन्तर्वार्ताका लागि आमन्त्रण गरेका ती अतिथि फेरि बोल्न थाले।

"यत्रा सोझा नेपालीको, यस्तो सुन्दर देशको जुन हालत छ, त्यसले गर्दा म भावुक भएछु। हुन त राजनीति मेरो विषय होइन; तर पनि नेपाल संसारकै सबभन्दा सुन्दर देश हुनुपर्ने, संसारकै सबभन्दा सम्पन्न

देश हुनुपर्ने। अहिले यो छियाछिया, टुक्राटुक्रा र बीभत्स भएको छ। तैपनि म सङ्घर्ष गरिरहेको छु, देशको लागि केही गरूँ भनेर।”

उनले त्यसो भन्दा मलाई लागिरहेको थियो, त्यस्तो पीडा त देशका सबै शीर्ष र अन्य नेता भनाउँदाहरूलाई हुनुपर्ने थियो। देशको स्थितिका कारण भक्कानो फोरेर त तिनीहरूले आँसु झार्नुपर्ने थियो। एकपल्ट खुलामञ्चमा सबै भेला भएर क्वाँक्वाँ रोएर आत्मशुद्धि गर्नुपर्ने थियो। तर, तीमध्ये अधिकांश गोहीको आँसु मात्र बगाउँछन्। ती हरेक दिन एउटाले अर्कोलाई पछार्न षड्यन्त्र गर्छन् र त्यही क्रममा यो देशलाई बारम्बार उफार्छन्, थचार्छन् र बजार्छन्। टेलिभिजनमा हेर्दा पनि घीन लाग्ने हाँसो हाँस्छन्। थोत्रा चप्पल लगाएको विगतबारे न ती भावुक हुन्छन्, न आफैँले बिगारेको वर्तमानबाट ती आहत हुन्छन्। केही समयअघि एक महिला श्रोताले एउटा एफएम कार्यक्रममा भनेकी थिइन्, “मलाई त यिनीहरूको मुख हेर्न पनि नपरे

हुन्थ्यो जस्तै लाग्छ !" निश्चय पनि त्यो घृणा त्यसै जागेको होइन । तर विडम्बना नै भन्नुपर्छ, राजनीतिको जातै त्यस्तो, तैपनि मानिसका भीडहरू तिनकै पछि लाग्छन् ।

माथि चर्चा गरिएको भावुकता र भक्कानोको सन्दर्भ जोडिएको छ नेपालको सबभन्दा ठूलो सुपरमार्केट भाटभटेनीका मालिक मीनबहादुर गुरुङसँग । काठमान्डुको शिक्षण अस्पतालमा पाँच करोड रुपैयाँको लागतमा ( जसको खर्च पछि १० करोड रुपैयाँ पुगेको बताइएको छ) भव्य आकस्मिक कक्ष निर्माण गर्दै छन् भन्ने थाहा नपाएसम्म मैले उनलाई एउटा सफल व्यापारीका रूपमा मात्र चिनेको थिएँ । उनको सफलतालाई मैले असामान्य माने पनि प्रेरणादायी चाहिँ मान्न सकेको थिइनँ । व्यक्तिकेन्द्रित सफलतालाई प्रेरणाका रूपमा हेर्नु हुँदैन । किनभने, त्यसले मान्छेलाई स्वार्थी बन्न सिकाउँछ । त्यसैले होला, लोककल्याणकारी भावना नभएका व्यापारीहरूलाई मैले कहिले पनि श्रद्धाको

दृष्टिले हेरिनँ। 'व्यापारमार्फत मैले सयौँलाई रोजगारी दिएर देश र समाजलाई ठूलो योगदान पुऱ्याएको छु; स्कुल र अस्पताल खोल्दै हिँड्ने मेरो काम होइन' भनेर गरिने तर्कसँग म कहिले पनि सहमत हुन सकिनँ। सामान्यतया त्यस्ता व्यापारीले सेवाका लागि होइन, पैसाका लागि रोजगारी दिएका हुन्छन्। तिनमा मानवप्रेम कम र पूँजीप्रेम बढी हुने गर्छ।

मीनबहादुर गुरुङ त्यही वर्गका व्यापारी हुन् या होइनन् भन्ने हालैसम्म खुल्न सकेको थिएन। त्यो स्वाभाविक पनि थियो। किनभने,उनले व्यक्तिगत स्तरमा कतिपय मानवीय काम गरिसकेका भए पनि ठूलो स्तरमा त्यस्तो कुनै काम गरेको सुनिएको थिएन। खोटाङको किसान परिवारमा जन्मिएर, काठमान्डु झरेर, ब्याङ्कमा कार्यालय सहायकको जागिर खाएर, रात्रिकालीन पढाइ गरेर, बाटोछेउ सानो कोल्डस्टोर खोलेर, २०-२५ वर्षको अन्तरालमा त्यसलाई अर्बौं रुपैयाँको पूँजी भएको विशाल सुपरमार्केटमा परिणत

गर्नु चानचुने कुरा थिएन। तर, अर्बौं रुपैयाँको पूँजीको शक्ति केवल व्यक्तिगत मुनाफाका लागि सीमित हुनु हुँदैन भन्ने यो पङ्क्तिकारको मान्यता हो। खुला बजार अर्थतन्त्रका ठेलीहरू कण्ठस्थ पारेका धेरैलाई मेरा तर्कहरू अपाच्य र मूर्खतापूर्ण लाग्लान्। तर वास्तविकता के हो भने, पूँजीलाई व्यापारमा मात्र सीमित गर्दा बृहत्तर सामाजिक हितका लागि प्रयोग हुन सक्ने त्यसको अपार शक्ति अत्यन्त सङ्कुचित हुन जान्छ। पूँजीको शक्ति अपरम्पार छ भन्नेमा कुनै शङ्का छैन। त्यसैले, बूढो भैसक्दा पनि अर्बौंको पूँजीमा अर्बौं थप्न मात्र खोज्ने र आफ्नो सम्पत्तिको अनुपातमा अत्यन्त साना कल्याणका काम गरेर ठूला कुरा गर्न व्यापारीजति नै सफल भए पनि ती असल मान्छे हुन सक्दैनन्। त्यस्तो सफलता तिनैले राखून्, जसबारे अरूले गर्व गर्नुपर्ने कुनै कारण छैन।

मीनबहादुर गुरुङ माथि चर्चा गरिएको चरित्रभन्दा नितान्त फरक रूपमा प्रस्तुत भएका छन्। नेपालमा

मात्र होइन, संसारमै धन र मन दुवै भएका व्यापारीहरूको सङ्ख्या ज्यादै न्यून छ। गुरुङ धन र मनको स्वच्छ सङ्गमका रूपमा देखा परेका छन्। अन्तर्वार्ता लिनुअगाडि मैले गुरुङलाई भनेँ, उनको व्यापारबारे कुरा गर्ने भैदिएको भए, म खोजीखोजी बाङ्गा प्रश्नहरू गर्ने थिएँ। तर, सो अन्तर्वार्ताको उद्देश्य गुरुङले आफ्नै अग्रसरतामा शिक्षण अस्पतालमा निर्माण गरिदिन लागेको आकस्मिक कक्षबारे श्रोताहरूलाई जानकारी दिनु र उनीभित्र रहेको कल्याणकारी भावनालाई उजागर गर्ने प्रयास गर्नु थियो। तर अन्तर्वार्ताका क्रममा उनको कल्याणकारी भावना मात्र उजागर भएन, त्यो भावनापछाडि कुनै पनि आदर्श व्यापारीमा हुनुपर्ने गहिरो मानवीय दर्शनसमेत उजागर भयो।

गुरुङले भने, “आदरणीय नेपाली दाजुभाइहरूले हामीलाई माया गरेर जुन उचाइमा पुऱ्याइदिनुभयो, त्यसको लागि हामी उहाँहरूप्रति धेरैधेरै आभारी छौँ। हामीले पनि त केही गर्नुपऱ्यो। नेपाली जनसमुदायले हामीलाई

दिने, हामीले चाहिँ केही फिर्ता नदिने? त्यसै कारणले शिक्षण अस्पतालको आकस्मिक कक्ष बनाइदिन लागेका हौँ।" धेरै व्यापारीले रोजगारी दिएको कुरालाई नै आफूले समाजलाई फिर्ता दिएर गुन लगाएको तर्क गर्ने थिए; उनीहरूले 'आदरणीय नेपाली दाजुभाइहरू' प्रति आभार पनि प्रकट गर्ने थिएनन्। अन्तर्वार्ता जति अगाडि बढ्दै गयो म गुरुङप्रति त्यति बढी नतमस्तक हुँदै गैरहेको थिएँ। एक छोरा र एक छोरीका पिता ५१ वर्षीय गुरुङले जब 'नेपाली जनसमुदायले दिएको शुभेच्छा र शुभकामनाको ऋण तिर्नु छ, त्यसैले अर्बौं रुपैयाँको सम्पत्ति हामी हाम्रा छोरा र छोरीलाई मात्र दिनेवाला छैनौँ' भने, म विश्वकै धनाढ्य बिल गेट्सलाई सम्झि रहेको थिएँ। आफ्ना सन्तानलाई थोरै मात्र छोडेर बिल गेट्सले खर्बौंको सम्पत्ति लोककल्याणकारी कार्यहरूमा लगाउँदै छन्।

एउटा रोचक तथ्य के छ भने, हरेक वर्ष विश्वका सबभन्दा धनाढ्यहरूको सूची प्रकाशित गर्ने *फोर्ब्स*

पत्रिकामा ती धनाढ्यहरूको परिचय पढ्दा सामान्यतया दुइटा विशेषता देखिन्छन् । पहिलो, ती अधिकांश गुरुङ जस्तै पैतृक सम्पत्तिले भन्दा पनि आफ्नो बुद्धि, मेहनत र अवसरले धनी भएका देखिन्छन् । र दोस्रो, धेरैजसो ठूलो स्तरका लोककल्याणकारी काम आफ्नै प्रयासबाट धनी हुनेहरूले नै गर्ने गरेका छन् । त्यो विशेषता गुरुङमा पनि देखिएको छ । पैतृक सम्पत्तिको आडमा मात्र धनी भएकाहरू शान त खूब देखाउँछन्; तर समाजमा तिनले आफ्नै प्रयासले धनी भएका र ठूलठूला लोककल्याणकारी काम गरेकाहरूले जस्तो सम्मान र प्रेम नपाउने रहेछन् ।

अन्तर्वार्ताको अन्त्यमा गुरुङले ३५ वर्षअगाडि आफूले 'एउटा गेडा सिटामोल खान नपाएर रुन्डैरुन्डै अपाङ्ग भएको' दिन सम्झँदै भने, "म जस्तै लाखौँ नेपालीहरू अहिले पनि सिटामोल खान नपाएर अपाङ्ग हुने स्थिति छ । मेरो र मेरी श्रीमतीको इच्छा उनीहरूको लागि हाम्रो नाममा अर्बौं रुपैयाँको अक्षय कोष खडा

गरी निकट भविष्यमा सामुदायिक स्वास्थ्यको क्षेत्रमा सेवा गर्ने छ ।"

यो देशमा मीनबहादुर गुरुङजति या उनीभन्दा धनी धेरै व्यापारी हुनुपर्छ। कतिपयले कति राम्रा कामहरू गरेका पनि छन्। ती सब आदरणीय छन्। तर सम्पूर्णतामा हेर्ने हो भने, गर्दै नगर्ने या अत्यन्त थोरै गर्नेहरूकै सङ्ख्या बढी हुन जान्छ। ती सबैमा गुरुङको जस्तै सोच र कर्मभाव हुने हो भने अनुमान गरौँ, यो देशमा कति वटा भव्य विद्यालय र कति वटा भव्य अस्पतालहरू सहजै निर्माण हुन्थे होलान्! हामी सबै कामना गरौँ, गुरुङको भावी इच्छा साकार होस्! उनको प्रेरणाले धेरैभन्दा धेरै धनाढ्यमा सद्बुद्धि छाओस्!

*कान्तिपुर दैनिक, २०६६ माघ ६*

# आफ्नै शैलीको नयाँ वर्ष

अङ्ग्रेजी नयाँ वर्ष सन् २०१० शुरू भएको चार हप्ता भएको छ। नयाँ वर्षकै कारणले गर्दा यी चार हप्तामा म्याग्दीको दुर्गम शिख देउराली गाउँमा रहेको शिख उच्च माध्यमिक विद्यालयका विद्यार्थीहरूजति खुशी अरू कोही भएको यो पङ्क्तिकारलाई थाहा छैन। उनीहरूको त्यो खुशी आफ्नै शैलीमा नयाँ वर्ष मनाउने केही युवाको रचनात्मक ऊर्जाका कारण सम्भव भएको हो।

नयाँ वर्ष शुरू हुनु केही दिनअगाडि यो पङ्क्तिकारलाई दुइटा फोन आए। एउटा फोन कहिले नभेटेको तर राम्रा कामहरू गर्नका लागि सहयोग माग्दै बेलाबखत परिचित/अपरिचित साथीहरूमाऽ समूहगत इमेलहरू पठाइरहने अनि इन्टरनेट र पत्रिकामार्फत पनि सहयोगका लागि पाठकहरूलाई उत्प्रेरित गरिरहने स्याटेलाइट (

हरि भुसाल) को थियो। अर्को चाहिँ मेरा एक पुराना मित्रको थियो, जसको नाम यहाँ उल्लेख गर्नु सान्दर्भिक हुँदैन। स्याटेलाइटले फोन गर्नाको कारण खुलाए अनुसार, उनी र उनका केही साथीले अङ्ग्रेजी नयाँ वर्ष म्याग्दीको एउटा विकट गाउँमा पुस्तकालयको स्थापना गरी मनाउने योजना गरेका रहेछन् र त्यसैका लागि उनीहरूले पुस्तक सङ्कलन गरिरहेका रहेछन्। मैले पनि सकेको पुस्तक दिएर सहयोग गर्नुपर्‍यो भन्ने स्याटेलाइटको अनुरोध थियो। त्यही दिन मेरा पुराना मित्रले गरेको फोनमा चाहिँ यसो भनियो, "क्या हो ... न्यु यर मनाउने विचार छैन? न्यु यर्स इभमा याक एन्ड यतीमा गेट टुगेदर गर्ने प्लान गरि'रा, आउनुपर्छ है यो पटक त।" मूल घर बुटवल भएका स्याटेलाइट काठमान्डुमा डेरा गरी बस्ने युवा कम्प्युटर इन्जिनियर हुन् भने मेरा मित्र चाहिँ अन्तर्राष्ट्रिय गैरसरकारी संस्थामा कार्यरत, राम्रो आम्दानी र आर्थिक पृष्ठभूमि भएका विकासविद् हुन्।

ती दुई जनाबीचको सोचाइको अन्तर सामाजिक विडम्बनाको एउटा दुःखद तर स्पष्ट चित्र हो।

मेरा मित्रको योजनामा न कुनै नौलो सोच थियो, न त्यो रचनात्मक नै थियो। हरेक वर्ष संसारभरिका पाँचतारे होटेलहरूमा नयाँ वर्ष त्यसै गरी मनाइन्छ। नेपालमा पनि त्यसको प्रचलन बढ्दो छ। त्यसैले त्यो कुनै अनौठो कुरा भएन। तर, स्याटेलाइटको नयाँ वर्ष मनाउने सृजनात्मक सोच भने यो पङ्क्तिकारलाई साँच्चै रोचक लाग्यो। त्यसको पृष्ठभूमि चाहिँ राम्रैराम्रा सोचहरूको मीठो संयोग रहेछ।

एकपल्ट मुस्ताङ जाँदा स्याटेलाइटले झन्डै २० वर्ष बेलायती गोर्खा सैन्यमा काम गरेर फर्किएका गज्जबका प्रेरणादायी 'लाहुरे' बाघवीर पुनलाई भेटेछन्। बाघवीरले सेवानिवृत्त भएपछि धेरै लाहुरेले झैँ काठमान्डुमा शानदार घर बनाएर या बेलायततिरै बरालिएर बाँकी जीवन जिउन चाहेनछन्। बरु आफूले सानो छँदा राम्रो शिक्षा हासिल गर्न नपाएका कारण सैनिक

सेवामा खासै प्रगति गर्न नसकेको दुःखद इतिहास सम्झँदै म्याग्दीस्थित आफ्नै गाउँ फर्किएर शिक्षाको विकासमा काम गर्न चाहेछन् । त्यही ऊर्जाका कारण आफैँले अग्रसरता लिएर गाउँको शिख माध्यमिक विद्यालयलाई उच्च माध्यमिक विद्यालयमा परिणत गरेछन् । तर, उच्च माध्यमिक विद्यालयमा परिणत गरिसक्दा पनि त्यहाँ पुस्तकालय रहेनछ । अनि उनले केही महिनाअघि मुस्ताङमा "मैले गर्न सक्ने केही भए, फोन गर्नुहोला है" भनेर छुट्टिएका युवा यात्री स्याटेलाइटलाई सम्झिएछन् र फोन गरेछन् । त्यस्ता कामहरूमा पहिले पनि संलग्न स्याटेलाइटलाई लाग्दो रहेछ, "देशमा जति सपिङ मलहरू बने पनि हाम्रा केटाकेटीले उचित शिक्षा पाएका छैनन् भने त्यो विकासको के अर्थ !" त्यसैले बाघवीरको सम्झना स्याटेलाइटका लागि प्रेरणामा परिणत भएछ र उनी पुस्तक सङ्कलन अभियानमा जुटेछन् । व्यक्तिव्यक्तिलाई सम्पर्क गरेछन्, भेटेछन्, पुस्तक बटुलेछन् अनि लोकप्रिय इन्टरनेट साइट

*माईसंसार डट कम*मा एउटा अपिल पनि छापेछन्। एक हजार छ सयभन्दा बढी सङ्ख्यामा प्राप्त पुस्तकहरूलाई आफ्नो सानो डेरामा थुपारेछन् अनि उनी र उनका साथीहरू नयाँ वर्षको दुई दिनअगाडि पुस्तकले भरिएका ठूलठूला बाकस जिप र बसमा लोड-अनलोड गर्दै शिख देउराली गाउँतर्फ हिँडेछन्।

मोटर बाटो अन्त्य हुने विन्दुसम्म युनिफर्म लगाएका स्कुलका विद्यार्थीहरू डोको बोकेर र बाघवीर स्वयं चाहिँ दुइटा खच्चड डोऱ्याएर स्याटेलाइटको टोलीलाई स्वागत गर्न आएको देख्दा स्याटेलाइट र उनका साथीहरू दङ्ग परेछन्। त्यो साँझ उनीहरूसँगै बिताएर, जनुअरी १ तारिखका दिन पुस्तकहरू विद्यालयलाई जिम्मा लगाएर फर्किएपछि *माईसंसार डट कम*मा लेखेको छोटो टिप्पणीमा स्याटेलाइट उल्लेख गर्छन्, "डिसेम्बर ३१ को त्यो साँझ पूर्णिमाको चन्द्रमा अन्नपूर्ण हिमालको चुचुरोछेउबाट माथि सर्दै गर्दा हामी शिख उच्च माविको पुस्तकालयका लागि पुस्तक

लिएर उकालो लाग्दै थियौं। आफ्नै शैलीमा नयाँ वर्ष मनाउन शिख देउराली पुगेकामा हामी त्यसै दङ्ग थियौं।"

उनीहरूले सन् २००८ डिसेम्बर ३१ को साँझ पूर्णचन्द्रको मन्द प्रकाशमा नयाँ पुस्तक विरलै देख्न पाउने विद्यार्थीहरूलाई पुस्तकालय उपहार लिएर 'शिक्षित नयाँ वर्ष' को कामना गर्न उकाली-ओरालीको यात्रा गर्दा, मेरा विकासविद् मित्र भने विदेशी ह्वीस्कीमा मस्त भएर 'सुखद नयाँ वर्ष' को कामना गर्न तयार हुँदै थिए ! हरेक वर्ष विश्वभरि करोडौं मानिस रक्सीमा झुम्दै, चियर्स गर्दै सुखद नयाँ वर्षको कामना र स्वागत गर्छन्। तर तिनले आफ्नै सुखका लागि मात्र कामना गर्छन् या शिख देउराली जस्तो गाउँका पढ्न नपाउने केटाकेटीका लागि पनि कामना गर्छन्, त्यो तिनीहरूले नै बुझून्। आफ्नै र आफन्तहरूका लागि मात्र सुखको कामना गरेर कोही पनि बढी सुखी भएको मैले देखेको छैन। व्यक्तिगत सुख बृहत्तर

सामाजिक सुखभित्रको एउटा अंश मात्र हो। तर, सामाजिक प्राणी भएर पनि अधिकांश मानिसले सो तथ्यलाई व्यवहारमा प्रतिविम्बित गर्न चाहँदैनन्। त्यसै कारणले होला, रक्सीमा झुम्दै सुखद नयाँ वर्षको कामना गर्ने अधिकांशलाई अरू कसैको चासो हुँदैन। नयाँ वर्ष मनाउनु हुँदैन भन्ने यो आलेखको भाव होइन; तर हरेक नयाँ वर्ष मनाउँदा बढी सृजनशील र रचनात्मक हुन सकिन्छ भन्न खोजिएको हो, जसले आफूलाई पनि आनन्द देओस् र हामीजति आनन्द मनाउन नसक्नेहरूलाई अलिकति खुशी पनि देओस्।

अन्नपूर्ण हिमालको पृष्ठभूमिमा उदाइरहेको पूर्णचन्द्र हेर्दै विकट गाउँमा पुस्तकालय उपहार दिन पुगेका चेतनशील र ऊर्जाशील ती स्याटेलाइट र उनका साथीहरूलाई जीवनभर सन् २०१० को आगमनमा आफूले गरेको कामले सधैँ अद्वितीय आनन्दको अनुभूति र ऊर्जा प्रदान गरिरहनेछ। तर, पाँचतारे होटेलमा पार्टी गरेर नयाँ वर्ष मनाउनेहरूका लागि नयाँ वर्षले

सामाजिक सुखभित्रको एउटा अंश मात्र हो। तर, सामाजिक प्राणी भएर पनि अधिकांश मानिसले सो तथ्यलाई व्यवहारमा प्रतिविम्बित गर्न चाहँदैनन्। त्यसै कारणले होला, रक्सीमा झुम्दै सुखद नयाँ वर्षको कामना गर्ने अधिकांशलाई अरू कसैको चासो हुँदैन। नयाँ वर्ष मनाउनु हुँदैन भन्ने यो आलेखको भाव होइन; तर हरेक नयाँ वर्ष मनाउँदा बढी सृजनशील र रचनात्मक हुन सकिन्छ भन्न खोजिएको हो, जसले आफूलाई पनि आनन्द देओस् र हामीजति आनन्द मनाउन नसक्नेहरूलाई अलिकति खुशी पनि देओस्।

अन्नपूर्ण हिमालको पृष्ठभूमिमा उदाइरहेको पूर्णचन्द्र हेर्दै विकट गाउँमा पुस्तकालय उपहार दिन पुगेका चेतनशील र ऊर्जाशील ती स्याटेलाइट र उनका साथीहरूलाई जीवनभर सन् २०१० को आगमनमा आफूले गरेको कामले सधैँ अद्वितीय आनन्दको अनुभूति र ऊर्जा प्रदान गरिरहनेछ। तर, पाँचतारे होटेलमा पार्टी गरेर नयाँ वर्ष मनाउनेहरूका लागि नयाँ वर्षले

एक-दुई दिनका लागि रक्सीको ह्याङओभरबाहेक केही दिनेछैन। उनीहरूका लागि हरेक नयाँ वर्ष त्यसै गरी आएको छ, त्यसै गरी गएको छ। नयाँ वर्ष त्यसरी बिताउनेहरूमध्ये आधाले मात्र पनि अलिकति कल्पनाशील र चेतनशील भैदिने हो भने हरेक वर्ष कति नयाँ पुस्तकालयहरू बन्ने थिए होलान् अनि हरेक वर्ष कति नयाँ बाघवीर र ससाना नानीहरू दङ्ग पर्थे होलान्, सहजै अनुमान गर्न सकिन्छ।

*कान्तिपुर दैनिक, २०६६ माघ १३*

# प्रचार नखोजिएको एक करोडको दान

मैले उनलाई एकपल्ट मात्र भेटेको थिएँ। पत्रकारका रूपमा मेरो केही सार्वजनिक परिचय भए पनि उनी मलाई चिन्दैनथे। किनभने, मेरो पत्रकारिताको माध्यम मूलत: बीबीसी नेपाली सेवा र नेपाली छापाहरू थिए भने उनको समाचार श्रवण र अध्ययनको माध्यम अङ्ग्रेजी थियो। पूरै जीवन अङ्ग्रेजी माध्यमको पढाइमा बिताएकाले आफ्नो 'अत्यन्त कमजोर नेपाली पढाइ र बुझाइ' प्रति उनलाई आत्मग्लानि हुँदो रहेछ। तर, आदर्शको खडेरी परेको देशमा भाषाको ज्ञानभन्दा सत्कर्म महत्त्वपूर्ण कुरा हो भन्नेमा कुनै शङ्कै भएन। हामीबीच भएको पहिलो भेटमा म र समान विचारधाराका मेरा साथीहरू मिलेर शुरू गरेको एउटा कल्याणकारी अभियानलाई उनले सहज रूपमा तीन लाख रुपैयाँ चन्दा दिए। दोस्रो पटकको भेटमा कुनै

हिचकिचाहटबिना सोही अभियानका लागि एक करोड सहयोग गर्ने प्रतिबद्धता जनाए र भने, "कृपया, यसलाई सार्वजनिक नगरिदिनुहोला।"

मैले धेरै व्यक्ति तथा व्यापारिक गृह चिनेको छु, जो तुलनात्मक रूपमा अत्यन्त सानो कल्याणकारी काम गरेर ठूलो प्रचार-प्रसार बटुल्ने गर्छन्। २०६६ माघ दोस्रो हप्ताको कुरा हो, एउटा व्यावसायिक गृहले एउटा कल्याणकारी संस्थालाई ५० हजार दान गर्दा चेक हस्तान्तरण गरिएको फोटो कतिपय प्रमुख राष्ट्रिय दैनिकमा छापिएको थियो। तर म त्यो दिन यस्तो व्यक्तिको साथमा थिएँ, जसले कल्याणका लागि त्यति ठूलो रकम दान गरेर प्रचार-प्रसार नहोस् भन्नेमा जोड दिइरहेको थियो।

सिद्धार्थ राणा निश्चित रूपमा शान्त, सौम्य, भलादमी र आफ्नै दुनियाँमा मग्न नेपालका एक अग्रणी युवा उद्यमी हुन्। 'हेल्प नेपाल नेटवर्क : नेपालका लागि महिनाको सय रुपैयाँ कोष' का लागि चन्दा सङ्कलन

गर्ने आफ्नो एक दशक लामो गुलियो-तीतो अनुभवका क्रममा मैले सिद्धार्थ राणा जस्तो व्यक्ति भेटेको छैन। उनी तारा म्यानेजमेन्टका प्रमुख हुन्। तारा म्यानेजमेन्ट सिप्रदी प्राइभेट लिमिटेडसहित उनका अनेकौँ व्यापार हेर्ने मुख्य संस्था हो, जसमा भोटेकोशी जलविद्युत् आयोजना, सूर्य नेपाल जस्ता नेपालका केही प्रमुख कम्पनी आबद्ध छन्। हामी दिनदिनै धेरै उद्यमी-व्यवसायीलाई टेलिभिजनका पर्दाहरूमा देख्छौँ। तर, त्यस्ता बृहत् व्यवसायहरूको नेतृत्व गरेर पनि सिद्धार्थ राणा चाहिँ प्रचार-प्रसारको दुनियाँबाट पूर्णतः भनेजसो टाढा छन्।

उनी र उनको परिवारले गरेका कल्याणकारी कामहरूबारे त झन् कसैलाई जानकारी नै छैन भने पनि हुन्छ। उदाहरणका लागि, विश्वसम्पदामा सूचीकृत काठमान्डु दरबार क्षेत्रमा रहेको सत्रौँ शताब्दीमा निर्मित जगन्नाथ मन्दिरको जीर्णोद्धारलाई लिन सकिन्छ। उनका व्यावसायिक संस्थाहरूले सो आयोजनामा ठूलो

सहयोग पुऱ्याएका थिए। सो आयोजनाका लागि आवश्यक पर्ने तीन लाख अमेरिकी डलरको आधा रकम नेपालीहरूले जम्मा गर्न सके अमेरिकाको वर्ल्ड मोन्युमेन्ट फन्डले आधा रकम प्रदान गर्नेवाला थियो। सिद्धार्थ राणा संलग्न व्यावसायिक कम्पनीहरूले नेपालीका तर्फबाट योगदान पुऱ्याइनुपर्ने आधा रकमको सबै भनेजसो हिस्सा उपलब्ध गराएका थिए, जसका कारण ऐतिहासिक जगन्नाथ मन्दिरको जीर्णोद्धार सम्भव भयो। अरूलाई पनि त्यस्ता काममा प्रेरित गर्न सक्ने त्यो एउटा अत्यन्त सकारात्मक समाचार थियो। तर, त्यसबारे सञ्चार माध्यमहरूमा कतै समाचार आएको मलाई थाहा भएन। मैले काठमान्डु उपत्यका संरक्षण कोषको वेबसाइटबाट सो कार्यबारे जानकारी पाएको हुँ।

हेल्प नेपाल नेटवर्कका अनेकौँ राष्ट्रिय र अन्तर्राष्ट्रिय कल्याणकारी संस्थाको भन्दा नितान्त भिन्न एउट विशेषता छ। नेटवर्कले आफूलाई प्राप्त सहयोगबाट

एक पैसा पनि प्रशासनिक काममा खर्च गर्दैन। नेटवर्कका लागि यो एउटा ठूलो चुनौती भएको छ। शुरूशुरूमा नेटवर्कका कार्यकारिणी सदस्यहरू आफैंले सम्पूर्ण प्रशासनिक खर्च उपलब्ध गराए। तर जब संस्थाको काम विस्तार हुँदै गयो, कार्यकारिणी सदस्यहरू र केही शुभेच्छुकको दानबाट मात्र सम्पूर्ण गतिविधि सञ्चालन गर्न न तर्कसङ्गत हुन्थ्यो न त त्यो दिगो विकल्पै थियो। त्यसैले नेटवर्कले एक लाख अमेरिकी डलर अर्थात् ७५ लाख रुपैयाँको हेल्प नेपाल प्रशासनिक कोष स्थापना गर्ने लक्ष्य लियो, जसको ब्याजबाट प्रशासनिक कार्यहरू सञ्चालन गर्ने हाम्रो उद्देश्य थियो।

हेल्प नेपाल नेटवर्कको प्राथमिक उद्देश्य ठूला अन्तर्राष्ट्रिय दाताहरूबाट सहयोग खोज्नुभन्दा पनि नेपाली व्यक्ति तथा संस्थाहरूकै सहयोगबाट नेपालमा कल्याणकारी भावना र कार्यको प्रवर्धन गर्ने हुनाले प्रशासनिक कोषका लागि कम्तीमा तीन लाख चन्दा दिन इच्छुक

२५ नेपाली भेट्टाउने लक्ष्य राखियो। त्यो फेरि अर्को ठूलो चुनौती थियो। हाम्रो उद्देश्य ती सहृदयी दाताहरूलाई उदाहरणका रूपमा प्रस्तुत गरेर अरू तुलनात्मक रूपमा धनी तर लोककल्याणमा त्यति चासो नभएका नेपालीहरूलाई कल्याणको क्षेत्रमा प्रेरित गर्नु थियो।

मैले सिद्धार्थ राणालाई पहिलो पटक त्यति बेला उनैसँग कार्यरत लेखक तथा उद्यमी सुजीव शाक्यको सल्लाह अनुरूप २०६३ साल भदौ १ गते लन्डनको एउटा सामान्य रेस्टुराँमा भेटेको थिएँ। शाक्यले नै मलाई प्रशासनिक कोष अभियानबारे राणासँग कुरा गर्न सल्लाह दिएका थिए। म त्यति बेला काम र बसोबास गरिरहेको बेलायत र नेपालका कुलीन वर्गबीच धेरै ठूलो अन्तर छ। बेलायतका कुलीनहरू प्रशस्त मात्रामा लोककल्याणकारी कार्यमा संलग्न हुने गर्छन्; तर नेपालका कुलीनहरू उदार भैसकेका छैनन्। बरु, मारवाडी समुदायका सदस्यहरू कल्याणकारी कार्यमा बढी अग्रसर र उदार देखिन्छन्। त्यसैले म

शाक्यको सल्लाहबाट त्यति आशावादी हुन सकेको थिइनँ। तैपनि कोष सङ्कलन प्रयासमा १० चोटि हन्डर खाइसकेको हुनाले अर्को एक चोटि प्रयास गर्दा फरक पर्दैन भन्ने लाग्यो। तर जब मैले राणालाई भेटेँ, उनी अत्यन्त सामान्य र मित्रवत् ढङ्गबाट प्रस्तुत भए। उनले हेल्प नेपालको सोच र कार्यबारे अत्यन्त उत्सुकतापूर्वक सुने र त्यति बेला मैले मागेको तीन लाखको चन्दा दिने सहमति जनाए।

२०६३ सालको भेटपछि हामीबीच, म लन्डनबाट स्थायी रूपमा २०६५ सालको अन्त्यतिर काठमान्डु नफर्किएसम्म, कुनै भेटघाट या पत्राचार भएन। म फर्किँदासम्म नेपालीहरूकै सहयोगबाट प्रशासनिक कोषका लागि ७५ लाख सङ्कलन गर्ने लक्ष्य पूरा भैसकेको थियो। तर हेल्प नेपालको कार्यक्षेत्र भने विस्तार हुँदै गैरहेको थियो। हामी कैयौँ 'ई-लाइब्रेरी', ससाना विद्यालय भवन, स्वास्थ्यचौकी र एउटा ठूलो बाल आश्रय निर्माण गरिरहेका थियौँ। त्यसको अर्थ कार्यालय

सञ्चालनका लागि ७५ लाख रुपैयाँबाट आउने ब्याज पर्याप्त हुँदैन भन्ने प्रस्ट हुँदै थियो। त्यसैले हामीले पछिलाई पनि विचार गरेर अर्को एक करोड रुपैयाँ उठाउने लक्ष्य लियौँ। त्यसै अनुरूप मैले *कान्तिपुर* दैनिकमा *कृपया पाँच रुपैयाँ दिनोस् न !* लेखेर कोष सङ्कलनको प्रयास शुरू गरेँ। देशभरिका सर्वसाधारणबाट सहयोग र सद्भाव प्राप्त भयो। तर, नेपालमा आधुनिक ब्याङ्किङ सुविधाको अभावले गर्दा सानो रकम सङ्कलन प्राविधिक रूपमा सम्भव नहुने देखियो। त्यो एउटा शिक्षा नै भयो। त्यसैले मैले विभिन्न व्यक्ति तथा व्यापारिक गृहसँग ठूलो रकमको सहयोगका लागि सम्पर्क गरेँ। तर, अधिकांश स्थितिमा खाली हात फर्कनुपऱ्यो। त्यसैबीच मैले सिद्धार्थ राणाबारे खास गरी उनका एक प्रमुख कार्यकारी अधिकृत र मेरा निकटका मित्र शम्भु दाहालमार्फत थप सकारात्मक टिप्पणीहरू सुनिरहेको थिएँ। त्यसैले अप्ठेरो मानीमानी रित्तो हातलाई मैले पुनः एकपल्ट उनीसामु फैलाउने

विचार गरेँ। र, हेल्प नेपाल नेटवर्कले उनी जस्तै सहृदयी नेपाली-नेपालीको सहयोगबाट हासिल गरेका उपलब्धिको सारांशका साथ सके सम्पूर्ण एक करोड, नसके कम से कम २५ लाख रुपैयाँ दिन अनुरोध गर्दै उनलाई एउटा इमेल पठाएँ। राणाले मलाई तुरुन्त जवाफ दिए र २०६५ साल असोज ५ गते हामीले सोल्टी होटेलको चौरमा खाना खाँदै भेट गर्‍यौँ। उनको साथमा मेरा मित्र दाहाल पनि थिए। हामीले झन्डै अढाई घण्टा मूलतः कल्याणकारी विषयहरूमै कुराकानी गर्‍यौँ। उनले सम्पूर्ण एक करोड दिने प्रतिबद्धता जनाए, जुन २०६६ माघ दोस्रो हप्ता प्राप्त भयो।

म धेरै नेपाली चिन्छु, जसले आफू या आफ्नो परिवारको नाम जोडिएको कल्याणकारी कामका लागि राणाले भन्दा बढी चन्दा दिएका छन्। त्यसो गर्नुमा कुनै खराबी छैन। तर, मैले व्यक्तिगत रूपमा पूर्णतः असम्बन्धित कल्याणकारी कार्य या संस्थालाई त्यति

ठूलो रकम दान गर्ने कुनै नेपाली चिनेको छैन। त्यस्ता नेपालीहरूलाई कसैले प्रकाशमा ल्याइदिए अरूहरूलाई पनि राम्रो काम गर्न प्रेरणा मिल्ने थियो। राणाले उनका व्यावसायिक संस्थाहरूको कल्याणकारी शाखा तारा फाउन्डेसन पनि भङ्ग गर्नु उपयुक्त हुने बताए। "एउटै काम दुइटा संस्थाले गर्नु जरूरी छैन। संयुक्त राज्य अमेरिकामा वारेन बफेटले आफ्ना कल्याणकारी कार्यको लागि बिल गेट्सको फाउन्डेसनलाई सबै जिम्मेवारी दिन सक्छन् भने नेपालमा त्यसै गर्न किन नसकिने? हेल्प नेपाल नेटवर्क एउटा पारदर्शी र इमानदार कल्याणकारी संस्था हो भन्नेमा म विश्वस्त छु। आफैँ गर्नुभन्दा हेल्प नेपाललाई नै सहयोग गर्नु बढी उपयुक्त हुन्छ।"

यो विन्दुमा पुग्दा हाम्रो वार्ताले अनपेक्षित मोड लियो। राणाले आफ्नो सहयोगलाई अज्ञात दाताका नाममा दर्ज गर्न अनुरोध गरे। उनको चाहनालाई म बेवास्ता गर्न सक्दिनथेँ, तर उनले गर्न लागेको

सहयोग नेपालको परिप्रेक्ष्यमा एउटा अभूतपूर्व उदाहरण थियो र त्यसको उपयुक्त प्रचार गरिनुपर्छ भन्ने मेरो सोचाइ थियो। नेपाललाई अरूले पनि सिक्न र पछ्याउन सक्ने उदाहरणीय र आदर्श व्यक्तिहरूको सख्त खाँचो छ र राणा त्यस्तै एउटा व्यक्तिका रूपमा अगाडि आएका थिए। तर उनले पूर्ण विश्वासका साथ जोडदार रूपमा भने, "कल्याणकारी कामको प्रचार गर्नु नीचता हो।"

उनको विश्वासलाई तोड्ने प्रयासमा मैले भनेँ, "यस प्रकारको सकारात्मक समाचारको प्रवर्धन गर्दा समाजमा व्याप्त नकारात्मकतालाई निरुत्साहन गर्न मदत पुग्छ। यस्तो समाचारको उद्देश्य, तपाईंलाई बढाइ-चढाइ गर्नु होइन, अरूलाई प्रेरित गर्नु हो।" लामो तर्क-वितर्कपछि बडो असहजताका साथ र अनिच्छापूर्वक उनले मलाई आफ्नो सहयोगलाई सार्वजनिक गर्ने अनुमति दिए। सामान्य स्थितिमा भैदिएको भए त्यति ठूलो रकम चन्दा दिंदा सञ्चार माध्यमहरूको उपस्थितिमा चेक

हस्तान्तरण समारोह आयोजना गरिएको हुन्थ्यो; तर त्यस्तो केही हुनेवाला थिएन । त्यसपछि म खन्डै भेट्नै नचाहेको व्यक्तिप्रति अनौठो र अमिट श्रद्धाभाव बोकेर छुट्टिएँ ।

विपन्न नेपालीहरूले सिद्धार्थ राणालाई चिन्दैनन्, न राणा उनीहरूलाई चिन्छन् । तर के चाहिँ अनुमान गर्न सकिन्छ भने दिनरातको गरीबीबाट उम्कन खोजिरहेका ती सारा नेपालीले राणालाई निश्चय पनि आशीर्वाद दिनेछन् । कल्पना गरौँ, सबै धनी मानिस राणाजत्तिकै उदार भैदिने हो भने, यो समाज र संसार कति सुन्दर हुन्थ्यो होला ! आशा छ, आउने दिनहरूमा आफ्नो सकारात्मक सोच र कर्मबाट सिद्धार्थ राणाले अरू धेरै धनाढ्यलाई लोककल्याणकारी कार्यमा प्रेरित गरिरहनेछन् । उनलाई धेरैधेरै शुभकामना !

*नागरिक दैनिक, २०६६ माघ १८*

# भँगेरे मुटु

*कान्तिपुर* दैनिकमा छापिएको *यस्तो डाक्टर पो डाक्टर* आलेखमा मैले *नागरिक* दैनिकमा कार्यरत पत्रकार गुणराज लुइँटेलको समाचारको प्रशंसापूर्ण उद्धरण गरेको थिएँ। त्यसपछि मेरा केही पत्रकार साथीले भने, “ओहो ... *कान्तिपुर*मा *नागरिक*को प्रशंसा !” त्योभन्दा केही महिनाअघि मैले *नागरिक* दैनिककै लागि लेखेको *पूर्वराजालाई खुला पत्र* मेरा एक पत्रकार मित्रलाई देखाउँदा उनले भनेका थिए, “हामीकहाँ हो भने यो छाप्न अलि गाह्रो हुन्छ, किनभने यहाँ पूर्वराजालाई सरकार, हजुर, बक्स्योस् जस्ता शब्दहरू प्रयोग गरिएका छन् ।”

पछिल्लो घटना चाहिँ यस प्रकारको छ– गत हप्ता म आबद्ध कल्याणकारी संस्थालाई उद्योगपति सिद्धार्थ राणाले एक करोड रुपैयाँ चन्दा दिए। आफू या

आफ्नो परिवारको सदस्यसँग कुनै सरोकार नभएको कल्याणकारी संस्थालाई त्यति ठूलो रकम दान गर्नु नेपालको परिप्रेक्ष्यमा आफैंमा एउटा असाधारण समाचार थियो । त्यसैले संस्थाका तर्फबाट हामीले प्रेस विज्ञप्ति जारी गर्‍यौं। प्रेस विज्ञप्ति पठाइएका दैनिक पत्रिकाहरूमध्ये अधिकांशले सो समाचार छापे; तर केहीले छापेनन् । उनीहरूले सो समाचार छाप्नयोग्य नभएर या स्थान अभावले गर्दा त्यसो गरेका होइनन् । त्यसको कारण बेग्लै छ ।

कुरोको चुरो चाहिँ के हो भने, हामी अधिकांश ठूला कुरा गर्छौं, तर हाम्रो मुटु भने भँगेराको जत्रो छ । हामी त्यसबाट माथि उठ्ने प्रयासै गर्दैनौं । तर नेताहरूको चाहिँ मुटु ठूलो हुनुपर्छ भनेर दिनदिनै टोल, छिमेक, अन्तरक्रिया, गोष्ठी, भाषण र पत्रपत्रिकामा फलाक्छौं । अरूहरूमा जेजस्तोसुकै कमजोरी भए पनि कम से कम दिनदिनै आदर्श, सन्तुलन, न्याय, समानता र निष्पक्षता आदिको खेती गर्ने सञ्चार संस्थाका

मालिक, तिनका व्यवस्थापक र सञ्चारकर्मीहरूमा चाहिँ भँगेराको मुटुजत्रो सोच हुनु हुँदैन। हरेक दिन देशका आम मानिसको विचार र चिन्तन जे सुनेर र पढेर निर्माण हुन्छ, त्यही नै व्यक्तिगत आग्रह-पूर्वाग्रहले ग्रस्त भएपछि, सकारात्मक सामाजिक रूपान्तरण कसरी सम्भव होला ? हामीभित्रैबाट उत्पादन हुने राजनीतिज्ञहरूमा सकारात्मक सोच कसरी आउला ? यहाँ म सञ्चार संस्थाका मालिक, व्यवस्थापक र सञ्चारकर्मीहरू सबैलाई उल्लेख गरिरहेको छु। किनभने, समय र परिस्थिति अनुसार कहिले को, कहिले को र कहिले सबै दोषी देखिने गरेका छन्।

सबभन्दा पहिले, *कान्तिपुर*मा *नागरिक*को प्रशंसा गर्न किन नहुने ? या, *नागरिक*मा *कान्तिपुर*को प्रशंसा गर्न किन नहुने ? उदाहरणका लागि, *कान्तिपुर*ले धेरै राम्रा काम गरेको छ; तर कल्याणको प्रवर्धन मेरो विशेष चासोको क्षेत्र हुनाले झट्ट मनमा आएको एउटा प्रसङ्ग उल्लेख गरिहालूँ। मैले कतिपय मेरा ‘मालिक’

मित्रहरूलाई भन्ने गरेको छु, "*कान्तिपुर* दैनिकले बिक्री भएको हरेक प्रति *कान्तिपुर*को एक पैसा कल्याणका लागि छुट्ट्याएर साह्रै राम्रो काम गरेको छ। सक्ने सबै प्रकाशनगृहले त्यसो गरे कति राम्रो हुने थियो!" यद्यपि *कान्तिपुर* जस्तो संस्थाले त्योभन्दा धेरै बढी गरेर कल्याणको क्षेत्रमा असाधारण उदाहरण प्रस्तुत गर्न सक्छ भन्ने मेरो विश्वास हो, जुन मैले सम्बन्धित पक्षलाई भनेको पनि छु। अब यो लेखें भनेर '*कान्तिपुर*को प्रशंसा *नागरिक*मा गर्न हुँदैन' भन्ने? जगजाहेर छ, *कान्तिपुर* फुटेर *नागरिक*को जन्म भयो। त्यो व्यक्तिगत विमतिहरूको परिणाम थियो, सकियो। अब के त्यही तिक्तता पालेर बसिरहने? व्यक्तिगत विमतिलाई पेशागत अभ्यासमा कुनै हालतमा प्रतिविम्बित हुन दिनु हुँदैन। पत्रकारिताको एउटा दायित्व नै नराम्रो कोट्ट्याउने र नराम्रोको आलोचना गर्ने हो। तर त्यसको साथमा हामीले राम्रोको प्रशंसा गर्न जानेनौं भने हामीले हामीभन्दा मुनिका पुस्तालाई

के सिकाउने ? ईर्ष्या, द्वेष, कलुषित भावना, अस्वस्थ प्रतिस्पर्धा ? हरेक दिन हामीले बोलेको सुन्ने र लेखेको पढ्ने पाठक र श्रोताहरूसँग हामीले कुन नाकले आदर्श र नैतिकताको कुरा गर्ने ?

घमन्ड गर्ने विषय होइन, तर हामीले बुझ्नुपर्‍यो, यो समाजको सकारात्मक परिवर्तन चाहने हो भने पत्रकारिता त्यसका लागि एउटा सबभन्दा बलियो वाहन हो। त्यसैले प्रतिस्पर्धी भए पनि कम से कम राम्रा कामहरू हुँदा सबैले सबैको प्रशंसा गर्न जान्नुपर्‍यो। त्यो हो पेशागत आदर्श। त्यसो गर्दा न व्यापारमा घाटा हुन्छ, न त पेशामा। बरु ठूलो छाती राख्नेको रवाफै ठूलो हुन्छ। उसको नैतिक धरातल नै उचा हुन्छ। आफ्ना प्रतिद्वन्द्वीहरूको प्रशंसा देख्न नसक्ने, राम्रो काम गर्दा पनि खुट्टा तान्न खोज्ने हो भने नेताहरूले त्यसै गर्दा कुन आधारमा उनीहरूको आलोचना गर्ने ? त्यति मात्र होइन, दिनरात अरूको आलोचना गर्ने हामीले आफ्नै आत्ममूल्याङ्कन गर्ने चरित्रको विकास

गरेको चाहिँ खै? म आफैं भुक्तभोगी छु; कुनै सञ्चार माध्यमका मालिक या पत्रिकाका कमी-कमजोरीको चर्चा गऱ्यो भने, त्यस्तो लेख सम्बन्धित पत्रिकामा छापिँदैछापिँदैन। तर त्यस्तै आलोचना अरूबारे गर्ने हो भने ती खुशीसाथ छापिन्छन्। आफ्नो आलोचनालाई पनि ठाउँ दिएका छौं भन्ने देखाउन सञ्चार माध्यमहरूले श्रोता र पाठकका छोटाछोटा टिप्पणीहरूलाई अघि सार्ने गर्छन्। तर खै, एकाध घटनामा बाहेक कहिले कतै प्रमुख सम्पादकीय मुद्दाहरूमा, प्रकाशकहरूले व्यापार र पत्रकारिताबीच राख्नुपर्ने सन्तुलनका विषयमा चर्चा भएको छ? त्यो हुनै सक्दैन, किनभने त्यसो गर्दा स्वभावत: त्यसमा प्रकाशक, व्यवस्थापक र सम्पादकहरूको आलोचना हुन जान्छ, जुन उनीहरूले छाप्दैछाप्दैनन्। सञ्चार संस्थाका मालिक र हामी पत्रकारहरू गल्ती नै नगर्ने महामानव या कुनै उपल्लो दर्जाका नागरिक होइनौं। हाम्रा कमी-कमजोरीबारे पनि अरूको जस्तै गरी आम रूपमा टीकाटिप्पणी

हुनैपर्छ। कुनै निष्पक्ष टिप्पणीकारलाई, या योग्य छ भने, कटु आलोचकलाई पनि *कान्तिपुर* या *नागरिक*का कमी-कमजोरी केके छन् र केकेमा सुधार हुन सक्छ भनेर तत्तत् पत्रिकामा सिङ्गो लेख लेख्न किन नलगाउने ? होस् न खुला बहस ! केही समयअघिको कुरा हो, यो पङ्क्तिकार कार्यरत बीबीसी नेपाली सेवामा नेपाली सेवाको बारम्बार त्रुटि भेट्टाइरहने दुई जना नियमित श्रोता र सम्बन्धित क्षेत्रका विज्ञ वरिष्ठ पत्रकार ध्रुवहरि अधिकारी र सञ्चार विश्लेषक डा. प्रत्यूष वन्तलाई निम्त्याएर हामीले नेपाली सेवाका कमजोरीहरूबारे टिप्पणी गर्न लगाएर प्रसार गरेका थियौँ। के त्यसो गर्दा हामीलाई लाज भयो ? बरु, हामी सजग भयौँ। श्रोताहरूले पनि कस्ता कुराहरू विचार गर्नुपर्दो रहेछ भनेर थाहा पाए। ती विज्ञहरूको टिप्पणीबाट अन्य प्रतिस्पर्धीले पनि केही सिके होलान्। फाइदा आखिर सबैलाई भयो।

अब लागूँ, मेरा पत्रकार मित्रले ‘हामीले हो भने यो

छाप्न अलि गाह्रो हुन्छ, किनभने यहाँ पूर्वराजालाई सरकार, हजुर, बक्स्योस् जस्ता शब्दहरू प्रयोग गरिएका छन्' भनी गरेको टिप्पणीतिर। पत्रपत्रिकाका आफ्ना निश्चित सम्पादकीय मापदण्डहरू हुन्छन्। त्यो हतपती पार गर्नु हुँदैन। तर समाचारका रूपमा होइन, विचारका रूपमा 'बाइलाइन' सहित प्रकाशित हुने लेखमा एउटा नियमित टिप्पणीकारले सोची-विचारी र त्यस्तो भाषा किन प्रयोग गरियो भनी अर्थ्याईकन लेखेको लेखलाई छाप्नै अनुपयुक्त ठहर गर्नु ठीक हो कि होइन ? हो, मानहानि हुने या अन्य कारणले सम्पादकीय रूपमा अनुपयुक्त लेख छाप्दा छाप्ने पत्रिकाले पनि जिम्मेवारी वहन गर्नुपर्ने हुन्छ। जस्तो, दरबार हत्याकाण्डपछि कुनै प्रमाणबिना नै माओवादी नेता डा. बाबुराम भट्टराईले हत्याकाण्डको जिम्मेवार तत्कालीन अधिराजकुमार ज्ञानेन्द्र नै हुन् भनी लेखेको लेखलाई लिन सकिन्छ। त्यति बेला कतिपयले त्यस्तो लेख छाप्नु हुँदैनथ्यो भनी सम्पादक, प्रकाशक दुवैलाई दोष

दिए। तर, विचार पृष्ठमा छापिने अधिकांश लेखका हकमा त्यसमा व्यक्त विचारलाई लिएर सम्पादक या प्रकाशकलाई होइन, लेखकलाई दोष दिने गरिन्छ। सम्पादकले या प्रकाशकले विचार पृष्ठमा नै वैचारिक हस्तक्षेप गर्ने हो भने तिनले खुला बहस र लोकतन्त्रको वकालत कसरी गर्ने ? कुन नाकले समावेशी र सद्भावपूर्ण समाजको वकालत गर्ने ?

अब चर्चा गरूँ, कल्याणकारी कार्यका लागि दिइएको एक करोड रुपैयाँको चन्दाबारेको समाचार नछाप्ने केही पत्रिकाको निर्णयबारे। पत्रिकामा समाचार दुइटा कारणले छापिँदैनन्। पहिलो, छाप्नयोग्य समाचार नठानिएर। र, दोस्रो, अन्य महत्त्वपूर्ण समाचार बढी भैदिँदा स्थान अभाव भएर, जसका कारण कैयौँ पटक चाहेर पनि कतिपय समाचार छाप्न नसक्ने अवस्था पैदा हुन्छ। अब कुन चाहिँ समाचार संस्थाले भन्न सक्छ, नेपालको वर्तमान परिप्रेक्ष्यमा एक अग्रणी उद्योगपतिले आफ्नो कुनै सरोकार नभएको कल्याणकारी

संस्थालाई दिएको एक करोड रुपैयाँको दान छाप्नयोग्य समाचार थिएन भनेर ? सो समाचार नछाप्ने कुन चाहिँ पत्रिकाले भन्न सक्छ, सो समाचार दिनदिनै डुङडुङ गन्हाउने गरी बोलिएका कैयौँ राजनीतिज्ञका 'रिसाइकल' गरिएका भाषणहरूभन्दा कम महत्त्वपूर्ण थियो, त्यसैले बढी महत्त्वपूर्ण समाचारहरूलाई ठाउँ दिँदा स्थान अभाव भयो भनेर ? मसँग भएका केही सम्पादकीय विवादकै कारण त्यस्तो अविवादास्पद र सकारात्मक समाचारमा समेत व्यक्तिगत पूर्वाग्रहबाट माथि उठ्न नसक्ने सञ्चार संस्थाहरूले कुन धरातलमा उभिएर आदर्शको खेती गर्ने ? तिनले अरू राजनीतिक विषयमा झन् कति आग्रह राखेर काम गरिरहेका होलान्, सहजै अनुमान लगाउन सकिन्छ । पत्रकारिताको बजार बढी प्रतिस्पर्धात्मक र पेशागत हुँदै जाँदा 'विचार' त परै छोडिदिऊँ, 'समाचार' का हकमा समेत व्यक्तिगत आग्रहबाट माथि उठ्न नसक्नेहरूले बुझे हुन्छ, ती समय अन्तरालमा स्वत: पछि पर्दै

जान्छन् र मर्छन् पनि। अहिले नै, पहिलेका कतिपय अग्रणी भनिएका पत्रिकाहरूलाई तुलनात्मक रूपमा नयाँ पत्रिकाहरूले प्रतिस्थापन गरिसकेका छन्। सम्पादकहरूले भन्दा पनि यो कुरा पूर्वाग्रह राख्नमा बढी माहिर प्रकाशक र तिनकै निर्देशनमा काम गर्ने व्यवस्थापकहरूले बुझ्नु जरूरी छ।

मूल कुरा के हो भने, ठूलो काम गर्छु भन्ने र गरें भन्नेहरूको मुटु पनि ठूलो हुनुपर्‍यो। सानो मुटु भएकाहरू त दोषका भागी छँदै छन्। तर, ठूलो मुटु राख्नेहरूका लागि पनि यो ठाउँमा समस्या नभएको भने होइन। पेशाप्रति पूर्ण इमानदार र उदार मेरा कैयौँ पत्रकार मित्र बाध्यताको शिकार भएको मैले देखेको छु। किनभने, यही काठमान्डु खाल्डोभित्र जागिर खाएर तिनले जिन्दगी गुजारा गर्नुपर्छ र त्यही बाध्यतामाथि गर्नेले रजाइँ गर्छ। हामीले हाम्रा यी यावत् कमजोरीबारे सार्वजनिक बहस छेडे मात्र सानो मुटु राखेर काम गर्ने प्रकाशक, व्यवस्थापक र

पत्रकारहरूलाई गैरपेशागत सङ्कीर्णता देखाउँदा लाज होला र हामी सबैलाई फाइदा होला। अन्यथा, यो चरित्र सहजै जानेवाला छैन।

*नागरिक दैनिक, २०६६ माघ २७*

## दीनबन्धुजीले यसो पनि गरे कसो होला ?

म सामान्यतया पाहुनाहरूलाई घुमाउनुपर्दा, आफैँले हेर्नुपर्दा या नयाँ ठाउँमा जाँदा मात्र मन्दिरहरू जाने गर्छु। धर्मप्रतिको अनास्थाले होइन, धर्मको आफ्नै ढङ्गको परिभाषाले गर्दा म नियमित मन्दिर-यात्री र परम्परागत पुजारी हुन नसकेको हुँ।

*कुन मन्दिरमा जान्छौ यात्री,*
*कुन मन्दिरमा जाने हो ?*
*कुन सामग्री पूजा गर्ने,*
*साथ कसोरी लाने हो ?*
*मानिसहरूको काँध चढी,*
*कुन देवपुरीमा जाने हो ?*
*हाडहरूका सुन्दर खम्बा,*
*मांसपिण्डका दीवार !*

*मस्तिष्कको यो सुनको छाना,*
*इन्द्रियहरूका द्वार !*
*नसा-नदीका तरल-तरङ्ग,*
*मन्दिर आफू अपार !*

महाकवि देवकोटाले व्यक्त गरेको यो दर्शनमा विश्वास गर्ने हुनाले मैले मान्छेलाई पूजा गर्ने मान्छेहरूमा मन्दिरको प्रतिरूप देख्ने गरेको छु। त्यसैले, मानव कल्याणको क्षेत्रमा अतुलनीय काम गर्ने पण्डित दीनबन्धु पोखरेल जस्ता मान्छेहरूलाई मैले सधैं धर्मका वास्तविक प्रतिमूर्ति ठान्ने गरेको छु। हालै लन्डनबाट आएका आफ्ना निकट मित्रहरूसँग काठमान्डु उपत्यकामा रहेका सूर्य, कार्य, जल र अशोक विनायक जाँदा मैले धर्मका तिनै प्रतिमूर्ति पोखरेललाई बारम्बार सम्झिएँ। उनलाई मैले किन सम्झिएँ, त्यसबारे एकै छिनमा चर्चा गर्नेछु; तर त्यसभन्दा अगाडि अलिकति पोखरेलकै बारे चर्चा गरूँ।

दीनबन्धु पोखरेलबाट जति धेरै समाजहितको काम

सम्भवतः नेपालमा कुनै पनि व्यक्तिबाट भएकै छैन। तर, उनी तथाकथित धनीमानीहरूका आँखामा उनीहरूलाई मर्दा-पर्दा चाहिने कुनै 'कर्मकाण्डी पण्डित' मात्र परे। त्यसैले, त्यस्ता धनीमानीहरूले उनलाई सम्भवतः चिन्दैचिन्दैनन्। बाँकी जो छन् तीमध्ये पनि अधिकांशका लागि उनको इज्जत उनीभन्दा समाजलाई धेरै कम योगदान पुऱ्याउने व्यापारी, नेता, मन्त्री, राजदूत या विदेशमा काम गर्ने 'ठूला नेपाली' जति हुने सम्भावनै रहेन। पोखरेलले बाउबाजेबाट जे सिके, आफूमा जुन सीपको विकास गरे र त्यसलाई जसरी पूरै समाजको हित र रूपान्तरणका लागि निःस्वार्थ, शान्तिपूर्ण र श्रद्धेय ढङ्गबाट उपयोग गरे, अन्य पेशाका मानिसले आफ्नो सीपलाई त्यसै गरी उपयोग गरिदिने हो भने यो समाज र संसार निःसन्देह भिन्दै हुनेछ।

पोखरेलले अङ्ग्रेजी पढेकै थिए; नेपाली र संस्कृत नपढ्ने त कुरै भएन। उनी धेरै युवाझैँ विदेशतिर बरालिएर त्यतै विलीन हुन सक्थे या अन्य विविध

विकल्पमध्ये संस्कृतको पृष्ठभूमि हुनेहरूले अपनाउने एउटा बाटो, लोकसेवा दिएर भविष्यमा सचिव हुने सपना पनि बुन्न सक्थे। तर उनी आम मानिसभन्दा फरक थिए, त्यसैले भिन्न बाटो रोजे। महायज्ञहरू लगाएर त्यसबाट विद्यालय, क्याम्पस, अस्पताल निर्माणका लागि दशौँ लाख सङ्कलन गरिदिने आफ्ना पिता नारायण पोखरेलको बुटवलमा पुराण वाचन गरिरहेकै बेला गोली हानी हत्या गरिएपछि, आफूभित्र सुषुप्त अवस्थामा रहेको करुणाभाव जागृत भएको पोखरेल बताउँछन्। उनी भन्छन्, "करुणा हरेक व्यक्तिभित्र सुषुप्त अवस्थामा रहने भक्तिभाव हो। म करुणाको शक्तिमा विश्वास गर्छु। यही भावना अरूभित्र पनि जगाउन खोज्छु।" उनका यज्ञ र प्रवचनहरूबाट अहिलेसम्म विद्यालय, क्याम्पस, विश्वविद्यालय, अस्पताल, बाटो, कुलो निर्माण गर्न दुई अर्ब रुपैयाँभन्दा बढी उठिसकेको उनी र उनका सहयोगीहरूको अनुमान छ। त्यसबाट धेरै गरीब र असहाय नेपालीले प्रत्यक्ष

लाभ पाएका छन् ।

पोखरेलको सीप र उनीमाथिको विश्वाससँग आम मानिसमा निहित सबभन्दा प्रबल पक्ष – धार्मिक आस्था – गाँसिएको छ । त्यसै भएर होला, अरू बेला कल्याणकारी कामबाट तर्केर हिँड्नेहरूले पनि पोखरेलले महायज्ञ लगाएपछि या प्रवचन दिएपछि लाखौँ रुपैयाँ दान गर्छन् । हुनेले पनि दिएका छन्; नहुनेले पनि दिएका छन् । त्यसरी दिनेमा केही लाख मात्र होइन, एकैपल्ट ५६ लाख सुम्पने सुर्खेतका मोतीप्रसाद, ५२ लाख दिने काठमान्डुका पारसमणि बराल र ३० लाख चढाउने बुटवलका बालकृष्ण दाहाल र सामूहिक रूपमा करोडौँ रुपैयाँ दान गर्ने कैयौँ नेपाली छन् । त्यो सबै रकम अहिलेसम्म मूल रूपमा शिक्षा, स्वास्थ्य जस्ता सामाजिक कल्याणका क्षेत्रमा खर्च भएको छ, जुन साह्रै राम्रो हो । पोखरेलको धार्मिक अनुष्ठानमा सामाजिक कल्याणका लागि त मानिसहरूले त्यति धेरै रकम दान गर्छन् भने, उनले धार्मिक कल्याणकै लागि

त्यस्ता अनुष्ठानहरूको आयोजना गर्ने हो भने कति रकम उठ्ला !

अब फर्किऊँ, चार विनायक भ्रमण गर्दा मैले दीनबन्धु पोखरेललाई किन सम्झिएँ भन्ने प्रसङ्गमा। प्रस्ट शब्दमा भनूँ, यो पङ्क्तिकारले नेपालका हिन्दू धर्मावलम्बीका जस्ता फोहोर र अव्यवस्थित धार्मिक स्थलहरू अन्य कुनै धर्मावलम्बीको देखेकै छैन। हाम्रा मन्दिरहरूको स्थितिलाई हेरेर भन्ने हो भने हामीजति आडम्बरपूर्ण आस्तिकहरू कमै हुन्छन् होला। त्यस्ता आडम्बरहरूमा शाहकालीन राजाहरूदेखि धेरै धनी व्यापारीहरूसम्म पर्छन्, जसले मूर्तिपूजा गरेपछि, बलि चढाएपछि र लाखबत्ती बालेपछि सधैँ धर्म हुन्छ भन्ने सम्झिए। हरेक दिन आफूले पूजा गर्ने, वरदान माग्ने आस्थाको केन्द्र हिलाम्मे, धूलाम्मे, जीर्ण, अव्यवस्थित, फोहोर देख्दा तिनलाई अलिकति पनि अप्ठेरो नलाग्नु अचम्मको कुरा हो। त्यति मात्र होइन, कैयौँ मन्दिरको परिसरमा थप सुविधा उपलब्ध गराउन नयाँ भवनहरू

निर्माण हुँदा ती बाटोछेउ पिलर ठड्याएर पसल थाप्न उठाइएका कवलजसरी निर्माण गरिएका छन्। धिक्कार छ हाम्रो धार्मिक आस्था र सृजनात्मक क्षमतालाई ! हाम्रा पुर्खाहरूले त्यति कलात्मक मन्दिरहरू बनाइदिए र कति सफा र सुग्घर रूपमा हामीलाई छोडेर गए अनि हामीले चाहिँ तिनलाई पूजा गर्न जाँदा पनि पैतालाभरि तीन पत्र फोहोर टाँसिने स्थितिमा मात्र राखेका छैनौँ, तिनलाई कलाविहीन कवलहरूले घेरिरहेका छौँ। स्रोतको अभावले गर्दा त्यसो भएको होइन। बुद्धि र सृजनशीलताको अभावले गर्दा त्यसो भएको हो। धार्मिक कामका लागि भनेपछि सम्भवत: पैसै नलिई पनि कैयौँ स्वयंसेवकले नियमित सरसफाइ गरिदिन्थे होलान् र कैयौँ उत्साही इन्जिनियर मन्दिर सुहाउँदो कलात्मक डिजाइन गरिदिन राजी हुन्थे होलान्। तर, त्यति अग्रसरता लिने बुद्धि पनि कतिपय मन्दिर व्यवस्थापन समितिहरूमा नभएको देखिन्छ। उदाहरणका लागि, सूर्य, कार्य र जल विनायक यति रमणीय

स्थलमा अवस्थित छन्, तिनलाई राम्ररी व्यवस्थित मात्र गर्ने हो भने, ती सबै राम्रा धार्मिक पर्यटकीय केन्द्रका रूपमा विकास हुन सक्छन्। तर, त्यहाँ हिन्दू धर्मावलम्बीहरू पूजा गर्न र वरदान माग्न मात्र जान्छन्। तिनलाई पूजा गर्न जाँदा पैतालाभरि टाँसिएको मैलो, मन्दिरवरिपरिको फोहोर, भत्किएको परिसर, छेउछाउमा आफ्नै अनुहार कुरूप देखिने गरी टाँगिएका सस्ता फुटेका ऐनाहरू, मन्दिरको गारोमा टाँसिएका बाथरुम र ट्वाइलेटमा लगाइने टल्किने टायलहरू ... केहीले पनि पिरोल्दैनन्। सम्भवत: तिनले गिर्जाघर, विहार र मस्जिदहरू कति सफा र व्यवस्थित हुन्छन् भन्ने देखेकै छैनन्। या, देखेर पनि तिनले तुलना गरेर हाम्रा धार्मिक स्थलहरूलाई पनि त्यस्तै बनाउन सके कस्तो हुन्थ्यो होला भनेर सोचेकै छैनन्।

यो पङ्क्तिकारलाई लागेको कुरा के हो भने, आफ्नो प्रतिभा, प्रभाव, सामर्थ्य, लगन र इमानदारीका कारण पण्डित दीनबन्धु पोखरेलले हाम्रा मन्दिरहरूलाई सुकिला

र व्यवस्थित तुल्याउन ठूलो भूमिका निर्वाह गर्न सक्छन्। पोखरेलले अन्य कल्याणकारी कामहरूका लागि करोडौँ रुपैयाँ उठाउन सक्छन् भने, मानिसहरूको अझ धेरै आस्था हुने मन्दिरहरूको जीर्णोद्धार, मन्दिर परिसरको सरसफाइ र थप सुविधाको निर्माणका लागि झन् कति धेरै रकम उठाउन सक्लान्! जुन स्तरमा उनी रकम उठाउने क्षमता राख्छन्, त्यसबाट प्रस्ट छ, उनले एउटा मन्दिरका लागि सम्भवतः एकपल्ट महायज्ञ लगाइदिए पुग्छ। त्यसपछि उनले उठाइदिएको रकमलाई मन्दिर व्यवस्थापन समितिले बुद्धि पुऱ्याएर परिचालन मात्र गर्ने हो भने कुनै पनि मन्दिरका देवताले आफ्नो साख गुमेको महशूस गर्नुपर्नेछैन। अहिले हाम्रा अधिकांश मन्दिर देवता बस्नयोग्य नै छैनन्। पोखरेलले यसतर्फ अलिकति विचार गरिदिए कसो होला भन्ने यो पङ्क्तिकारको विनम्र आग्रह हो। उनले त्यसो गरे भने वरिपरिको दुर्गन्धबीच मूर्तिपूजा गरेर धर्म गरेँ भन्ठान्ने धेरै

आडम्बरी अर्बपति आस्तिकहरूको पनि घैँटामा घाम लाग्ने थियो कि ?

*कान्तिपुर दैनिक, २०६६ माघ २७*

# यो देशमा यस्ता मान्छे पनि छन्

हेर्दाखेरि उनी झुत्रेझाम्रे देखिन्छन्। धनी पटक्कै छैनन्। बाँच्न पुग्ने निम्न मध्यमवर्गीय पैतृक सम्पत्ति भने उनीसँग छ। राम्रो निजी विद्यालयमा या विदेशको प्रसिद्ध विश्वविद्यालयमा पढेका पनि होइनन्। नेपालकै एउटा सरकारी कलेजबाट स्नातकसम्म गरेका छन्। तर उनले समाजको रूपान्तरणका लागि नेपालको मात्र होइन, विश्वकै अधिकांश मानिसले गर्न त परै छोडिदिऊँ, सोच्नसम्म पनि नसक्ने काम गरेका छन्। कतिपयलाई अतिशयोक्तिपूर्ण लाग्न सक्छ; तर उनी आउँदा दिनहरूमा विचलित भएनन्, बिग्रिएनन्, पारदर्शी रहिरहे र उनलाई यसै गरी भाग्यको आशीर्वाद रहिरह्यो भने उनी भविष्यमा नोबेल पुरस्कार हासिल गर्ने प्रचुर सम्भावना बोकेका नेपाली हुन्। उनको समाज रूपान्तरणको अभियानले बङ्गलादेशका नोबेल

पुरस्कार विजेता मोहम्मद युनुसको ग्रामीण बैङ्कको जत्तिकै अनुकरणीय सम्भावना बोकेको छ।

ती असाधारण, उदार र प्रेरणादायी व्यक्तित्व हुन् काठमान्डु, जोरपाटीका ३६ वर्षीय उत्तम सन्जेल। खास गरी आर्थिक रूपले विपन्न स्थानीय मजदुरका छोराछोरीलाई सस्तो, सुलभ र स्तरीय शिक्षा दिन उनले २०५८ सालमा जोरपाटीमा स्थापना गरेको समता निकेतन विद्यालयले हाल देशका १८ हजार बालबालिकालाई एकदेखि १० कक्षासम्म महिनाको एक सय रुपैयाँ शुल्कमा पढाइरहेको छ। शुरूदेखि अन्त्यसम्म एक पैसा पनि शुल्क वृद्धि हुँदैन र शुरूमा केवल एकपल्ट एक सय ५० रुपैयाँ भर्ना शुल्क लिइन्छ, त्यत्ति हो। बाँसका भाटाहरूबाट कलात्मक रूपमा निर्माण गरिने, ऊन्डैऊन्डै भूकम्प प्रतिरोधक भने पनि हुने, वातावरण अनुकूल ती विद्यालयहरूको सङ्ख्या अहिले ११ छ। ती विद्यालय देशका विभिन्न जिल्लामा छरिएका छन्। १५ वर्षदेखि २० वर्षसम्मका

लागि भाडामा लिइएका जग्गामा दुई हजारदेखि तीन हजारसम्म विद्यार्थी पढाउन सक्ने एउटा समता विद्यालय निर्माण गर्न ४० लाखदेखि ६० लाख रुपैयाँसम्म लाग्ने बताइएको छ । हाल त्यस्ता विद्यालय निर्माण गरिदिने दाताहरू लाइन लागेर पर्खिरहेका छन् । तर त्यत्रो सद्भावलाई कसरी धान्ने भन्नेबारे उत्तम सन्जेल आत्तिएका छैनन्, 'कुल' छन् । उनलाई ढाडस दिँदै बढ्दो रूपमा आध्यात्मिक बन्दै गएका मेरा मित्र पत्रकार विजयकुमार पाण्डे भन्छन्, "हेर्नोस्, नियति र नियत ठीक भएपछि सबै कुरा ठीक हुन्छ । त्यसैले आत्तिनुपर्दैन ।"

उत्तम सन्जेललाई सहयोग गर्न लाइन लागेर बसेकाहरूमध्ये हालै पालो आएको थियो अर्का एक जना असाधारण, उदार र प्रेरणादायी नेपाली डाक्टर उपेन्द्र महतोको । गैरआवासीय नेपाली सङ्घका संस्थापक तथा धेरैजसो समय रूसमा बिताउने बहुराष्ट्रिय उद्योगपति महतो धन र मन अनि शब्द र कर्मका अद्भुत

सङ्गम हुन्। उनले आफू जन्मिएको सिराहाको कर्जनाह गाउँमा सात करोड रुपैयाँको लागतमा भव्य अस्पताल निर्माण गरिदिन लागेका छन्; आफ्नै गाउँनजिक डेढ करोडको लागतमा विद्यालय निर्माण गरिदिएका छन्; पशुपतिमा आफैँले निर्माण गरिदिएको किरियापुत्री भवनमा अर्को तीन करोड थपेर त्यसलाई विस्तार गर्दै छन् र अहिले तीन करोड ६० लाख खर्च गरेर तराई क्षेत्रमा समता निकेतनका नौ विद्यालय निर्माण गरिदिने अभियानमा जुटेका छन्। ती विद्यालय निर्माण भएपछि नेपालका निम्न आय भएका परिवारका कम्तीमा ४० हजार बालबालिकाले महिनाको सय रुपैयाँमा सम्पूर्ण विद्यालय शिक्षा हासिल गर्न सक्नेछन्। उपेन्द्र महतो दशकौँदेखि देश र जनताका लागि दिलोज्यान दिएर सङ्घर्ष गरिरहेका, देश र जनताकै लागि मन्त्री र प्रधानमन्त्री बनिदिएका हाम्रा अधिकांश नेताभन्दा बढी देश र जनताप्रेमी नेपाली भएकाले यो लेखकलाई उनको अगाडि 'गैरआवासीय' शब्दावली प्रयोग गर्न

पटक्कै मन लाग्दैन। उनी नेपाली र केवल नेपाली हुन्, जसको यो देशका लागि हाम्रा अधिकांश राजनीतिज्ञको भन्दा बढी योगदान छ भन्दा गल्ती हुँदैन।

आफूले बनाइदिने प्रतिबद्धता व्यक्त गरेका नौ विद्यालयमध्ये छ वटाको शिलान्यास गर्ने क्रममा उनले भने, "म सिराहाको मान्छे, सबै विद्यालय सिराहामै बनाइदिन सक्थेँ। तर यो देश हाम्रो हो। त्यसैले हामीले आफ्नै ठाउँबारे मात्र सोच्नु हुँदैन; सिङ्गो देशकै बारे सोच्नुपर्छ।" हिन्दी भाषामा पोख्त भए पनि सप्तरी, सिराहा, सर्लाही, रौतहट, मकवानपुर र रूपन्देहीमा भएका शिलान्यास समारोहहरूमा महतोले कहीँ पनि हिन्दीमा भाषण गरेनन् र सबै ठाउँमा "तराई, हिमाल, पहाड सबै हाम्रो हो; हामी नेपाली हौँ" भने। अचम्मको कुरा के छ भने, हरेक सफल पुरुषका पछाडि महिलाको हात हुन्छ भन्ने भनाइलाई पुष्टि गर्दै उनकी श्रीमती डाक्टर समता महतो जहाँ गए पनि 'यसो गर्न कति लाग्छ? उसो गर्न कति

लाग्छ ?' भनेर सहयोग गर्न तत्परता देखाइहाल्थिन् र कतिपय ठाउँमा त सहयोगको प्रतिबद्धता जनाइहाल्थिन् ।

त्यो देखेर मैले उनलाई भनेँ, "तपाईंको छाती त उपेन्द्रजीको भन्दा विशाल छ जस्तो छ नि ?"

उनले भनिन्, "ल ... म त उहाँलाई कत्ति भन्छु, स्कुल बनाउनुपर्छ, अस्पताल बनाउनुपर्छ भनेर !"

उनीहरूले चार दिन लामो शिलान्यास यात्रामा आफ्नो चार वर्षको छोरालाई पनि पूर्ण रूपले सहभागी गराएका थिए, जसका बारे उपेन्द्र महतो भन्थे, "यसलाई पनि त अहिलेदेखि राम्रो काम गर्न सिकाउनुपर्‍यो नि ।" भन्नेले भन्लान्, उपेन्द्र महतोको जस्तो पैसा भैदिएको भए हामी पनि गर्ने थियौँ भनेर । त्यसो हो भने उनीभन्दा कम धन भएका उद्योगपतिहरूले धनकै अनुपातमा उनले गरेको भन्दा कम काम गरे भैहाल्यो । उत्तम सन्जेल जस्ता मानिसहरू त करोडौँमा एक जना मात्र जन्मिने हुनाले समाज रूपान्तरणको काम

सामान्यतया आर्थिक रूपमा विपन्नहरूबाट सम्भव हुँदैन। तर धनीहरू त हरेक समाजमा धेरै हुन्छन् र नेपालकै परिप्रेक्ष्यमा कुरा गर्ने हो भने पनि, महतोले समता निकेतनका नौ विद्यालय निर्माण गरिदिएका छन् भने एउटा मात्र विद्यालय निर्माण गरिदिन सक्ने व्यापारीहरू नेपालमा हजारौँ छन्। तर ती अधिकांशले केही गर्दैनन्; बरु दिनदिनै मञ्चमा उभिएर केही गरेन भनेर सरकारलाई गाली गर्छन्। आफ्नै टोल बनाउन नजान्ने, आफ्नै घरअगाडिको बाटो बनाउन नजान्ने, एउटा विद्यालय निर्माण गरिदिन नसक्ने धनाढ्यले देश बनाउने भाषण छाँट्नु बेकार हो।

जे होस्, यो देशमा उत्तम सन्जेल र उपेन्द्र महतो जस्ता नागरिकहरू पनि छन् र यो देशको शक्ति, भविष्य, गर्व र प्रेरणा तिनै हुन्। तर संसारभरि नै स्थापित बनिसकेको त्रुटिपूर्ण र विडम्बनापूर्ण सामाजिक सोचको परिणाम भन्नुपर्छ– सन्जेल र महतो जस्ता नागरिकहरू अझै पनि, र कहीं पनि, अनुकरणीय

आदर्श बन्न सकेका छैनन् । सन्जेलको प्रशंसा गरे पनि उनको पदचिह्नमा हिँड्न सम्भवतः कोही पनि चाहँदैन । महतोको व्यापारिक पदचिह्नमा हिँड्न त धेरैले चाहलान्; तर उनको कल्याणकारी पदचिह्नमा हिँड्न चाहनेहरू चाहिँ भेट्टाउन गाह्रो हुन्छ । यो मानसिकतामा परिवर्तन लेराउने चेष्टा नगरेसम्म समाजमा सधैँ काम गर्नेभन्दा कुरा गर्नेहरू ठूला ठानिनेछन् । समाजमा जो वास्तविक आदर्श र आकर्षण हुनुपर्ने हो, तिनलाई 'हिरो' बनाउन नसक्नु एउटा घातक विडम्बना हो, जसले गर्दा संसारभरि हामीले हाम्रा सन्तानका लागि स्वकेन्द्रित सफलताहरूलाई मात्र पाइला पछ्याउनयोग्य उदाहरणका रूपमा प्रस्तुत गर्ने गरेका छौँ । तर, स्वकेन्द्रित सफलताले व्यक्तिलाई समृद्ध बनाए पनि सम्पूर्ण समाज, देश र विश्वलाई समृद्ध र न्यायपूर्ण बनाउन सक्दैन । त्यसले धनी र गरीबबीचको असमानतालाई मात्र बढाउँछ ।

२०६६ फागुन ८ देखि १२ गतेसम्म भएको समता

शिलान्यास यात्रामा सन्जेल र महतो जोडीको साथमा व्यक्तिगत सफलताको केन्द्रमा सधैँ समाजलाई राख्ने समता स्कुलका 'पिता' हास्य कलाकारद्वय मदनकृष्ण श्रेष्ठ र हरिवंश आचार्य (मह) पनि थिए, जसले यात्राभरि सबैलाई आँसु आउन्जेल हँसाइरहे। सोही यात्राका क्रममा मदनकृष्ण श्रेष्ठको सफल कवि व्यक्तित्व पनि उजागर भयो। महको सहयोगबाट धेरै सामाजिक काम भएका छन्। केही दिनअगाडिको मात्र कुरा हो, काठमान्डुको कपनस्थित ग्राम शिक्षा मन्दिर विद्यालयमा विद्यालयका लागि उनीहरूले एकै दिन ५४ लाख रुपैयाँभन्दा बढी सङ्कलन गर्न सहयोग पुऱ्याएका थिए, जसको समाचार कहीँ आएन। सञ्चार माध्यमले पत्रकारिताको केन्द्रमा सकारात्मक समाचारलाई स्थान नदिएसम्म पत्रकारिताको 'सार्वजनिक हित' को धर्म पूरा हुँदैन भन्ने मान्यता राख्ने यो पङ्क्तिकारको सोचसँग तादात्म्य राख्ने यात्राका अर्का सदस्य थिए पत्रकार विजयकुमार पाण्डे, जसको कार्यक्रम हेरेर नै

महतो सन्जेलबाट प्रभावित भएका थिए। त्यस्तै, यात्रा-भ्यानका अर्का सहभागी थिए उद्योगपति तथा समाजसेवी जीवा लामिछाने, जसले प्रशस्त कल्याणकारी कामहरू गरेका छन्। सकारात्मक सोचका धनी अन्य केही व्यक्ति र पत्रकारहरू पनि संलग्न सो यात्रा यो पङ्क्तिकारका लागि एउटा प्रेरणादायी स्मरणका रूपमा रहिरहनेछ। अन्त्यमा नभनी हुँदैन, ईश्वर कहीँ छन् भने उनले कृपया सुनिदिऊन्, यो देशमा पूर्वराजा ज्ञानेन्द्र, गिरिजाप्रसाद कोइराला, माधवकुमार नेपाल र पुष्पकमल दाहालहरूभन्दा बढी उत्तम सन्जेल र उपेन्द्र महतोहरूले जन्म लिऊन्!

*नागरिक दैनिक, २०६६ फागुन १४*

# आपत्तिजनक पत्रकारिता

२०६६ फागुन २० गते *नागरिक* दैनिकको अग्रपृष्ठमा प्रमुखताका साथ एउटा समाचार छापियो, 'तीन डीएसपी जमिम हत्याका अभियुक्तसँग निरन्तर सम्पर्कमा' शीर्षकमा। सो समाचारमा उच्च स्रोतलाई उद्धृत गर्दै बहालवाला तीन डीएसपी सञ्चार उद्यमी 'जमिम शाह हत्यामा प्रत्यक्ष संलग्न रहेको दावी गरिएका भारतीय नागरिक बब्बु भनिने दीपक शाहीसँग सम्पर्कमा रहेको तथ्य खुलेको' बताइएको छ। ती तीन डीएसपीलाई अनुसन्धानको दायरामा नल्याइएको उल्लेख गर्दै पत्रिकामा तीनै जनाको नाम मात्र होइन, बकाइदासाथ टेलिफोन नम्बर पनि दिइएको छ। तर, देशको एउटा प्रमुख पत्रिकाको अग्रपृष्ठमा त्यति जघन्य अपराधमा जोडेर तीन-तीन प्रहरी अधिकृतको नाम र टेलिफोन नम्बर नै छाप्दा पनि पत्रिकाका संवाददाता स्वयंले भने

आफैँसँग भएको नम्बर प्रयोग गरेर ती तीन जनासँग प्रतिक्रियासम्म लिने प्रयास गरेको देखिँदैन! परिणामस्वरूप भोलिपल्ट ती तीनमध्ये डीएसपी सुरेन्द्रबहादुर सिंहले *नागरिक* दैनिकमै 'समाचार प्रकाशित गर्नुअघि सम्बन्धित व्यक्तिलाई सम्पर्क गर्नुपर्ने पत्रकारिताको मान्यता संवाददाताले अवलम्बन नगरेको' गुनासो गर्दै आफ्नो भनाइ पाठकपत्रमार्फत राखे।

नेपालमा अग्रपृष्ठमा प्रमुखताका साथ व्यक्तिको मानहानि गरिन्छ; तर खण्डन छापिइहाल्यो भने पनि भित्री पृष्ठको पाठकपत्र खण्डमा सानो ठाउँ दिइन्छ, जसमा धेरैका आँखै नपर्न सक्छन्। त्यो प्रवृत्तिलाई तोडेर *नागरिक* दैनिकले डीएसपी सिंहको खण्डनलाई अग्रपृष्ठमै प्रमुखताका साथ छाप्यो, जुन सराहनीय छ। ती प्रहरी अधिकृतहरू दोषी छन् या छैनन्, त्यो भिन्दै कुरा हो; तर यो आलेखमा उठाउन खोजिएको विषय के हो भने, मान्छेको पेशा र जीवनै बरबाद हुने मानहानिपूर्ण प्रकृतिका अत्यन्त आपत्तिजनक समाचारहरू नेपाली

मिडियामा बारम्बार आउने गर्छन्, जसलाई न नेपाली प्रेसले न त कानूनले गम्भीरतापूर्वक लिने गरेको छ। त्यस्तै नेपाली प्रेसमा आपत्तिजनक समाचार मात्र होइन, पूर्ण झूट र अत्यन्त आपत्तिजनक विज्ञापनहरू पनि दिनदिनै छापिने गर्छन्। त्यसलाई पनि न नेपाली प्रेसले न त कानूनले गम्भीरतापूर्वक लिने गरेको पाइन्छ।

प्रसङ्ग मानहानिको विषयबाट शुरू गरूँ। पत्रकारले सक्दो इमानदारीका साथ गलत कुराहरूलाई उजागर गर्नुपर्छ; त्यसमा कुनै शङ्कै भएन। तर, पक्का नभैकन अधिकांश विषय उठाउनै हुँदैन। समाचार छाप्ने पहिलो बनेर गल्ती हुनुभन्दा दोस्रो बनेर सही हुनु राम्रो। पत्रकारिताको आचार संहिता र मानहानिका कानून आफ्नो ठाउँमा छँदै छन्; तर सबभन्दा पहिले पत्रकारले आफुलाई आफूले आरोप लगाउन लागेको व्यक्तिको ठाउँमा राखेर हेर्नुपर्छ र आफूले नगरेको कसूरमा आफ्नो नाउँ पत्रिकामा छापिए आफूलाई

कस्तो महशूस हुन्छ होला भनेर सोच्नुपर्छ। त्यत्ति सोच्नेबित्तिकै धेरै समस्या आफैँ हल हुन्छन्। तर, यहाँ यस्ता ऊर्जाशील पत्रकारहरू छन्, जसको कलम चलेपछि थामिँदैथामिँदैन; तिनले रोकिएर दुईपल्ट सोच्दैसोच्दैनन्।

सार्वजनिक ओहोदामा बसेका व्यक्तिहरूको आचरणका सम्बन्धमा आम टिप्पणी गर्दा त्यसलाई मानहानि मानिँदैन। उदाहरणका लागि, कुनै टिप्पणीकारले 'उपप्रधानमन्त्री सुजाता कोइरालालाई त लाजै छैन; सबैले आलोचना गर्दागर्दै जे पनि गर्छिन्; आफैँविरुद्ध छानबिन गरिरहेको लेखा समितिका सभापतिलाई सुटुक्क विदेश लिएर हिँड्दा उनलाई अप्ठेरोसम्म लागेन' भनेर टिप्पणी गऱ्यो भने त्यसलाई मानहानि भयो भन्न नमिल्ला। तर, एकदमै भरपर्दो समाचार स्रोतले भनेको भए पनि, आफूसँग ठोस प्रमाण छैन भने, 'सुटुक्क विदेश भ्रमणमा लगेका लेखा समितिका सभापतिलाई उपप्रधानमन्त्री कोइरालाले आर्थिक प्रलोभन

देखाएको बुझिएको छ’ भन्नु चाहिँ स्पष्ट रूपमा मानहानि हुन जान्छ । ‘छानबिनका क्रममा प्रहरीले फलानोलाई पक्राउ गरेको छ’ सम्म भन्दा त्यसलाई परिस्थिति हेरी मानहानि भन्न नमिल्ला; तर प्रहरीले आरोपको भरमा पक्राउ गरिएको व्यक्तिको छातीमा नम्बर टाँसेर खिचेको फोटो छाप्यो भने त्यो चाहिँ मानहानि नै हुन जान्छ । प्रमाण नपुगीकन भ्रष्टाचार, हत्या, अख्तियार दुरुपयोग जस्ता विषयहरूमा आरोप लगाउँदा अत्यन्त विचार पुऱ्याउनुपर्ने हुन्छ । ‘फलानोमाथि पत्रपत्रिकामा भ्रष्टाचारका प्रशस्त आरोप लगाइएका छन्’ भन्दा मानहानि हुँदैन; तर प्रमाणबिना, स्रोतको हवाला मात्र दिँदै ‘फलानोले यसरी भ्रष्टाचार गरेका रहेछन्’ भन्नु चाहिँ मानहानि नै ठहरिन्छ ।

व्यक्तिगत जीवनसँग सम्बन्धित पक्ष पनि त्यत्तिकै गम्भीर मानिन्छ । उदाहरणका लागि, पत्रकारिता आचार संहिताको राम्ररी पालना गर्ने र गम्भीर प्रकृतिको पत्रकारिता गर्ने हो भने अभिनेत्री नम्रता

श्रेष्ठको यौन प्रकरण भिडियोबारेको समाचार कुनै पनि हालतमा छाप्न मिल्दैनथ्यो । हो, उनी सार्वजनिक छविकी व्यक्ति हुन्; तर त्यो एक वयस्क युवतीले वयस्क पुरुषसँगको मामिलामा लिएको नितान्त व्यक्तिगत निर्णय थियो । त्यो न सार्वजनिक स्थानमा गरिएको क्रियाकलाप थियो, न त त्यसबाट सर्वसाधारणलाई असर पर्ने कुनै कामै भएको थियो, न नम्रता श्रेष्ठले आफूलाई कहिले यौन गतिविधिबाट टाढा बसेकी कुनै साधु या सन्तकै रूपमा प्रस्तुत गरेकी थिइन् । व्यक्तिगत जीवनसँगै सम्बन्धित समाचारका कारण अर्की अभिनेत्री श्रीषा कार्कीले आत्महत्या नै गरेको उदाहरण पनि हामीसँग छँदै छ । तर विडम्बनाको कुरा, पत्रकारिता आचार संहिता उल्लङ्घन गरेकामा दोषी प्रमाणित भएका कतिपय पत्रकार नै पत्रकारिता निगरानी निकाय प्रेस काउन्सिलका पदाधिकारी बनेका छन् । कतिपय पत्रकार स्वयं मानहानिका लागि कडा सजाय दिने कानून निर्माण गर्न चाहँदैनन् । किनभने,

धेरैलाई आफैँ त्यो खाल्डोमा जाकिउँला भन्ने डर छ। हामीकहाँ विद्यमान गाली बेइज्जती ऐन, २०१६ न वर्तमान परिप्रेक्ष्यका लागि सुहाउँदो छ, न त प्रभावकारी रूपमा त्यो कार्यान्वयन नै भएको छ।

अब गरूँ, नेपाली पत्रपत्रिकामा छापिने केही विज्ञापनका कुरा। विकसित देशहरूमा विज्ञापनको अनुगमन गरिने हुनाले सामान्यतया सरासर झूटो विज्ञापन छापिँदैन या सुनिँदैन। 'पेप्सोडेन्ट मञ्जनले दाँत माझेपछि म झूटो बोल्दिनँ' भन्ने जस्तो विज्ञापनले कुनै पनि विकसित मुलुकमा प्रकाशन या प्रसारणका लागि स्वीकृति नै पाउँदैन। तर, हामीकहाँ त्यो हरेक दिन रेडियो र टेलिभिजनमा बज्ने गर्छ। त्यति त भयो-भयो, वर्गीकृत डिस्प्ले खण्डमा छापिएको *नागरिक* दैनिकको एउटा विज्ञापन यस्तो छ– 'सेक्स पावर, मेल एन्ड फिमेल : ह्यान्डसम अप, लिङ्गको लम्बाइ र मोटाइ बढाउने अमेरिकन प्रोडक्ट ...।' यस्तो विज्ञापन देशका अन्य प्रमुख अखबारमा पनि दिनदिनै देख्न

सकिन्छ। हामीकहाँ विज्ञापन अनुगमन गर्ने निकाय छैन, त्यो भिन्दै कुरा हो; तर अलिकति पैसा आउँछ भन्दैमा देशका जिम्मेवार प्रमुख पत्रिकाहरूले पूर्णतः झूट र अश्लील विज्ञापन छाप्नुको कुनै पनि हालतमा औचित्य दर्शाउन सकिँदैन।

यो आलेख तयार पारिरहँदा *कान्तिपुर* प्रकाशनले 'उज्यालोतिर कान्तिपुरसँगै' योजनामार्फत आफ्ना नयाँ ग्राहकहरूलाई निःशुल्क सीएफएल चिम दुइटा र हरेक हप्ता गोलाप्रथाद्वारा चार जनालाई इन्भर्टर दिने विज्ञापन जोडतोडका साथ गरिरहेको छ। सो योजनाबाट पैसा, बिजुली र वातावरण 'सेभ' हुने उसको दावी छ। हो, सीएफएल चिमबाट पैसा, बिजुली र वातावरण तिनै कुरा 'सेभ' हुन्छ; तर इन्भर्टर बाँडेर बिजुली र वातावरण 'सेभ' हुन्छ भनेर कसरी भन्न सकेको होला, यो पङ्क्तिकारले बुझेको छैन। पत्रकारिता तथ्यमा आधारित हुन्छ भने विज्ञापन पनि सके तथ्यमा आधारित हुनुपर्‍यो, नसके झूटै चाहिँ हुनु

भएन । इन्भर्टरकै पैसामा आउने सौर्य बिजुली उपकरण दिने निर्णय गरेको भए पैसासँगै बिजुली र वातावरण पनि 'सेभ' हुन्छ भनेर बकाइदा भन्न मिल्ने थियो । तर अहिले जे भनिँदै छ, त्यो त शत प्रतिशत झूट हो ।

'विज्ञापनको सम्पादकीय जिम्मेवारी हामी लिँदैनौँ' भनेर सम्पादकहरूले भन्न मिल्दैमिल्दैन । विज्ञापन पत्रकारिताकै अंश हो । सामान्यतया सफल समाचारपत्रहरूमा सम्पादकीय सामग्री र विज्ञापन झन्डै बराबर जस्तै हुने गर्छन् । विज्ञापन पनि कतिपय अर्थमा समाचार नै हो । आफूलाई आम्दानी हुन्छ भनेर जानाजान झूटो जानकारी छाप्ने हो भने पत्रपत्रिकाले कुन आधारमा अरूले अनैतिक ढङ्गबाट कमाएको पैसाबारे समाचार लेख्ने ? यस्ता प्रश्नबारे हाम्रा सम्पादक र प्रकाशकहरू गम्भीर भएको देखिँदैन । गलत समाचारको मात्र होइन, गलत विज्ञापनको प्रकाशन पनि आपत्तिजनक पत्रकारिता नै हो भन्ने यो

पङ्क्तिकारको निक्र्योल हो। प्रकाशनगृहहरूले पत्रकारितासँग सम्बन्धित कानून लगायत सम्पूर्ण पक्षबारे बेलाबखत आन्तरिक तालीमको व्यवस्था गरे यस्ता समस्याहरूमा सम्भवत: धेरै कमी आउनेछ।

*नागरिक दैनिक, २०६६ फागुन २६*

# बाह्रफुटे बुद्धि

हालसालै एक दिन काठमान्डुको प्रदूषित र ट्र्याफिक जामले प्रताडित एउटा सडकबाट यात्रा गर्दैगर्दा मैले आफ्नो १३ वर्षको छोरालाई बडो भावपूर्ण हुँदै भनें, “हेर छोरा, यो शहर २० वर्षअगाडि कस्तो थियो, अहिले कस्तो भयो ! जतातत‍ै हरिया फाँटहरू थिए; यस्तो धूलो, मैलो, ट्र्याफिक थिएन। सम्झिँदा पनि दुःख लाग्छ।”

ऊ चुप लागेर सुनिरहेको देखेर मलाई लाग्यो, मेरो कुरा उसलाई साह्रै घत परेछ। उसको मौनताले गुमेको अतीतबारे मलाई अझ बढी भावुक हुन प्रेरित गऱ्यो र म पुनः बहन थालें, “त्यति बेला, काठमान्डुको बौद्धमा रहेको स्तूपको माथि शीतल बतासमा पूर्णचन्द्रको आनन्द लिँदै हामी साथीहरू गफ गरेर राति ११ बजेसम्म बस्थ्यौं अनि अन्धकार र सुनसान गल्ली

भएर घर फर्किन्थ्यौँ, तैपनि हामीलाई डर लाग्दैनथ्यो।"

छोरालाई अझै मौन देखेर मैले सोधेँ, "तिमी किन नबोलेको ?"

त्यसपछि उसले प्याच्च भन्यो, "इट मिन्स, योर जेनरेसन मेस्ड अप एभ्रिथिङ; इफ यु क्यान्ट इम्प्रुभ इट, आई विल ब्लेम यु फर माई जेनरेसन नट स्टेइङ इन नेपाल (त्यसको अर्थ तपाईंको पुस्ताले सबै ध्वस्त पारेछ; यदि त्यो स्थितिमा तपाईंहरूले नै सुधार लेराउन सक्नुभएन भने, मेरो पुस्ता नेपालमा नबस्नुको दोष म तपाईंहरूलाई दिनेछु)।"

नेपाली सिक्दै गरेको हुनाले उसले अझै पनि कतिपय कुरा अङ्ग्रेजीमै भन्न सहज महशूस गर्छ। त्यसमा मलाई कुनै आपत्ति थिएन। तर, उसको जवाफबाट म झस्किएँ। एक छिन अक्क न बक्क भएँ अनि सम्हालिँदै उसको टिप्पणीप्रति सहमति जनाएँ।

कति समय-अवधिलाई एक पुस्ता भन्ने कुरा परिस्थिति

अनुसार फरक हुन सक्छ। यो आलेखको प्रयोजनका लागि माथि उल्लेख गरिएको २० वर्षअगाडिको विन्दुलाई पुस्ता छुट्ट्याउने समयरेखा मान्ने हो भने, त्यसयता देशको राजनीतिक र प्रशासनिक नेतृत्व सम्हाल्नेहरूदेखि अहिलेसम्मका हामी सबैले अति सुन्दर काठमान्डु उपत्यकामाथि वास्तवमा बलात्कार नै गरेका हौँ। त्यसमा कुनै शङ्कै छैन। कम से कम त्योभन्दा अगाडिको पुस्ताले उनीहरूलाई तिनका पुर्खाले जे छोडिदिएका थिए, त्यसलाई चित्तै दुख्ने गरी बिगारेका थिएनन्। तर हामीले त ध्वस्तै पार्‍यौँ।

कुनै पनि शहरको सुन्दरताका लागि सबभन्दा महत्त्वपूर्ण पक्ष सक्दो बढी हरियालीयुक्त खाली क्षेत्रहरू हुन्, जुन हामीले समाप्त पार्‍यौँ। अर्को महत्त्वपूर्ण पक्ष सक्दो चौडा बाटाघाटा हुन्, जसको हामीले परिकल्पना गर्नै सकेनौँ। हामीले त्यति दुइटा पक्ष मात्र विचार गर्न सकेको भए पनि, भविष्यमा सरकार सम्पन्न हुँदा उसले सजिलैसँग खाली ठाउँ र चौडा बाटाहरूलाई

सुन्दरता प्रदान गर्न सक्थ्यो। तर अब त चाहेर पनि सरकारले हतपती केही गर्न सक्ने स्थिति छैन। भन्नेले भन्लान्, अव्यवस्थित शहरीकरण संसारभरिकै समस्या हो भनेर। तर त्यस्तो समस्या हामी जस्तै दूरदृष्टिविहीनहरूको मात्र हो। टाढाको किन कुरा गर्नु, हाम्रै छिमेकी पाकिस्तानको कुरा गरूँ। उसले २०२० सालतिर आफ्नो राजधानी कराँचीबाट इस्लामाबाद सा-यो। कुनै ग्रीक आर्किटेक्टले डिजाइन गरेको इस्लामाबाद अहिले अत्यन्त सुन्दर र व्यवस्थित शहरका रूपमा विकास भैरहेको छ। त्यो ४५ वर्षभन्दा बढी समयअगाडिको कुरा थियो। हाम्रा शासक र प्रशासकहरूको सोच्ने शक्ति भैदिएको भए काठमान्डु त यस्तो शहर थियो, जसलाई १५-२० वर्षअघिसम्म पनि मजाले व्यवस्थित गर्न सकिन्थ्यो। त्यति बेला उपत्यकालाई व्यवस्थित गर्दा कतै कुनै विरोध हुने स्थिति नै थिएन। तर अफसोच, राणाहरूले जुन बाटो बनाइदिए आज पनि मूलत: त्यही बाटोले काठमान्डुको

ट्र्याफिक धानिरहेको छ । चिनियाँहरूले त्यति एउटा चक्रपथ बनाइदिएर ठूलो गुन लगाएका छन् । चक्रपथ देखेर पनि बाटो भनेको ठूलो हुनुपर्दो रहेछ भन्ने हामीले सिक्न सक्नुपर्थ्यो; त्यो पनि सिकेनौँ । राणाहरूले बनाइदिएजति फराकिलो बाटो पनि हामीले बनाउन जानेनौँ । परिणामस्वरूप आज हाम्रो पुस्ताले बनाएको बाटोमा दुइटाको त कुरै छोडिदिऊँ, एउटा मोटर सहजतापूर्वक चलाउन गाह्रो हुन्छ । न ढलको राम्रो व्यवस्था छ, न बिजुलीका तारहरूलाई भूमिगत गर्न सकिने स्थिति छ, न आगो लाग्दा दमकलहरू नै घरहरूसम्म पुग्न सक्ने परिस्थिति छ । ठूलो भूकम्प गयो भने के होला, त्यो त सोच्दा पनि कहाली लाग्छ ।

हरियालीयुक्त खाली ठाउँ त अब काठमान्डु उपत्यकाको छेउछाउमा मात्र बाँकी छ । त्यसलाई पनि व्यवस्थित तुल्याउनु त कहाँ हो कहाँ, बरु सरकार बाहिरी चक्रपथको निर्माणमा बढी उत्सुक देखिन्छ । बाँकी

रहेको खाली जग्गालाई राम्ररी व्यवस्थित नगरी अनि पर्याप्त सङ्ख्यामा र पर्याप्त चौडाइ भएका 'लिङ्क रोड' हरूको व्यवस्था नगरीकन बाहिरी चक्रपथ निर्माण भयो भने, त्यसपछि काठमान्डु उपत्यका पूर्णतः कुरूप र झन् अव्यवस्थित शहरमा परिणत हुनेछ। त्यसैले बाहिरी चक्रपथको निर्माणभन्दा पहिले उपयुक्त सङ्ख्यामा र उपयुक्त चौडाइका 'लिङ्क रोड' हरूको व्यवस्था गर्न बढी आवश्यक छ, जुन चक्रपथ निर्माण नभए पनि शहरी व्यवस्थापनाका लागि अत्यावश्यक देखिन्छ। 'हाउजिङ डिभेलपर' हरूले पच्चीसौँ रोपनी जग्गा खरीद गरिरहेका छन्।सरकारले त्यसै गरी कम से कम विभिन्न प्रयोजनका नाममा अहिले खाली रहेका जग्गाहरू ठाउँठाउँमा अधिग्रहण मात्र गरेर राखिदिए पनि भविष्यमा ती राम्रा पार्कदेखि खेलकुद मैदानसम्ममा परिणत हुन सक्थे। त्यति सोच पनि कुनै सरकारलाई आएन। काठमान्डु उपत्यका सत्यानाशै हुने स्थितिमा छ। त्यति हुँदा पनि उपत्यकाका

नागरिक समाजका अगुवाहरू उनीहरूको दायित्व भनेको राजनीतिक र मानव अधिकार मुद्दाहरूमा बोल्नु र लेख्नु मात्र हो भन्ठान्छन्।

यस्तो परिस्थितिमा राजधानी सार्नुपर्ने मागहरू उठ्नु स्वाभाविक हो। तर, नयाँ राजधानीको विकल्पका रूपमा नाम लिइएका दाङ र चितवन जस्ता जिल्लाका बासिन्दाले अहिलेदेखि नै विचार नगर्ने हो भने राजधानी सर्ने अलि बलियो सम्भावना देख्नेबित्तिकै काठमान्डुका कपूतहरू सलहझैँ घर-जग्गा खरीद गर्न सम्भावित राजधानीमा पुग्नेछन् र तिनले उक्त शहरलाई पनि व्यवस्थित तुल्याउनुअगावै काठमान्डु जस्तै कुरूप तुल्याइदिनेछन्। त्यो परिस्थिति रोक्नका लागि शासक र प्रशासकहरूको भर परे भने स्थानीय बासिन्दाहरूले निराश मात्र हुनुपर्नेछ। तर आआफ्नो शहर व्यवस्थित गर्न उनीहरू आफैँ अघि सरे भने शहरको व्यवस्थित विकास सहज हुनेछ। काठमान्डुवासीहरू आफैँ अघि नसर्दा उपत्यकाको यो हाल भयो। त्यसै गरी अन्य

जिल्लावासीहरू पनि आफैँ अघि नसर्ने हो भने तिनको पनि काठमान्डुकै हाल हुनेछ। यस अर्थमा केही समयअघि चितवनमा घर-जग्गा कारोबारले अव्यवस्थित रूप लिन लागेकामा स्थानीयवासीले चिन्ता जनाउँदै उनीहरूकै पहलमा चितवन उद्योग वाणिज्य सङ्घले २० वर्षपछिको व्यवस्थित चितवनको अवधारणालाई बहसमा ल्याएको विषयलाई स्मरण गर्नु सान्दर्भिक हुनेछ। यद्यपि अहिलेको समयमा शहरको गुरुयोजनाबारे सोच्दा २० वर्षपछिको परिकल्पना मात्र गर्नुलाई लघुदृष्टि राख्ने नेपाली चरित्रकै अर्को एउटा उदाहरण भन्न सकिन्छ। अहिलेका शहरी परिवर्तनहरूको रत्ती पनि आकलन गर्न नसकिने समयमा एक सय ५० वर्षअघि निर्माण गरिएको लन्डन महानगरको ढल र भूमिगत रेलले अहिलेको लन्डनको जनघनत्व र परिवर्तनलाई थेगिरहेको छ। दूरदृष्टि भनेको त्यो हो। हामी चाहिँ यति तीव्र रूपमा परिवर्तन भैरहेको समयमा गुरुयोजनाको बहस चलाउँदा २० वर्षपछिको

परिकल्पना गरिरहेका छौँ। त्यति भन्दाभन्दै पनि चितवनले उठाएको सो कदमबाट राजधानीको विकल्पका रूपमा नाम लिइएका र नलिइएका अन्य जिल्लाले पनि प्रेरणा लिनु उपयुक्त हुन्छ।

हामी काठमान्डुवासीहरू काम नलाग्ने कपूत हौँ। हाम्रो बाह्रफुटे बुद्धि छ; त्यसैले हामीलाई बाह्रफुटे बाटो भए पुग्छ। विश्वास लाग्दैन भने हामीले उपत्यकामा नयाँ विकास गरेका अधिकांश बस्ती हेरे हुन्छ, जुन हाम्रो बाह्रफुटे बुद्धिका प्रतिविम्ब हुन्। हाम्रो बाह्रफुटे बुद्धि बस्ती विकासमा मात्र होइन, अन्य धेरै क्षेत्रमा देख्न सकिन्छ। हामीले तुलनात्मक रूपमा बढी पढेका थियौँ, हामीसँग बढी पैसा थियो र हामीले बढी विश्व देखेका थियौँ; तर हामी यति लघुदृष्टिधारी भयौँ, आज हाम्रो कारणले गर्दा एउटा होइन, दुइटा होइन, सात-सात क्षेत्र विश्वसम्पदा सूचीमा रहेको यो सांस्कृतिक, ऐतिहासिक र सुन्दर उपत्यकालाई हामीले कङ्क्रिटको फोहोर र अव्यवस्थित जङ्गलमा परिणत गरिदिएका

छौँ। यस्तो स्थितिले गर्दा हाम्रा छोराछोरी नेपालमा बस्नै चाहँदैनन् या बसे भने पनि तिनले दुःख पाउँछन् भनेरसम्म हामीले सोचेनौँ। हुन त, हामीमध्ये अधिकांश आफ्ना छोराछोरीलाई नेपालमा राख्नै चाहँदैनौँ अनि हामीलाई भविष्यको चिन्ता किन होस्! आफू बाँचुन्जेल चलिहाल्छ, मरेपछि छोराछोरी यहाँ बस्ने होइनन्, के मतलब भन्ने सोच धेरैमा अव्यक्त रूपमा रहेको छ। धेरै राजनीतिज्ञ पनि छोराछोरीका हकमा त्यही सोचबाट ग्रस्त छन्। आफ्ना हकमा तिनीहरूले नभने पनि वास्तविकता के हो भने राजनीति गर्न पाएकै छ, टेलिभिजन र पत्रपत्रिकामा छाएकै छ, दुर्गन्धित नै किन नहोस् देशभरि परिचय छँदै छ, जहाँ गयो त्यहाँ पार्टी कार्यकर्ताहरूको भीड लागेकै छ, बाँकी जिन्दगी त्यसै गरी चलिहाल्छ भन्ने आत्मरतिमा तिनीहरू छन्। भनेपछि, व्यक्तिगत स्वार्थभन्दा माथि उठ्नुपर्ने आवश्यकता तिनका लागि छँदै छैन। छोराछोरी आफैँ फर्किन नचाहनु भिन्दै कुरा हो। त्यो उनीहरूको

स्वतन्त्रताको विषय हो। यद्यपि उनीहरू फर्किन नखोज्नुमा सबभन्दा बढी दोषी हामी नै छौँ भन्ने कुरालाई हामीले अस्वीकार नगर्दा राम्रो। किनभने, देशको दुरवस्थाका लागि मूल रूपमा जिम्मेवार हामी नै हौँ। अलि बढी चिन्ता हुनुपर्ने ठूलठूला उद्योगी-व्यापारीहरूलाई हो। तिनका छोराछोरी त विदेश गए पनि सम्पत्ति सम्हाल्न नेपाल फर्किनैपर्ने हुन्छ। तर तिनलाई पनि पैसाको मात्र चिन्ता भएको देखियो, छोराछोरी बस्ने वातावरणको चिन्ता कहिले पनि भएन।

भन्न खोजिएको यति हो– हामीले त काठमान्डु ध्वस्त पारी नै हाल्यौँ; बाँकी जो बिग्रिसकेका छैनन्, त्यहाँका स्थानीयवासीहरूले चाहिँ समयमै सोचिदिएको खण्डमा ती ठाउँहरूमा काठमान्डुको जस्तो अवस्था आउने थिएन। नत्र, मेरो छोरा जस्तै तपाईंहरूका छोराछोरीले पनि भन्नेछन्, "तपाईंको पुस्ताले सबै ध्वस्त पारेछ। यदि त्यो स्थितिमा तपाईंहरूले सुधार

लेराउन सक्नुभएन भने मेरो पुस्ता नेपालमा नबस्नुको दोष म तपाईंहरूलाई दिनेछु।"

*नागरिक दैनिक, २०६६ चैत ४*

# छुच्चो पेशा

२०६५ चैत १८ गते *नागरिक* दैनिकमा *कोइरालालाई यसरी हेर्दा* आलेख प्रकाशन भएपछि व्यापक प्रतिक्रियाहरू जनाइए, जुन मूल रूपमा तीन प्रकारका थिए : पहिलो, कोइरालाबारे जे मूल्याङ्कन गरियो, त्यो शत प्रतिशत ठीक थियो र वास्तविकता त्यही हो; दोस्रो, त्यो पूर्वाग्रही थियो र त्यसमा कोइरालाको व्यक्तित्वको अवमूल्यन गरियो; तेस्रो, कोइरालाको निधन भएको तीन हप्ता पनि नबित्दै त्यति विघ्न आलोचनात्मक लेख लेख्नु साह्रै छुच्चो काम भयो। लोकतन्त्रको आधार नै सहमति र विमति भएकाले सबै प्रतिक्रियालाई अत्यन्त स्वाभाविक मान्नुपर्छ। तर, छुच्चोपनाबारेको तेस्रो प्रतिक्रिया भने पत्रकारिताको अभ्याससँग पनि प्रत्यक्ष रूपमा गाँसिएको अत्यन्त महत्त्वपूर्ण पक्ष भएकाले त्यसबारे चर्चा गर्नु उपयुक्त सम्झिएको छु।

केही समयअघिको कुरा हो। देशका एक उच्च अधिकारीसँग कुराकानी हुँदा प्रसङ्गवश एउटा प्रमुख दैनिक पत्रिकाका सम्पादकको कुरा निस्कियो। ती अधिकारीले स्वस्फूर्त रूपमा भने, “हेर्नोस् न, केही महिनाअगाडि मेरो घरमा परिवारसँग बसेर, भात खुवाएर, कस्तो राम्रो गफ गरेर पठाएको मान्छे, अहिले त मेरै विरुद्धमा लेख्दिएछ !” त्यति बेला त उनीसँग थप कुरा हुन पाएन, किनभने काम सकिएर छुट्टिने बेला उनले सो टिप्पणी गरेका थिए। पछि उनीसँग दोस्रोपल्ट भेट हुँदा कुरैकुरामा उनले उनको दृष्टिमा हाम्रो बढ्दो मित्रताबारे केही टिप्पणी गरे। मलाई उनले पहिलो भेटमा सम्पादक मित्रबारे गरेको टिप्पणी पटक्कै चित्त बुझेको थिएन। त्यसैले प्रत्युत्तरमा ती अधिकारीलाई मैले हाँसीहाँसी भनें, “हेर्नोस्, पेशागत दृष्टिकोणबाट पत्रकार कसैको पनि मित्र हुनै सक्दैन। हाम्रो बीचमा अहिले जति गफगाफ भएको भए पनि मलाई नजिकको मित्र कहिले नसम्झिनुहोला। किनभने,

आउँदा दिनहरूमा मैले तपाईंकै बारे आलोचनात्मक समाचार लेख्नु र विचार व्यक्त गर्नु नपर्ला भन्न सकिँदैन ।"

पत्रकारिताको धर्म इमानदारीपूर्वक पालना गर्न प्रयास गर्ने हो भने, योजत्तिको छुच्चो पेशा सम्भवतः अर्को कुनै छैन । आफूले साह्रै श्रद्धा गरेको र आफूले धेरै निकट सम्झिएको व्यक्तिबारे पनि आलोचना गर्नैपर्ने ! आफ्नो ब्रह्मले गल्ती हो भनेर देख्दादेख्दै, 'ओहो ..., मैले यस्तो श्रद्धा गर्ने, यति नजिकको, घरमा सँगै डिनर खाएको, मलाई नै सहयोग गरेको मान्छेबारे यस्तो टिप्पणी कसरी गर्ने?' भनेर सोच्ने हो भने, त्यो पेशागत इमानदारी हुँदैन । पेशागत जीवनमा अनुगृहीत मानसिकताबाट बाहिर निस्कन नसक्ने व्यक्तिहरूले पत्रकारै नबन्नु बेस ।

धेरै वर्षअगाडिको कुरा हो, व्यापारी बनेका एक पूर्ववरिष्ठ प्रशासकसँग अन्तर्वार्ता लिनुपर्ने भयो । अन्तर्वार्ताअगाडि कार्यालयमा गफ हुँदै जाँदा उनले

आफू मेरा पिताका नजिकका मित्र रहेको जानकारी दिए। त्यसपछि मेरा पिताकै उमेरका उनले मलाई नेपाली शैलीमा छोरा जस्तै व्यवहार गर्न थाले। मैले पनि उनलाई श्रद्धापूर्ण व्यवहार गरेँ। केही बेरपछि हामी अन्तर्वार्ताका लागि स्टुडियोमा पस्यौँ। पत्रकारिताको काम शुरू गरेपछि पत्रकारले सम्पूर्ण व्यक्तिगत सम्बन्धहरूलाई बिर्सनुपर्ने हुन्छ। मैले पनि त्यसै गरेँ र उनलाई सोधिनैपर्ने तर बाङ्गो सुनिने प्रश्नहरूको वर्षा गर्न थालेँ। नियमित रूपमा सञ्चार माध्यमहरूको सामना गरिरहनुपर्ने व्यक्ति भैदिएको भए त उनलाई केही गाह्रो हुँदैनथ्यो होला; तर त्यसो नभएका कारण नर्भस भएर उनका गोरा गालाहरू पूर्णतः गुलाबी भए। त्यसमा पनि आफ्नो निकटका मित्रको छोराबाट उनले त्यस्ता टेढा प्रश्नहरूको अपेक्षा गरेका थिएनन् होला। तर, म अन्तर्वार्ताको दौरान उनका मित्रको छोरो थिइनँ; एउटा पत्रकार मात्र थिएँ।

अर्को एउटा घटना मैले साह्रै श्रद्धा गर्ने एक

व्यापारी तथा देशमा भएका कतिपय राम्रा कामहरूका प्रणेतासँग सम्बन्धित छ। मैले उनको घरमा उनीसँगै बसेर राम्राराम्रा र रमाइला कुरा गर्दै भात खाएको छु। त्यसको केही समयपछि एउटा यस्तो प्रसङ्ग आयो, जहाँ मैले उनको सार्वजनिक जीवनको एउटा पाटोको आलोचना गर्नुपर्‍यो। त्यो आलोचना प्रकाशित मात्र के भएको थियो, उनी बारुदझैँ पड्किए। मैले उनको व्यक्तित्वको एउटा सानो पाटोको मात्र आलोचना गरेको थिएँ; तर उनले त्यसलाई यति व्यक्तिगत रूपमा लिइदिए, मानौँ त्यो उनको सिङ्गो व्यक्तित्वकै आलोचना थियो। त्यसभन्दा पनि बढी उनलाई 'मैले यति स्नेह र श्रद्धा गर्ने, घरमै बोलाएर भात खुवाएको मान्छेले मेरो बारे यस्तो नराम्रो लेख्दियो' भन्ने परेछ। वास्तविकता के हो भने, पत्रकार अन्य क्षणमा अरू जस्तै सामान्य मानिस भए पनि जब ऊ पत्रकारितामूलक लेखनका लागि बस्छ, ऊ सामान्य मानिस रहँदैन। त्यति बेला उसले आफूलाई स्वाभाविक मानवीय

सम्बन्ध र भावनाहरूबाट पर राख्नुपर्ने हुन्छ।

त्यसैको परिणाम हो, *कोइरालालाई यसरी हेर्दा* आलेख। मानवीय संवेदनामा पत्रकारहरू बहकिन थाले भने, ती वस्तुपरक हुन सक्दैनन्। वस्तुपरकता पत्रकारिताको मेरुदण्ड हो। वस्तुपरक हुन चाहँदाचाहँदै मूल्याङ्कनै गलत हुनु एउटा कुरा हो, तर भावनामा बहकिनु अर्कै कुरा हो। त्यसैले देशका कतिपय वरिष्ठतम पत्रकारले व्यक्तिगत रूपमा मात्र होइन, समाचार र अन्य पत्रकारितामूलक लेखनमै कोइरालाको निधनबारे आँखा चिम्लिएर उनको गाथा गाउँदा, त्यसलाई मैले पत्रकारिताको दृष्टिकोणबाट अस्वाभाविक सम्झिएको हुँ। त्यसै गरी दुई वर्षअगाडि संविधान सभाको निर्वाचन सम्पन्न भएको दिन कतिपय वरिष्ठतम पत्रकारले व्यक्तिगत रूपमा मात्र होइन, समाचार र अन्य पत्रकारितामूलक लेखनमै हर्षबढाइँ गरे। पत्रकारिताको कोणबाट त्यो पनि अत्यन्त अस्वाभाविक चरित्र थियो। पत्रकारिता भूमध्यरेखा हो र त्यसमा

उभिएर पत्रकारले पूर्व र पश्चिम, अँध्यारो र उज्यालोलाई समदूरीबाट नियाल्ने प्रयास गर्छ। पत्रकारले सधैँ प्रश्न गर्छ। किनभने, उसको पेशा सधैँ इमानदारीपूर्ण आशङ्कामा आधारित हुन्छ। 'सबैले त्यसै भने, त्यसैले सत्य त्यही हुनुपर्छ' भन्नेमा पत्रकारले कहिले पनि विश्वास गर्दैन। उसले तथ्य खोतल्नुपर्छ। केही समयअघि दाङको एउटा बस्तीमा भारतीय पक्षबाट सीमा मिचियो र नेपाली महिलाहरूमाथि दुर्व्यवहार गरी कैयौँ घर-परिवारलाई विस्थापन गरियो भन्ने व्यापक खबरहरू आए। भारतीय पक्षबाट धेरै ठाउँमा सीमा मिचिएको हुनाले दाङको समाचार पनि साँचो हुन सक्थ्यो। तर, माओवादीहरूले भारतविरोधी आन्दोलन चलाइरहेको बेला त्यो उनीहरूले भारतप्रति नकारात्मक धारणा फैलाउन सीमावर्ती क्षेत्रमा सुनियोजित रूपमा चलाएको अभियान पनि हुन सक्थ्यो। तर, भारतविरोधी नेपाली राष्ट्रवादको भावनामा अधिकांश पत्रकार पनि बहकिए र सारा भनेजसो समाचार लेखन, टिप्पणी

तथा अन्तर्वार्ताहरू भारतीयहरूले सीमा मिचेकै हुन् र नेपालीहरूलाई विस्थापन गराएकै हुन् भन्ने ढङ्गबाट प्रवाह गरिए। पछि त्यहाँ वास्तविक आरोपभन्दा माओवादी राजनीति हावी भएको प्रस्ट भयो।

पत्रकारले अत्यन्त संवेदनशील राष्ट्रवादको भावनादेखि नितान्त व्यक्तिगत विश्वासहरू सबैमाथि निरन्तर प्रश्न गर्नुपर्छ। कहिलेकाहीँ जानीबुझीकन व्यक्ति या विषयको एउटा पाटोबारे मात्र चर्चा गरिन्छ, जसमा पत्रकारिताको निष्पक्षता र वस्तुनिष्ठताका मापदण्डहरूको पालना गरिएको हुँदैन। उदाहरणका लागि, मैले आजभोलि कैयौँ व्यापारी र अन्य कतिपय व्यक्तिका मानवीय र कल्याणकारी पाटोबारे लेख्ने गरेको छु। ती आलेखमा तिनको व्यक्तित्वका अन्य पक्षबारे चर्चा गरिएको हुँदैन। तर, भोलि मैले तिनको समष्टिगत व्यक्तित्वको मूल्याङ्कन गर्नुपर्ने स्थिति आयो भने, तिनको जीवनको सार्वजनिक महत्त्व राख्ने सबै पक्षको मूल्याङ्कन गर्नुपर्ने हुन्छ। त्यति बेला म भावनामा

बहकिएँ भने, त्यो मेरो पेशाप्रति अन्याय हुन जान्छ। विभिन्न व्यक्तिका मानवीय र कल्याणकारी पाटोबारे मैले या अन्य कैयौँ पत्रकारले लेख्ने लेखहरू समाजमा हुने राम्रा कामलाई पत्रकारिताले प्रोत्साहन गर्नुपर्छ भन्ने 'सकारात्मक पत्रकारिता' को मान्यताबाट प्रेरित भएका हुन्छन् भने, *कोइरालालाई यसरी हेर्दा* जस्ता आलेखहरू चाहिँ समाजमा दूरगामी महत्त्व राख्ने घटनाहरूलाई वस्तुपरक ढङ्गबाट हेर्नुपर्छ भन्ने 'वस्तुपरक पत्रकारिता' को अवधारणामा आधारित हुन्छन्।

पत्रकारले 'व्यक्ति' र 'पेशा' लाई छुट्ट्याउनैपर्ने हुन्छ। व्यक्तिका रूपमा पत्रकारका पनि राजनीतिक, सामाजिक, धार्मिक या अन्य प्रकृतिका आस्था र विश्वासहरू हुने गर्छन्, जसलाई निषेध गर्न सकिँदैन। तर, ती आस्था र विश्वासको झोलालाई पत्रकारका रूपमा उसले कार्यकक्षको ढोकाबाहिरै छोड्नुपर्छ। तर, आफ्नो काम सकिएपछि त्यो झोला फेरि बोक्न ऊ स्वतन्त्र हुन्छ। पत्रकारले 'व्यक्ति' बनेर आफ्ना

आस्था र विश्वासहरूलाई प्रवर्धन गर्नका लागि आम टिप्पणीकारले जस्तै विविध लेख लेख्न पनि सक्छ। संसारभरि कैयौँ प्रसिद्ध पत्रकारले त्यसो गर्ने गर्छन्। तर ती आस्था र विश्वासहरू के हुन्, ती कति विवादास्पद प्रकृतिका छन्, तिनलाई प्रवर्धन गर्न कस्ता लेखहरू लेख्ने र ती लेखबाट पत्रकारका रूपमा आफ्नो विश्वसनीयतामा आँच पुगेको छ कि छैन भनेर मूल्याङ्कन गर्ने जिम्मा चाहिँ लेखक स्वयंको हो। व्यक्ति बनेर आफूले चाहेको काम गर्दाको खतरा मोल्न र परिणाम भोग्न ऊ तयार हुनुपर्छ। यसरी, एउटा सामान्य 'व्यक्ति' र एउटा 'पत्रकार' का रूपमा दुइटा व्यक्तित्वलाई निरन्तर सन्तुलनमा राख्नुपर्ने जटिल अवस्थाबाट पत्रकारले सधैँ गुज्रिरहनुपरेको हुन्छ। त्यसैको परिणामस्वरूप, वरिपरिका सबै रुँदा पत्रकार रुन सक्दैन र वरिपरिका सबै हाँस्दा पत्रकार हाँस्न सक्दैन। किनभने, स्वाभाविक मानवीय अपेक्षा अनुरूप ऊ चल्न सक्दैन। त्यसैले पत्रकार बारम्बार छुच्चो

देखिन्छ। तैपनि यो छुच्चो पेशा अँगालेकामा यो पङ्क्तिकारलाई कुनै खेद छैन। बरु भविष्यमा पत्रकार बन्न चाहने विद्यार्थीहरूलाई एउटै सल्लाह छ– इमानदारीपूर्ण ढङ्गबाट छुच्चो बन्ने आँट छैन भने पत्रकारितालाई पेशाका रूपमा नअँगालेकै बेस।

*नागरिक दैनिक, २०६६ वैशाख ८*

# सबैको धरातल भासिएपछि

आखिर माओवादीहरूले जबरजस्ती गरेर, धम्क्याएर, लुटेर लाखौँ मानिसलाई देशका विभिन्न ठाउँमा उतारिछोडे। त्यसबारे खूब गर्व गरे र "हामीले सर्वसाधारणलाई दु:ख दिएकै छैनौँ" भनेर हाकाहाकी ढाँटिदिए। तिनले नाङ्गा खुकुरी लिएर सार्वजनिक ठाउँमा तालीम गरे र "खुकुरी त नेपालीहरूको राष्ट्रिय प्रतीक हो" भन्ने तर्क गरे। जसो गरे पनि हुने र जे भन्दिए पनि हुने आडम्बरयुक्त र झूट चरित्रले नेपाली समाजमा यति नराम्रोसँग जरा गाडिसक्यो र हामी नैतिक रूपमा यति पतित भैसक्यौँ, जसले जे गरे पनि केही दिनमै त्यो पच्ने भैसकेको छ। अरूमा आदर्श खोज्ने तर आफू चाहिँ स्वार्थको सिरकमा गुटमुटिएर आदर्शका वाणी बक्ने भएपछि कसको के लाग्छ ! देशमा माथिदेखि तलसम्म सबका सबको

नैतिक धरातल भासिएपछि, सबैले विचार नगर्ने हो भने माओवादी या निश्चित व्यक्ति, दल र वर्गमा मात्र शुद्धीकरण खोजेर त्यो सम्भवै हुँदैन।

दुई ठाउँबाट चुनाव हारेर, आफ्नो दलको नराम्रो हारका लागि नैतिक जिम्मेवारी लिएर, दलको महासचिव पदबाट राजीनामा दिएका माधवकुमार नेपाल अन्य नेताले कर-बल गरेपछि संविधान सभाको सदस्य बनेर संवैधानिक समितिका सभापति त भए-भए, त्यसपछि उनलाई देशकै प्रधानमन्त्री बन्न कत्ति पनि अप्ठेरो लागेन। यसो भनेर प्रधानमन्त्रीका रूपमा उनको वैधानिकता र उनको राजनीतिक यात्राका अन्य पक्षको अवमूल्यन गर्न खोजिएको होइन। प्रश्न उनले प्रधानमन्त्रीको प्रस्ताव स्वीकार गर्नु हुन्थ्यो या हुँदैनथ्यो भन्ने हो। देश र जनताका लागि भनेर जिन्दगीभर राजनीति गरेका नेपालले भन्न सक्नुपर्थ्यो, "तपाईंहरूले मप्रति सदाशय देखाउनुभयो, म त्यसप्रति आभारी छु। तर म दुई ठाउँबाट चुनाव हारेको मान्छे, दलको

जिम्मेवारीबाट राजीनामा दिएको मान्छे, अहिले मैले प्रधानमन्त्री बन्दा नव गणतन्त्र, नव लोकतन्त्र कसैको लागि पनि राम्रो सन्देश जाँदैन, राम्रो नजिर बस्दैन। झलनाथ खनाल दलका अध्यक्ष पनि हुन्; उनले चुनाव पनि जितेका छन्। त्यसैले प्रधानमन्त्री उनलाई नै बनाउँदा राम्रो हुन्छ।" त्यसो भनेका भए नेपालको इज्जत अर्थहीन ढङ्गबाट प्रधानमन्त्रीको पदमा घस्रिरहेभन्दा धेरै उच्च हुने थियो। तर प्रधानमन्त्रीको लालसाले गाँजेको बेला विवेक बोल्ने त कुरै भएन। यस्तो तर्क असम्भव र हास्यास्पद आदर्शझैँ सुनिएला; तर यो देशमा अतुलनीय आदर्श पेश गर्न सक्ने राजनीतिक र सामाजिक नेताहरू नभै भएको छैन।

सवाल राजनीतिको मात्र होइन। यहाँ मानव अधिकारका ठूलठूला भाषण गर्ने, त्यसैको नाममा संसार घुम्ने, त्यसैका लागि लडेर जीवन गुजारा गर्ने मानव अधिकारकर्मीहरूको कार्यालयमा काम गर्ने कर्मचारीहरूको मानव अधिकार स्थिति दयनीय हुन्छ।

यतिसम्म कि, कसैकसैको करारपत्रमा कारिन्दाले कम्तीमा दुई वर्षसम्म जागिर छोड्नै नपाउने, तर कार्यालयले चाह्यो भने एक महिनाको सूचना दिएर हटाउन सक्ने प्रावधान राखिएका हुन्छन्। कार्यालय अवधिबाहिर कर्मचारीले गरेको कामको मूल्याङ्कन, दाताबाट पैसा लिएको तुलनामा कर्मचारीले पाउने तलब र सरसुविधा आदि-इत्यादिको त कुरै नगरूँ। त्यसबारे कसले प्रश्न उठाउने ? लेखा शाखामा कि आफ्नै नातेदार हुन्छन् कि त आफ्नो विश्वासपात्र राखिएका हुन्छन्। अनि करारपत्र यसरी तयार पारिएको हुन्छ, बढी प्रश्न गर्न थाल्यो कि जागिरै जान्छ। जब त्यस्ता मानव अधिकारकर्मीले मानव अधिकार र पारदर्शिताको कुरा गर्छन्, त्यसलाई व्यापारिक ढ्वाङको गर्जन भने हुन्छ।

हामी कैयौँ पत्रकार त आफूलाई झन् भगवानै सम्झिन्छौँ। मानौँ अरू सबैले गल्ती गर्छन्, पत्रकारबाट चाहिँ गल्ती हुन सक्दैन। त्यसैले आफ्ना कमजोरीबारे लेखिएको सामग्रीलाई हामी सकभर निषेध गरिदिन्छौँ

या पत्रकारका कमी-कमजोरीबारेको बहसलाई प्रोत्साहनै गर्दैनौं। कूटनीतिज्ञहरूको भोजमा थपीथपी रक्सी खाएर सन्दर्भहीन र फाल्तू गफ गरेर पत्रकारको नाम बदनाम गर्नेदेखि राजनीतिक आस्थाको वकालत गर्ने र आर्थिक प्रलोभनमा पर्ने पत्रकार कैयौँ छन्। त्यस्तै, आआफ्ना सञ्चार माध्यमहरूमार्फत सहमतिको राजनीति, स्वस्थ प्रतिस्पर्धा, आदर्श समाज आदि-इत्यादिको खेती गर्ने कतिपय सञ्चार संस्था आफैँ तिक्ततापूर्ण र अस्वस्थ प्रतिस्पर्धामा तल्लीन छन्। त्यति मात्र होइन, ती संस्थाहरू मानव अधिकारवादी संस्थाहरू जस्तै आफूलाई मानव अधिकारका यति ठूला प्रवर्तक सम्झिन्छन्, मानौँ ती मानव अधिकारका पर्यायवाची हुन्। तर तिनको मानव अधिकारको बेलुन पनि त्यहीँ फुट्छ, जहाँ तिनले आफ्ना कर्मचारीलाई दिने करारपत्र कसैले हेर्छ। मेरा कैयौँ पत्रकार मित्र हप्ताको छ दिन र अझ कतिपय स्थितिमा सातै दिन, दिनको १०-१२ घण्टा काम गर्छन् र पनि उनीहरूको तलब दयनीय

हुन्छ । त्यस्तो आन्तरिक स्थिति भएका सञ्चार संस्थाहरू जब मानव अधिकारको कुरा गर्छन्, यो पङ्क्तिकारलाई पच्दैपच्दैन । *नागरिक* दैनिकमा स्तम्भ शुरू गर्दा मैले सञ्चार क्षेत्रको विकृतिबारे पनि लेख्न पाउनुपर्ने शर्त राखेको थिएँ र सम्पादक नारायण वाग्लेले मेरो प्रस्तावमा सहमति जनाउँदै भनेका थिए, "हो, हाम्रो कुरा पनि हुनुपर्‍यो नि । के हामीले चाहिँ अधिनायकवादी व्यवहार गर्न मिल्छ र ?" पेशागत इमानदारीको कुरा गर्दा नमिल्नुपर्ने हो, तर गरिदिन्छन्, अनि के गर्ने ? नैतिक धरातल सबैले उचा राख्नु राम्रो । तर, सञ्चारकर्मी र सञ्चार संस्थाहरूको पेशा नै यस्तो पर्‍यो, जसले दिनदिनै नैतिकताको बीउ छर्नुपर्छ । त्यसैले तिनले अरूले भन्दा विशेष ध्यान दिनैपर्ने हुन्छ । तर, दिँदैनन् ।

सानो उदाहरण दिऊँ । केही समयअगाडि मैले *आपत्तिजनक पत्रकारिता* शीर्षकमा पत्रपत्रिकाका केही गलत प्रवृत्तिबारे लेखेको थिएँ । सो आलेखमा *नागरिक*

दैनिकलाई उल्लेख गर्दै र अन्य प्रमुख दैनिकलाई पनि सङ्केत गर्दै तिनले अलिकति पैसा आउँछ भनेर जानीबुझीकन सरासर झूटो र अश्लील विज्ञापन छापिरहेका उदाहरणहरू प्रस्तुत गरेको थिएँ। अरूका गल्ती र नकारात्मक प्रवृत्तिबारे सधैँ टिप्पणी गर्ने र सुधारको अपेक्षा गर्ने सञ्चार संस्थाहरूले आफ्नो काममा स्पष्ट गल्ती भएको देखिएपछि त्यसलाई सच्याउनु महानता हुने थियो। तर उनीहरूले सोचे होलान्, 'यो नाथेले जान्ने हुँदैमा हुन्छ र! चुप लागेर बसौँ; आज लेखेको कुरा भोलि सबैले बिर्सिहाल्छन्।' हुन पनि हो, यो समाजमा सबै प्रकारका नकारात्मकता पच्ने भैसकेको छ। ती विज्ञापनहरूबारे आज दोहोऱ्याएर कुरा उठाएको छु। तर, पत्रिकाहरूले फेरि पनि मौन बसेरै यी टिप्पणीलाई पचाइदिनेछन् भन्ने पक्का छ।

मेरा एक मित्र प्रतिष्ठित अन्तर्राष्ट्रिय संस्थामा जागिरे छन् र विदेशमा बस्छन्। उनका पिता विभिन्न उच्च ओहोदामा काम गर्दै राजदूत, मन्त्री भएका थिए। ती

मित्रले काठमान्डुस्थित आफ्नो एउटा घर भाडामा दिने गरेका छन्। पहिलेपहिले भाडामा बस्नेले पूरै भाडा सीधै मेरा मित्रलाई दिने गरेका रहेछन्। हालसालैदेखि सो घर एउटा कूटनीतिक नियोगले भाडामा लिएछ, जसले कर काटेर मात्र मेरा मित्रलाई भाडा दिन थालेछ। अनि उनले मलाई एक दिन आक्रोश पोख्दै भने, "घर पनि के भाडामा दिनु अब त! ट्याक्स (कर) ले त्यत्रो पैसा लगिदिँदो रैछ।" अति राम्रो शैक्षिक, आर्थिक र पेशागत पृष्ठभूमि भएका ती मित्रको कुरा सुनेर एक छिन त म छक्क परेँ र उनीसँग असहमति जनाएँ। तर, उनले मेरो असहमतिलाई त्यसै उडाइदिए।

यहाँ सबैतिर त्यस्तै चरित्र हावी छ। सरसर्ती भन्नुपर्दा, कैयौँ व्यापारी बिहानभरि पूजा-अर्चना गरेर दिउँसो कर छल्न दोहोरो खाता राख्छन् अनि सेवाग्राही र सरकारलाई ठग्छन्। स्वाभिमानबारे सधैँ डम्फु पिट्ने कैयौँ साहित्यकार, सङ्गीतकार, कलाकार

राजनीतिक आस्थाका आधारमा या चाकडी गरेर प्राज्ञ बन्न तयार हुन्छन् । प्रधानमन्त्री र मन्त्रीका सल्लाहकार सम्बन्धित क्षेत्रका विज्ञभन्दा पार्टीका कार्यकर्ता हुन्छन् । धेरै उच्च ओहोदाका अधिकारी 'घूस त अलिअलि खानुपरिहाल्यो नि' भन्ठान्छन् । विद्यार्थीहरू पढ्न छोडेर टायर बाल्न हिँड्छन् । शिक्षकहरू विद्यालय बन्द गर्छन् । डाक्टरहरू सेवाभन्दा बढी व्यापार गर्छन् र अझ अस्पताल बन्द गरेर बिरामी मार्छन् । कानूनकर्मीहरू घूस खान्छन् र कर पनि छल्छन् । माथिदेखि तलसम्म सबका सबको हालत उस्तै भएपछि कसलाई, कहाँ, के भनेर गुनासो गर्ने र स्थितिलाई कसले सुधारिदिने ! यसो भन्दा 'तैं मात्र रैछस् कहीं नभा'को आदर्शवादी !' भन्ने अर्थ लाग्ला । व्यक्तिगत कमी-कमजोरी सबैमा हुन्छ; त्यसबाट कोही पनि मुक्त हुन सक्दैन । तर, सार्वजनिक जीवनमा जानीबुझीकन इमानदारी गुमाउनु क्षम्य हुन सक्दैन । त्यो एक व्यक्ति र परिवारका लागि मात्र होइन, सिङ्गो समाजका लागि घातक

हुन्छ। हामीकहाँ सिङ्गो समाजको चरित्रमै यति धेरै क्षयीकरण भइसक्यो, व्यक्तिव्यक्तिले त्यसमा सुधार लेराउने प्रयत्न नगर्ने हो भने विश्वको सर्वोत्कृष्ट संविधान लेखिए पनि केही हुनेवाला छैन। समाजमा हामीले ल्याएको नैतिक क्षयीकरणका कारण हामीले त दु:ख पाई नै सक्यौँ, आफ्नै छोराछोरी र नातिनातिनाको भविष्यलाई समेत हामी अन्धकार बनाइदिँदै छौँ, जुन अक्षम्य पाप हो।

*नागरिक दैनिक, २०६६ वैशाख २२*

# 'जी' भन्दा झरेको आँसु

हालसालैको कुरा हो, म र मेरा एक सहृदयी मित्र उनको मोटरमा यात्रा गर्दै थियौँ। उनले नयाँ ड्राइभर भर्ना गरेका रहेछन्। नयाँ हुनाले मेरा मित्र ड्राइभरलाई अनेक कुरा सम्झाउँदै थिए।

"हेर्नोस् कृष्णबहादुरजी, तपाईं मलाई हजुर, गरिबक्स्योस् नभन्नोस्। तपाईंको परिवारभित्र त्यसो भन्न मन लाग्छ भने ठीकै छ; तर हाम्रो बीचमा त्यस्तो भाषा प्रयोग गर्नु ठीक हुँदैन।"

"काँ हजुर ... ! हजुरलाई त मैले त्यसो नभनी हुँदैहुँदैन !"

"यस्तो कुरा मसँग गर्दै नगर्नोस्। हामी सबै आआफ्नो श्रम गरेर बाँचेका छौँ। तपाईं पनि मान्छे, म पनि मान्छे। हामीले एकले अर्कोलाई बराबार

सम्मान गर्नुपर्छ। तपाईंले मलाई बढी सम्मान गर्नुपर्ने, मैले तपाईंलाई कम सम्मान गरे पनि हुने कारणै छैन।”

मेरा मित्रले त्यसो भनेपछि गाडीभित्र एक छिन मौनता छायो र बिस्तारै सुँक्कसुँक्क गरेको आवाज आयो। मैले छेउबाट कृष्णबहादुरतिर हेरेँ। उनी त आँसु खसाल्दै रोइरहेका रहेछन्।

“लौ ... कृष्णबहादुरजी, किन रोएको तपाईं! झन् मेरो साथीले त्यस्तो राम्रो कुरा गरेको त ... !” मैले भनेँ।

मेरा मित्र पनि के भएछ भनेर जिल्ल परे।

अनि कृष्णबहादुरले आफ्नो कथा शुरू गरे, “मैले पहिलेका सा’बको नराम्रो कुरा त गर्नु हुन्न; तर मैले उहाँको सेवा गरेर १६ वर्ष बिताएँ। १६ वर्ष काम गर्दा पनि मैले कहिले पनि शिर ठाडो गरेर सा’बसँग बोल्न सकिनँ। सधैँ मनमा एक किसिमको त्रास

हुन्थ्यो। लामोलामो यात्रामा पनि 'मोटर यता लग्' र 'उता लग्' भन्नेबाहेक उहाँहरूले कहिले पनि मसँग राम्ररी गफ गर्नुभएन। अलिकति तल-माथि भयो भने रिसाउनुहुन्थ्यो र गाली खाइहाल्नुपर्थ्यो। जीवनमा धेरै जनाको सेवा गरियो हजुर, तर मलाई 'कृष्णबहादुरजी' भनेर कसैले बोलाएन। हजुरले 'जी' भन्दा, 'ओहो ... संसारमा आफ्नो ड्राइभरलाई पनि मान्छेले जी भन्दा रैछन्, ड्राइभरलाई पनि तपाईं भन्दा रैछन्, ड्राइभरसँग पनि मोटरमा गफ गर्दा रैछन्' भनेर मलाई त कस्तोकस्तो लागिराखेको छ। मनमा धेरै वर्षदेखि दबेको दुःख खुशी भएर निस्केको हो हजुर यो।"

कृष्णबहादुरको कुरा सुनेर म र मेरा मित्र दुवै भावुक भयौँ। आखिर मेरा मित्रले कृष्णबहादुरलाई कुनै असाधारण गुन लगाएका थिएनन्; सिर्फ सम्मानपूर्वक व्यवहार गरेका थिए। तर, त्यतिले पनि मान्छेको जीवनमा कति ठूलो फरक ल्याइदिँदो रहेछ! त्यसको केही समयपछि हामी एक ठाउँमा खाजा खान

रोकियौँ। मेरा मित्रले कृष्णबहादुरलाई पनि हामीसँग एउटै टेबलमा बस्न भने। केही बेरपछि साहुनीले एउटा प्लेटमा फ्राई गरेका अन्डा र साँधेको भटमास लेराएर राखिदिइन्। मेरा मित्रले तीनटा चम्चा मागे र एउटा चम्चा कृष्णबहादुरलाई दिए। त्यसपछि कृष्णबहादुरले अप्ठेरो मान्दै प्लेटबाट खाना झिकेर खान थाले। उज्यालो मुख पार्दै मुसुक्क हाँसे र भने, “सा’बहरूसँग एउटै प्लेटबाट झिकेर सँगै खाना खाने दिन पनि आउँदो रैछ !”

“हे ... कृष्णबहादुरजी, काँ सा’ब भनिराखेको भन्या ! हामी दुवै कारिन्दा हौँ। तपाईं मेरो कारिन्दा, म अरू कसैको कारिन्दा। हामी सबै आआफ्नो श्रम र क्षमता बेचेर बाँच्ने भएपछि सबै जना समान भएनौँ? तपाईंले पनि मलाई जी भनेर सम्बोधन गरे म धेरै खुशी हुने थिएँ।”

कृष्णबहादुर फेरि दिलैदेखि मुसुक्क हाँसे। मेरा मित्रले कृष्णबहादुरलाई सम्झाउँदै गर्दा कृष्णबहादुरको

जवाफले मलाई केही महिनाअगाडिको अर्को एउटा घटनाको याद आइरहेको थियो। त्यति बेला, माओवादीको शब्द सापट लिएर भन्ने हो भने, म एक पूर्ण 'सामन्ती' नेपालीको कार्यालयमा पुगेको थिएँ। उनी गज्जब पढेलेखेका, गज्जब धनी, गज्जब प्रतिष्ठित परिवारका गज्जब प्रतिष्ठित व्यापारी हुन्। कुनै पद, पैसा या शक्ति भएको मानिसले उनलाई भेट्यो भने या कुनै ठूलाबडाको रात्रिभोजमा उनी भेटिए भने उनलाई सबैले कति शिष्ट, सभ्य, सौम्य, बोल्न र व्यवहार गर्न जान्ने भलादमी भन्ठान्नेछन्। तर उनको कार्यालयमा उनले तलदेखि माथि कोठासम्म पुग्दा ड्राइभर, सुरक्षा गार्ड र पियनप्रति जस्तो व्यवहार देखाए, त्यसबाट माओवादीहरू यो समाजलाई किन सधैँ सामन्ती भन्छन् भन्ने कुरा स्पष्ट हुन्थ्यो।

ती महाशयलाई भेट्न म कार्यालय परिसरभित्र पुग्दा उनी आफ्नो गाडीबाट उत्रिँदै थिए। गाडी रोकिन पाएको छैन, ड्राइभर हस्याङफस्याङ गर्दै बाहिर निस्किएर

'मालिक' को पछाडिको ढोका खोल्न गए, मानौँ ती महाशय कि महाराज नै थिए कि चाहिँ मोटरको ढोका खोल्न नसक्ने गरी शारीरिक रूपमा अशक्त थिए। जब ती महाशय गाडीबाट ब्रिफकेस लिएर बाहिर निस्किए, तिनले न ड्राइभरको मुखमा हेरे न त प्रवेशद्वारको छेउमा तनक्क तन्किएर सलाम ठोक्ने सुरक्षा गार्डको अनुहारमा हेरे। उनले ती सबैको सम्मानप्रति टाउको हल्लाएरसम्म प्रतिक्रिया जनाएनन्। कपटभद्रपूर्ण घोसे अनुहार लिएर लमलम भित्र पसे। भित्र पस्नेबित्तिकै जब उनले मलाई खुला ढोकाभित्र उभिरहेको देखे, उनको अनुहार पूर्ण परिवर्तन भयो। मलाई लाग्यो, सम्भवतः म पत्रकार/स्तम्भकार हुनाले कुनै दिन म काम लाग्न सक्छु भन्ने उनले सोचे होलान्। "ओहो रवीन्द्रजी, यु आर अलरेडी हेयर (ओहो ... तपाईं त आइसक्नुभएछ) ! जाऔँ-जाऔँ, माथि जाऔँ।"

हामी माथि उनको कार्यकक्षमा गयौँ। पछिपछि

उनको कोट बोकेर आएको पियनले कोठाभित्र ह्याङ्गरमा कोट राख्दा अलिकति मिलेनछ । महाशयले टीठलाग्दो आवाजमा भनिहाले, "के गरेर राख्या त्यो ? सीधा पारेर राख्न पनि आउँदैन ? सीधा पार त्यसलाई ।"

सरसर्ती हेर्दा यो कुनै याद गर्नैपर्ने घटनाजस्तो नलाग्न सक्छ । तर, उनको अनुहार र आवाज दुवैमा ती तल्ला स्तरका कर्मचारीहरूप्रतिको तुच्छता सहजै महशूस गर्न सकिन्थ्यो । ती कर्मचारीहरूलाई ती महाशयले कुनै दया गरेर गुन लगाइदिएका थिएनन् । ती सबै आआफ्नो क्षमता अनुसारको श्रम गरेर जीवन गुजारा गरिरहेका थिए, जसको उनी जस्ता पढेलेखेका, जानेबुझेका मानिसले सम्मान गर्नुपर्थ्यो । दया गरेर गुनै लगाएको भए पनि मान्छेलाई मान्छे जस्तो व्यवहार गर्नुपर्छ । ती त झन् आफ्नो श्रम बेचिरहेका थिए ।

यस्तो समाजमा श्रम बेचेर इमानदारीपूर्वक जीवन गुजारा गर्दै आधी जिन्दगी कटाइसक्दा पनि कसैबाट कहिले पनि सम्मानपूर्ण व्यवहार नपाएका कृष्णबहादुरलाई

मेरा मित्रले ‘जी’ भनेर सम्बोधन गर्दा आँसु झर्नु अस्वाभाविक थिएन। कृष्णबहादुरका अरू भोगाइले हामीलाई अझ धेरै भावुक बनाए। १६ वर्ष काम गर्दा पनि भविष्यका लागि कुनै जोहो गर्न नसकेपछि अलि बढी पैसा पाए नयाँ जागिर खोज्ने जानकारी उनले आफ्ना पुराना ‘मालिक’ लाई दिएका रहेछन्, जसले ‘यहाँभन्दा बढी पैसा कसैले दिए गए हुन्छ’ भनेका रहेछन्। त्यत्तिकैमा उनले मेरा मित्रकहाँ जागिर पाएछन् र आफ्ना ‘मालिक’ लाई दुई हप्ताको सूचना दिएछन्। पछि, कृष्णबहादुरसँगको हिसाब-किताब फछ्र्योट गर्ने बेला, ती धनाढ्य मालिकले पर्याप्त समयअगावै सूचना नदिएको भनेर एक महिनाको तलब – छ हजार पाँच सय रुपैयाँ – काटिदिएछन्। कृष्णबहादुरले हामीसँग गुनासो गर्दै भने, “हजुर, मैले राम्रो काम नगरेको भए मलाई १६ वर्षसम्म नराखेको भए पनि हुन्थ्यो। तर, १६ वर्ष दिनरात नभनी सेवा गरेर अलि राम्रो काम पाउँदा छोडेर जाने बेला उल्टो

आठ-१० हजार रुपैयाँ थपेर 'ल जा, अब राम्रोसँग काम गर्नू, हामीलाई नबिर्सनू' भन्नु त कहाँ हो कहाँ, उल्टो एक महिनाको सूचना नदिएको भनेर मेरो तलब नै काटिदिए। मेरो लागि त पाँच-सात हजार रुपैयाँ भनेको धेरै ठूलो कुरा हो। करोडौँको सम्पत्ति भएका मान्छेले म गरीबको त्यति पैसा काटेर कति नै धनी हुन्छु भन्ठानेका होलान्, मैले त बुझ्न सकेको छैन।"

"तपाईंलाई दिएको करारपत्रमा जागिर छोड्न एक महिनाको सूचना दिनुपर्छ भनेको थियो होला नि त!" मेरा मित्रले भने।

"न कहिले मलाई करारपत्र दिइयो, न त कहिले मलाई मुखले एक महिनाको सूचना दिनुपर्छ भनियो। मैले कसरी थाहा पाउने, हजुर?"

मेरा मित्रलाई साह्रै झोँक चलेछ। उनले सल्लाह दिए, "तपाईं जानोस् र त्यो काटेको पैसा दिनुपर्छ भनेर दावी गर्नोस्।"

तर कृष्णबहादुरले भद्रता देखाउँदै भने, “ठीकै छ हजुर, उहाँले त्यस्तो गरिबक्सियो भन्दैमा म पनि त्यस्तै गर्न चाहन्नँ। उहाँ पाँच-सात हजार रुपैयाँले धनी बन्नुहुने रैछ। मेरो त चित्त मात्र दुखेको हो; म त्यति पैसा नभएर गरीब बन्दिनँ।”

कृष्णबहादुको कथाले यो देशका लाखौं श्रमिकको भोगाइलाई प्रतिनिधित्व गर्छ, जसलाई ‘मालिक’ हरू मान्छे गन्दैनन्। जसलाई ‘मालिक’ हरू काम छोडेर यसले अन्त जान सक्दैन भन्ने विश्वासमा पूर्ण शोषण गर्छन्; तुच्छ र टर्रो भाषामा बोल्छन्। उनीहरूकै श्रम बेचेर शान गर्छन्; तर तिनलाई जागिर दिएर ठूलो गुन लगाइदिएको छु भन्ठान्छन्। ती मालिकहरूले पढेका, जानेका, बुझेका र देखेका छन्; तर ती कौडी-कौडीको हिसाब गर्छन्। आफ्ना कारिन्दालाई दास सम्झन्छन् अनि गोष्ठीहरूमा समानता र न्यायको भाषण गर्दै सरकारले आफूहरूको ख्याल गरेन भनेर गुनासो गर्छन्। जसले मान्छेलाई मान्छेको जस्तो

व्यवहार गर्दैनन्, श्रमको सम्मान गर्दैनन् र गरीबको शोषण गर्छन्, ती सबैलाई कृष्णबहादुरको आँसुबाट आत्मदोषको अनुभूति होस् । जसलाई आत्मदोषको अनुभूति हुँदैन, ती सबैलाई उनको आँसुको श्रापै लागोस् ।

*नागरिक दैनिक, २०६७ जेठ ५*

# चम्पादेवीमा केबलकार

२०६७ जेठ २६ गते बुधबारको *नागरिक* दैनिकको अग्रपृष्ठमा काठमान्डुको उत्तरतर्फ रहेको शिवपुरी पहाडमा केबलकार निर्माण प्रस्तावबारे एउटा समाचार छापिएको थियो। सो केबलकार सम्बन्धी समाचारले मेरो ध्यान बढी आकर्षित किन गर्‍यो भने, त्यसको केही समयअघि मात्र मैले एक जना अर्बपति नेपाली व्यापारीलाई काठमान्डुको दक्षिणमा पर्ने अर्कै पहाड चम्पादेवीमा केबलकार र 'एडभेन्चर पार्क' निर्माण गर्न पहल गर्नुभए कति राम्रो हुने थियो भनेर सुझाएको थिएँ।

हाम्रो पुस्ता नेपालका विफल पुस्ताहरूको शृङ्खलामा पर्छ, जसले राजनीतिक-सांस्कृतिक कुनै पनि क्षेत्रमा ऐतिहासिक महत्त्वका कुनै पनि गर्वयोग्य काम गरेर देखाउन सकेको छैन। राजनीतिमा आएका सैद्धान्तिक

परिवर्तनहरू आफैँमा उपलब्धि होइनन्। सांस्कृतिक पक्षको कुरा गर्ने हो भने, नेपालको इतिहासको यो कालखण्डमा आजभन्दा सय वर्षपछि पनि पर्यटकीय र सांस्कृतिक महत्त्व राख्ने केही बनेको छ भने त्यो केवल तिब्बतबाट नेपाल आएका बौद्धमार्गीहरूले ठाउँठाउँमा निर्माण गरेका भव्य गुम्बाहरू मात्र हुन्। तिनले पनि तिब्बती या नेपाली असाधारण कलात्मक इतिहासलाई निरन्तरता दिन सकेका छैनन्। तर पनि केही हुन नसकेको समयमा जे भएको छ, त्यसलाई धन्य सम्झनैपर्छ। सरकारी स्तरबाट कुनै त्यस्ता महान् कामहरू हुने सम्भावना अझ धेरै वर्षसम्मका लागि अत्यन्त न्यून देखिन्छ। यस्तो परिस्थितिमा त्यस्ता कामहरू गर्न सक्ने एउटै वर्ग धनाढ्य व्यापारीहरू हुन्। उदाहरणका लागि, काठमान्डुको पूर्वमा अवस्थित साँगामा एक सय आठ फुट अग्लो कैलाशनाथ महादेवको मूर्ति निर्माण र त्यसको वरिपरि फैलिएको ठूलो क्षेत्रको विकासका लागि उद्योगपति कमल जैनले

करोडौँ खर्च गरेका छन्। कुनै व्यापारीबाट भएको त्यो एउटा अद्वितीय काम हो। चम्पादेवीको सपनालाई मैले कैलाशनाथ महादेवको भन्दा पनि ठूलो परियोजनाका रूपमा सोच्ने गरेको छु। त्यसैले, मौका पर्नेबित्तिकै मेरो घरको छतबाट म भद्र सौन्दर्य छरेर थपक्क बसेकी चम्पादेवीलाई हेर्दै आफ्ना सपनाहरू बुन्ने गर्छु। जब म चम्पादेवीलाई हेर्छु तब मलाई स्विटजरलन्डका त्यस्तै पहाडहरूमा निर्मित कैयौँ केबलकार र 'एडभेन्चर पार्क' हरूको याद आउँछ। म सोच्छु, पैसा भैदिएको भए म पनि चम्पादेवीमा केबलकार निर्माण गर्ने थिएँ र केबलकारको योजनालाई व्यापारिक रूपमा अझ फराकिलो पार्ने थिएँ। चम्पादेवीको चुचुरोतर्फको यात्रालाई बीचमा एक पल्ट ब्रेक लगाइदिने थिएँ र त्यहाँ स्विटजरलन्डमा जस्तै गज्जबको 'एडभेन्चर पार्क' निर्माण गर्ने थिएँ।

त्यस्तो पार्क निर्माणको लागत तुलनात्मक रूपमा कम हुन्छ। किनभने, तिनमा रूख, काठ, सिक्री, डोरी

जस्ता साधनहरूको प्रयोग गरिएको हुन्छ। साथमा रेस्टुराँ, दृश्यावलोकन स्थल आदि त हुने नै भए। चम्पादेवीमा अहिले नै चम्पादेवी माईको मन्दिर र एउटा स्तूप छ। त्यसैले, दोस्रो खण्डको यात्रामा केबलकारबाट चम्पादेवीको चुचुरोमा पुगेपछि चाहिँ मैले करोडौँ खर्च गरेर कलात्मक परिसरभित्र भव्य र हाम्रो इतिहासको कलात्मक स्तरसँग मिल्दोजुल्दो चम्पादेवी मन्दिर र बौद्ध स्तूप निर्माण गर्ने थिएँ, जसले कलाविहीन नेपाली इतिहासको यो कालखण्डको रिक्ततालाई केही हदसम्म भए पनि पूर्ति गरिदिने थिए। हामीकहाँ मल्लकाल र केही हदसम्म राणाकालयता कुनै पनि उल्लेखनीय कलात्मक र ऐतिहासिक धार्मिक केन्द्र निर्माण भएको छैन। त्यसैले, मैले चम्पादेवीको चुचुरोलाई हिन्दू र बौद्ध धर्मको यस्तो अतुलनीय सङ्गमस्थल बनाउने थिएँ, जहाँ भक्तजन अनि संस्कृति र प्रकृतिप्रेमीहरू नगैकन धेरै पाउने थिएनन्। काठमान्डु आउने पर्यटकहरूले नजिकै रहेको चम्पादेवी नगए नेपाल

भ्रमणलाई अपूर्ण सम्झिने थिए, मानौँ प्यारिस गएर आइफल टावर नगए जस्तै। आइफल टावर चढ्नका लागि हरबखत स्वदेशी र विदेशीहरूको लाइन लागे जस्तै चम्पादेवी पुग्न बाह्रै काल बाह्रै महिना मानिसहरूको भीड लाग्ने थियो। राम्रा होटेल, सुन्दर हिमाल र पहाड अनि ट्रेकिङ र राफ्टिङले मात्र पर्यटक आकर्षण गर्न खोज्नेहरूको भीडमा चम्पादेवी आयोजना अतुलनीय कला, धर्म, संस्कृति, सौन्दर्य र पर्यटनको एउटा गज्जबकै व्यापारिक नमूना हुने थियो। देशकै लागि त्यो एउटा ठूलो योगदान हुने थियो। मानदेवले चाँगुनारायण बनाए भनेर सदियौँपछि पनि हामीले सम्झिए जस्तै भावी पुस्ताले पनि चम्पादेवी मन्दिर र स्तूपको निर्मातालाई सदा सम्झिरहने थिए। तर विडम्बना, म आफ्नो डेराको छतमाथि बसेर त्यो सपना बुनिरहेको थिएँ। आफ्नो सामर्थ्य नभएको हुनाले मैले आफ्नो सपना नेपालका लागि सधैँ सुन्दर सपनाहरू बुन्ने र तीमध्ये कैयौँलाई कार्यान्वयन पनि गर्ने एक अर्बपति

नेपालीसँग बाँडेको थिएँ। उनले मेरो सल्लाहलाई कति गम्भीरतापूर्वक लिएका छन्, त्यो चाहिँ मलाई थाहा भएन।

मनकामना केबलकार नेपालको परिप्रेक्ष्यमा एउटा अत्यन्त गर्वयोग्य अग्रसरता थियो। अरू गर्वयोग्य कुरा के हो भने, आधुनिक शौचालय र सरसफाइको कमै ज्ञान भएका सयौँ नेपाली जाने सो केबलकार परिसरलाई उदाहरणीय ढङ्गबाट सफा र व्यवस्थित राखिएको छ। सो परिसरभित्र प्रवेश गरेपछि योरोपकै कुनै केबलकार परिसरभित्र प्रवेश गरेझैँ लाग्छ। हाल शिवपुरीमा केबलकारको प्रस्ताव गर्ने यती एयरलाइन्सका सञ्चालक आङछिरिङ शेर्पा पनि एक सफल उद्यमी हुन्। उनले गरेको काम पनि त्यत्तिकै स्तरीय हुनेछ भन्ने अपेक्षा गर्न सकिन्छ। शेर्पाले व्यवसायका साथसाथै यती एयरलाइन्समार्फत प्रशस्त सामाजिक कामहरू पनि गरेका छन्। यो पङ्क्तिकारको उनलाई आग्रह के छ भने, शिवपुरीमा केबलकार निर्माण गर्ने

प्रस्ताव सदर भयो भने त्यसलाई केबलकार व्यवसायका रूपमा मात्र नलिई एउटा महान् ऐतिहासिक आयोजनाका रूपमा लिइदिए, चम्पादेवीको सपना शिवपुरीमा कार्यान्वयन हुन सक्थ्यो ।

प्रसङ्गवश यो आलेख केबलकारबाट शुरू भयो । तर, यहाँ चर्चा गर्न खोजिएको मूल विषय चाहिँ के हो भने, देशमा सरकारले गरिदेला भन्ने स्थिति छैन । त्यसैले यस्तो अवस्थामा व्यापारीहरू स्वयं अलि बढी सृजनशील भैदिने हो भने उनीहरूले व्यक्तिगत नाफा आर्जन गर्नुका साथसाथै आफ्नो छवि निर्माण त गर्थे नै, सँगसँगै यो काठमान्डु खाल्डो र देशका अन्य ठाउँमा धेरै राम्रा काम पनि हुने थिए ।

केही समयअघि मैले काठमान्डुको मुटुमा अवस्थित कमलपोखरीलाई स्थानीय तहमै सुन्दर तलाउका रूपमा कसरी विकास गर्न सकिएला भनेर लेखेको थिएँ । त्यसपछि सो पोखरीबारे कतिपयले प्रशस्त चासो देखाए; तर काम चाहिँ अहिलेसम्म केही भएको छैन ।

काठमान्डु उपत्यकामा त्यस्ता अरू धेरै पोखरी छन्। सामाजिक रूपमा ती पोखरीहरू पुन:स्थापित हुने सम्भावना कम देखिन्छ। त्यसैले, कम से कम व्यापारिक सम्भाव्यता बोकेका पोखरीहरूमा सरकारले प्रवर्धन गर्न खोजिरहेको सार्वजनिक-निजी साझेदारी अवधारणा अन्तर्गत व्यापारीहरूले हात हाल्ने हो भने पोखरीहरू सुन्दर ढङ्गबाट पुन:स्थापित हुनुका साथै काठमान्डुको सौन्दर्य बढ्ने थियो र लगानीकर्ताहरूलाई फाइदा पनि हुने थियो। काठमान्डुको मुटुमा अवस्थित सानो र ठीकैको 'गार्डन अफ ड्रिम्स' त व्यापारिक रूपबाट सफलतापूर्वक सञ्चालन हुन सकिरहेको छ भने, अत्यन्त रमणीय केन्द्रहरूका रूपमा विकसित हुन सक्ने सम्भावना बोकेका उपत्यकाका कैयौँ पोखरीलाई लगानीकर्ताहरूले दीर्घकालीन रूपमा भाडामा लिएर व्यापारिक प्रयोजनका लागि विकास गर्ने हो भने, ती निश्चित रूपमा नाफामूलक व्यवसाय बन्नेछन्। उपत्यकाको कङ्क्रिटको जङ्गलका मात्र ठाउँठाउँमा

रूखैरूखले घेरिएका, कमलका फूलहरू फुलेका, घाम र छायामा सुस्ताउन सकिने, खानपानको व्यवस्था हुने त्यस्ता रमणीय तलाउहरूमा पर्यटक, युवायुवती, प्रेमीप्रेमिका, बूढाबूढी सबै आकर्षित हुनेछन् भन्ने सहजै अनुमान गर्न सकिन्छ । त्यस्ता कैयौँ पोखरी सांस्कृतिक महत्त्वका भएकाले सांस्कृतिक सम्पदाहरूको संवर्धनमा चासो देखाउने नेपाल इन्भेस्टमेन्ट बैङ्क र त्यसका अध्यक्ष तथा प्रमुख कार्यकारी पृथ्वीबहादुर पाण्डेको ध्यान त्यस्तो व्यवसायतर्फ आकर्षित भैदिए कति राम्रो हुने थियो !

म हरेक दिन काठमान्डुको दक्षिणमा अवस्थित भैँसेपाटीको ओरालो हुँदै काममा जाँदा, उद्योगपति उपेन्द्र महतोको नाममा राखिएको ‘महतो मार्ग’ देख्छु । उनले आफ्नो घरछेउको बाटो पिच गरिदिएकाले उनको नाममा सो बाटोलाई नामकरण गरिएको हो । म अरू कैयौँ धनाढ्य बसोबास गर्ने बाटाहरूबाट हिँडेको छु । जतातत‍ै बेहाल स्थितिका बाटाहरू देखिन्छन् ।

ती बाटाहरूलाई धनाढ्यहरूले राम्रो बनाइदिने हो भने सम्बन्धित समुदायले तिनै धनाढ्यको नाममा ती बाटाहरूको नामकरण गर्न सम्भवत: कुनै आपत्ति जनाउनेछैनन्। कसैले निश्चित रकम खर्च गरेर निश्चित दूरीको बाटो तोकिएको मापदण्ड अनुरूप बनाइदिन्छ र त्यसको स्याहार-सम्भार गरिदिन्छ भने, सो बाटोलाई उसको नाममा नामकरण गर्दा केही हानि नहोला। बनून् न चौधरी मार्ग, खेतान मार्ग, वैद्य मार्ग, ज्योति मार्ग आदि-इत्यादि। के फरक पर्छ र! राम्रा सडकहरूबाट शहरकै शोभा बढ्छ। त्यस्तै, हरेक दिन कार्यालय जाँदा मेरा आँखा ललितपुर, पुलचोकको एउटा खण्डमा बाटोमाऽ बिरुवा लगाएर बनाइएको सुन्दर 'डिभाइडर' मा पर्छन्। त्यसमा राखिएको सानो सूचनामा 'हिमालयन डिस्टिलरी लिमिटेडद्वारा गर्वका साथ संरक्षित' भनेर लेखिएको छ र सो डिभाइडरलाई राम्रोसँग संवर्धन पनि गरिएको छ। त्यसबाट सो बाटोको शोभा त गज्जबले बढेको

छ नै, साथसाथै हिमालयन डिस्टिलरीको शानदार विज्ञापन पनि भएको छ ।

धनाढ्य व्यापारीहरू गच्छे अनुसार माथि चर्चा गरिएको चम्पादेवी आयोजनादेखि बाटोमा सुन्दर 'डिभाइडर' निर्माण गर्नेसम्मका अनगिन्ती काम गर्न सक्ने सामर्थ्य राख्छन्, जसबाट उनीहरूको व्यापारिक हित मात्र हुँदैन, शहरको संस्कृति, सौन्दर्य र अर्थतन्त्रको प्रवर्धन पनि हुन्छ । यी मेरो सपनाको व्यापारिक संसारका एकाध सोचाइहरू मात्र हुन्, जुन सदा सपनामै सीमित रहनेछन् । तर, के विपनामै व्यापार गर्नेहरू र सक्नेहरूबाट त्यस्ता कामहरू सम्भव होलान् ?

*नागरिक दैनिक, २०६७ असार २*

# दिलशोभाको दिल

तरुनो छँदा मानिसलाई 'म पनि एक दिन बूढो हुन्छु र मर्छु' भन्ने विरलै लाग्छ। त्यति मात्र होइन, कुनै पनि तन्नेरीलाई 'बूढो हुँदा म नितान्त एक्लो हुन सक्छु; म रोगी हुन सक्छु; मेरा अङ्ग-प्रत्यङ्ग चौबीसै घण्टा दुख्न सक्छन्; म अन्धो हुन सक्छु; मलाई पक्षाघात हुन सक्छ या मेरो मृत्यु महिनौँ-वर्षौं ओछ्यानमै थलिएर अत्यन्त पीडादायी ढङ्गबाट हुन सक्छ' भन्ने लाग्दैलाग्दैन। लाग्दो हो त असहाय वृद्धवृद्धाहरूका अनुहारमा धेरै तन्नेरी र धनाढ्यले आफ्नो सम्भाव्य प्रतिविम्ब देख्ने थिए र थोरै नै भए पनि केही गर्ने थिए। तर अधिकांशले गर्दैनन्; किनभने आफैँलाई नपरी कोही पनि त्यस्तो अनिष्ट सोच्नै चाहँदैनन्। तर, अपवादलाई छोडेर। त्यस्तै एक अपवाद हुन्– काठमान्डुकी ५७ वर्षीया दिलशोभा श्रेष्ठ। अधिकांश

मानिसले जीवनमा पद, पैसा र सम्मान 'पाउन' का लागि दिनरात मरिहत्ते गरिरहँदा दिलशोभा भने दिनरात अरूलाई 'दिन' का लागि आफ्नो जीवन अर्पण गरिरहेकी छन्। उनी आफन्तले त्यागेका र असहाय वृद्धाहरूलाई सकेजति दिन्छिन्। त्यति मात्र होइन, पछिल्लो समयमा उनले अनाथ बालबालिकालाई पनि सकेजति दिन थालेकी छन्। कहिलेकाहीँ लाग्छ, जहिलेसम्म समाजमा दिलशोभा जस्ता व्यक्तिको देहान्त हुँदा कुनै ठूलो कहलिएको राजनीतिज्ञको मृत्यु हुँदा जस्तो मानव सागर उर्लिंदैन, तबसम्म यो समाजलाई चेतनशील र सुसंस्कृत भन्न मिल्दैमिल्दैन। दाङमा महेन्द्र संस्कृत विश्वविद्यालय र अन्य कैयौँ सङ्घ-संस्थालाई करोडौँको सम्पत्ति दान गर्ने टेकनाथ गौतमको गत वर्ष निधन हुँदा यो देशमा कसैले पत्तोसम्म पाएन। तर, यो देशलाई धमिराले झैँ खाने कूट र भ्रष्ट राजनीतिज्ञ मर्दा भने सारा सञ्चार माध्यमले फुक्छन् र राष्ट्रपतिदेखि प्रधानमन्त्रीसम्मले शोक व्यक्त गर्छन्। यहाँको मात्र

होइन, सामान्यतः संसारभरकै रीत यस्तै छ। सम्भवतः हामी सबै भ्रमको युगमा बाँचिरहेका छौँ। जेलाई हामी ठूलो ठान्छौँ, ती अधिकांश अर्थहीन छन् र जसमा हाम्रो ध्यानै पुग्दैन तिनमा भने जीवन र जगत्का वास्तविक अर्थ लुकेका छन्।

मैले दिलशोभाबारे सुनेको थिएँ; बेलाबखत पढेको थिएँ; उनलाई एक-दुई पटक टेलिभिजनमा देखेको थिएँ र एक पटक संयोगले भेटेको थिएँ। तर, उनकै घरमा गएपछि मात्र मैले उनलाई अनुभूति गर्न सकेँ र उनको अनुभूतिको स्पर्शले लेराएका खुशीहरूलाई आफ्नै आँखाले देख्न सकेँ। दिलशोभाको घर गएपछि जति नै कठोर मन भएको व्यक्ति पनि भावुक नभैकन फर्किनै सक्दैन। २०६७ भदौ २ गते बुधबार बीबीसी नेपाली सेवाको साप्ताहिक कार्यक्रम 'नेपाल सन्दर्भ' मा समाज बनाउने नाममा सत्ता 'पाउन' का लागि सधैँ लुछाचुँडी गरिरहने नेताहरूभन्दा कहिलेकाहीँ, आफूसँग भएको सबै 'दिएर' समाजमा योगदान

पुऱ्याइरहेका दिलशोभा जस्ता व्यक्तिको अन्तर्वार्ता किन नगर्ने भनेर मैले उनलाई फोन गरेँ। अन्य राजनीतिज्ञलाई जस्तै मैले उनलाई अन्तर्वार्ताका लागि बीबीसीको काठमान्डु स्टुडियोमा आउन अनुरोध गरेँ। उनले प्रत्युत्तरमा भनिन्, "मलाई यस्तो प्रचार-प्रसार मन पर्दैन। म आफ्नो मनले काम गरिराखेको मान्छे। म ठूलो मान्छे होइन।"

त्यसको जवाफमा मैले उनलाई भनेँ, "तपाईंको प्रचार-प्रसार गर्न या तपाईंलाई ठूलो बनाउन अन्तर्वार्ता गर्न खोजेको होइन। बरु, तपाईंले गरिरहेको राम्रो काममा धेरैभन्दा धेरै मानिस सहयोग गर्न आऊन् र अरू मानिसलाई पनि तपाईंले गरेको कामबाट राम्रो काम गर्न प्रेरणा मिलोस् भनेर अन्तर्वार्ता गर्न खोजेको हो।"

जवाफमा उनले भनिन्, "त्यो त ठीकै हो।" तर, उनले आफू स्टुडियोमा आउन नसक्ने कुरा बताइन्। "यहाँ बोल्न नसक्ने, आँखा नदेख्ने, पक्षाघात भएका

आमाहरू हुनुहुन्छ। उहाँहरूलाई छोड्न मिल्दैन।"

त्यसपछि मैले "उसो भए म तपाईंकहाँ आउँछु है त ?" भनेँ, जुन प्रस्ताव उनले खुशीसाथ स्वीकार गरिन्।

दिलशोभा श्रेष्ठ काठमान्डुको एउटा उच्च मध्यमवर्गीय परिवारकी सदस्य हुन्। उनको भनाइ अनुसार, उनले एउटी छोरी पाएपछि, श्रीमान्ले छोरो नपाएको गुनासो गर्दै उनलाई छोडिदिएका थिए। भएकी एउटी छोरीको पनि २०५२ सालमा विवाह भएपछि उनी साह्रै दुःखी भइन्। त्यसै बेला उनी छोराछोरीबाट तिरस्कृत एउटी असहाय आमाको सम्पर्कमा आइन्, जसको उनले सेवा गर्न थालिन् र जसबाट उनलाई कहिले नमिलेको आत्मसन्तुष्टि मिल्यो। ती आमा पछि सबल बनिन्, तर बाटोमा छोडिएका, माग्न बसेका बूढी आमाहरू देखेर दिलशोभाको मन काटिन थाल्यो र उनी तिनै आमाहरूको सेवामा लाग्न थालिन्। "के खान मन लाग्यो आमा तपाईंलाई?" भन्दा कसैले मम खान पाए हुन्थ्यो भन्थे; कसैले केरा खान पाए हुन्थ्यो भन्थे,

कसैले पानी खान पाए हुन्थ्यो भन्थे। “म सबैले जेजे माग्थे, त्यहीत्यही खुवाउँथेँ।”

पछि, पाँच आमालाई उनले काठमान्डुको कलङ्कीस्थित आफ्नो घरमा लेराएर राख्न थालिन् र तिनको हेरविचार गर्न थालिन्। त्यहीँबाट २०५६ सालमा औपचारिक रूपमा शुरू भएको थियो– ‘आमाको घर’। आफ्नो १५-१६ कोठाको निजी घरलाई ‘आमाको घर’ मा परिणत गरेपछि दिलशोभाले बितेका १० वर्षमा, उनकै भनाइ अनुसार, झन्डै सय जना असहाय, रोगी, सडकमा अलपत्र परेका आमाहरूको स्याहार-सुसार र तीमध्ये कतिको एक्लै गएर दाहसंस्कार गरिसकेकी छन्। घरमा एउटी वृद्ध आमाको स्याहार गर्न कैयौँ छोरा-बुहारीलाई हम्मेहम्मे पर्छ; दिलशोभाले २८ आमालाई कुन संयम र सद्भावले चौबीसै घण्टा हेरिरहेकी होलिन्, म छक्क परेँ।

यसबीच उनले ‘आमाको घर’ मा अनाथ बालबालिकालाई पनि आश्रय दिन थालेकी छन्।

अहिले आमाको घरमा ३८ बालबालिका बस्छन् । दिलशोभा स्वयं र अन्य आमा ती सबै बालबालिकाका आमा बनेका छन् । एउटी बालिकालाई अँगालोमा च्याप्दै दिलशोभाले भनिन्, “भोलि यिनी देशको प्रधानमन्त्री बन्छिन् कि, के थाहा !” अर्की बालिकालाई देखाउँदै उनले भनिन्, “यिनलाई त सडकमा फालिराखेको थियो । मैले त बाँच्दिनन् भन्ठानेको, लेराएर धेरै स्याहार गरेपछि बाँचिन् । तर उनको सुस्त मनस्थिति छ ।” उनले अर्की बूढी आमालाई देखाउँदै भनिन्, “यिनलाई धेरै बलात्कार गरेका रहेछन् पापीहरूले । यिनले लोग्नेमान्छे देख्नै चाहन्नन् ।”

“हेर्नोस्, यिनी त एकदम धनी राणाजीकहाँ जिन्दगीभर बसेकी, बूढी भएपछि अलपत्र छोडिदिएछन्, अनि मैले राखेको ।” अर्की आमालाई देखाउँदै दिलशोभाले भनिन् ।

“यतिका वृद्धा र केटाकेटी हेर्न गाह्रो हुँदैन ?” मैले सोधेँ ।

“पहिले म एक्लै हुँदा त गरेँ; अहिले त अलिअलि

प्रचार-प्रसारले होला, मलाई सहयोग गर्न मानिसहरू आउँछन्। दया फाउन्डेसन भन्ने एउटा संस्था रहेछ; दुई जना काम गर्ने मानिस उसले नै तलब दिएर राखिदिएको छ। एक जना अर्की बहिनी छन्, आफैँ सघाउन आएकी। पैसाको हकमा चाहिँ, मैले धेरै पढेकी छैन; मलाई प्रपोजल लेखेर ठूलो संस्थाबाट पैसा लिन आउँदैन। मेरी छोरी शबनमले अमेरिकाबाट महिनाको २० हजार पठाइदिन्छिन्। उनको घरको आठ हजार भाडा पनि मलाई नै दिएकी छन्। चितवनमा मेरो धान आउने जग्गा छ। अनि यो आफ्नै घर हुनाले भाडा तिर्नुपर्दैन। त्यसै गरी दुःखसुख गरेर चलाइरहेकी छु। कहिलेकाहीँ एकदम गाह्रो हुन्छ। गएको असारमा दुइटी आमा बित्नुभयो। दाहसंस्कार गर्दा धेरै पैसा खर्च भयो अनि हामी सबै आमा, नानीहरूले १५ दिनसम्म गुन्द्रुकको झोल र भात मात्रै खाएर बस्यौँ, पैसा नभएर।" दिलशोभा आफैँ कमजोर भएपछि या उनको सेखापछि, त्यत्रा

आमा र बालबालिकाको भविष्य के हुन्छ भनेर मैले सोध्दा, दिलशोभाले उनकी छोरीले आफ्नी आमाले रोपेको रूखलाई अरू फैलाउने वचन दिएको बताइन् ।

मानवीय स्वभाव अचम्मको हुन्छ । मानिसहरूलाई 'आमाको घर' का जस्ता दृश्यले भावुक नबनाउने होइन; तर त्यो भावुकता र 'मसानी वैराग्य' का बीच कुनै अन्तर नहुने रहेछ । मान्छेले जब मसानघाटमा आफन्त या अरू कसैको शव चितामा जलिरहेको देख्छ, त्यति बेला उसलाई जीवन भनेको के नै रहेछ र, आखिर आफू पनि यसै गरी खरानी हुने न हो भन्ने लाग्छ । त्यति बेला उसले लोभ, मोह, घृणा, क्रोध, श्री, सम्पत्ति, मान, पदवी सबै मिथ्या हुन् भन्ने ठान्छ । खरानी हुनुअगावै जीवनमा राम्रो काम गर्नुपर्छ भन्ने भावना उसमा प्रबल भएर आउँछ । तर, 'मसानी वैराग्य' ले जन्माएको त्यो भावना भोलिपल्टैदेखि विलीन भएर जान्छ र मान्छे पुनः आफ्नो पुरानै स्वभावमा फर्किन्छ । संसारका थोरै मानिसहरूमा मात्र

दिलशोभाको जस्तो दिल हुन्छ, धेरै मानिसमा मानवताको भावनाले जन्माउने भावुकता र मानवीय स्वभावमा निहित लालसाबीच निरन्तर द्वन्द्व चलिरहेको हुन्छ। र, अधिकांश मानिस चाहिँ मानवता र भावुकताबारे आदर्श छाँट्न चाहन्छन्। तर, जीवन यथार्थ हो भन्ने सोचबाट ती यसरी ग्रस्त भएका हुन्छन् कि, व्यक्तिगत स्वार्थबाट ती कहिले पनि माथि उठ्नै चाहँदैनन्।

खल्तीमा भएको अलिकति पैसा दिलशोभालाई अर्पण गरेर अनि आफ्ना छोराछोरीलाई बेलाबखत उनीहरूमार्फत नै ससाना सहयोग गर्न दिलशोभाकहाँ लैजाने सोच बनाएर 'आमाको घर' बाट फर्किंदै गर्दा मलाई आफ्नो जीवन अत्यन्त अर्थहीन र आडम्बरपूर्ण लागिरह्‌यो। मैले अलिकति पढेँ; देखेँ; बुझेँ र नाम कमाएँ; तर ती सबैले मलाई खासै नपढेकी र संसार नदेखेकी दिलशोभाको जति चेतना पनि नदिएको स्पष्ट महशूस भइरह्‌यो। जीवनको अर्थ र सौन्दर्य वास्तवमा दिलशोभाले पहिल्याएको बाटोमा छ भन्ने गहिरोसँग अनुभूति हुँदाहुँदै पनि

दिलशोभाको जस्तो त्यागपूर्ण बाटोमा हिँड्न सक्ने आँट भने मैले आफूमा जगाउन सकिनँ। तर मैले मनमनै प्रार्थना गरेँ– दिलशोभा बन्न नसके पनि म कम से कम दोस्रो कोटिका मानिसहरूमा पर्न सकूँ, जो मानवीय लालसाविरुद्ध लड्न निरन्तर प्रयास गरिरहेका हुन्छन् र बेलाबखत त्यसमा सफलता पनि हासिल गर्छन्। बाटोभरि मैले दिलशोभा र देशभरि छरिएका उनी जस्ता अनगिन्ती अज्ञात व्यक्तिहरूलाई सम्झिरहेँ, जो हामी जस्ता लोभ र लालसाले गाँजेका तथाकथित चेतनशील मानिसहरूका लागि सधैँ प्रेरणा र व्यङ्ग्य बनिरहनेछन्। *(सहयोगका लागि दिलशोभा श्रेष्ठलाई (०१) ४६७०१६५ र (०१) ४२७४७३० मा सम्पर्क गर्न सक्नुहुन्छ।)*

*नागरिक दैनिक, २०६७ भदौ ९*

# शिवानी र इला प्रेरणा बनून्

अङ्ग्रेजी माध्यमका राम्रा विद्यालयहरूमा पढेकी, राम्रो शैक्षिक र पारिवारिक पृष्ठभूमि भएकी २३ वर्षीया शिवानी बस्नेतले अमेरिका, बेलायत गएर आफूलाई राम्रैसँग बिकाउने क्षमता राख्दाराख्दै परराष्ट्र मन्त्रालयमा शाखा अधिकृतमा जाँच दिइन् र बकाइदासँग उत्तीर्ण भइन्। त्यस्तै, चिकित्साशास्त्र पढेर पेशागत अभ्याससमेत शुरू गरिसकेकी इला मैनालीले कैयौँ समवयीले जस्तै अमेरिका, बेलायतमा डाक्टर हुने सपना छोडेर परराष्ट्र सेवालाई रोजिन्। हालै परराष्ट्र सेवामा २८ शाखा अधिकृत पदका लागि भर्ना खुलेकामा १४ महिला उत्तीर्ण भएका छन्। तिनैमध्ये दुई जना हुन् शिवानी बस्नेत र इला मैनाली। शिवानीले आफ्नो रोजाइबारे *नागरिक* दैनिकलाई भनिन्, “जागिरमा पैसा हेरिन्छ; ममा सेवाको उद्देश्य थियो,

जुन सरकारी जागिरबाट मात्र पूरा गर्न सकिन्छ भन्ने मलाई लाग्यो।" इलाले चाहिँ आफूले चिकित्साशास्त्र पढेको देश भारतमा डाक्टर, इन्जिनियरहरूले विदेश मन्त्रालयमा नाम कमाएको थाहा पाएर आफू परराष्ट्र सेवामा आकर्षित भएको बताइन्। चिकित्सा पेशा छोडेर शाखा अधिकृतमा जाँच दिन उनलाई कसैले प्रोत्साहन गरेका थिएनन्।

भरखर-भरखरकै कुरा हो, बेलायतको विश्वप्रसिद्ध अक्सफर्ड विश्वविद्यालयमा अध्ययन गरिरहेकी र 'मिस टिन' भैसकेकी खुश्बु ओली पत्रपत्रिकामा निकै चर्चामा आइन्। उनले आफ्नै अग्रसरतामा काठमान्डुको फर्पिङमा वृद्धाश्रम शुरू गरेकी छन्। त्यति मात्र होइन, अक्सफर्डको पढाइ सकाएपछि नेपाल आएर उनी राजनीतिमा प्रवेश गर्न चाहन्छिन्। अमेरिकाको एउटा प्रतिष्ठित मिडिलबरी कलेजमा अध्ययन गरिरहेकी २१ वर्षीया दृष्टि नेपालीबारे पनि केही समयअघि निकै चर्चा भयो। आफूले तयार पारेको लघु जलविद्युत्

आयोजनाबारे उनले आफ्नो कलेजलाई विश्वास दिलाएर आवश्यक कोष जुटाई ललितपुर र काभ्रेका केही गाउँलाई झलमल्ल पारिदिइन्। अमेरिकाकै अर्को प्रतिष्ठित हार्वर्ड विश्वविद्यालयमा स्नातक गरिरहेका शैलेश मुनकर्मीले आफ्नै अग्रसरतामा पैसा जम्मा गरेर आफूले अध्ययन गरेकोसहित दुइटा विद्यालयमा 'ई-लाइब्रेरी' स्थापना गरिदिए। यो पङ्क्तिकारले थाहा नपाएका कैयौँ युवाबाट यस्ता धेरै काम भएका छन्। तर आफूलाई थाहा भएकामध्ये माथिका केही दृष्टान्त प्रस्तुत गर्नुका मुख्य रूपमा दुइटा कारण छन्।

पहिलो, देशको दुःखलाग्दो र दयनीय परिस्थितिको सधैँ आलोचना गर्ने, आफ्नो कर्तव्य बिर्सिने तर अधिकारको मात्र चर्को कुरा गर्ने धेरै सुपठित तन्नेरीको थामिनसक्नु भीडमाझ यस्ता तन्नेरीहरू पनि छन्, जो आफ्नो तहबाट जे सक्यो त्यो गर्न चाहन्छन् र गर्छन् पनि। आफ्ना साराका सारा समकालीनहरू विदेशमा रहँदा अथवा विदेशमा अध्ययन गरेपछि त्यहीँ जागिर

खाएर नेपालै नफर्कने निर्णय गरिरहँदा, क्षमतावान् हुँदाहुँदै पनि शिवानी बस्नेत, इला मैनाली र उनीहरू जस्ता कतिपयले नेपालभित्रैको अवसर प्रयोग गर्ने जुन निर्णय गरे, त्यसलाई सबैले नमन गर्नैपर्छ। अबको डेढ-दुई दशकमा, विदेशमा घरजम गरेपछि अधिकांश प्रवासीले भोग्ने 'परिचय सङ्कट' को पीडाबाट आफ्ना धेरै समवयी गुज्रँदै गर्दा, शिवानी र इलाले भने राष्ट्रिय र अन्तर्राष्ट्रिय तहमा यो देशको परिचय परिभाषित गरिरहेका हुनेछन्। त्यस्तै, धेरै प्रतिभाशाली नेपाली युवाले 'विश्वव्यापीकरण' र 'विश्व नागरिक' को वकालत र बचाउ गर्दै महासागरमा एक थोपा पानी बनेर आफ्नो परिचय गुमाइरहँदा, अक्सफर्ड विश्वविद्यालयमा पढेर नेपाल फर्केर समाजसेवा र राजनीति गर्न चाहने खुश्बु ओली, मिडिलबरी कलेजमा पढ्दापढ्दै नेपाली गाउँमा बिजुली बाल्ने दृष्टि नेपाली र हार्वर्ड विश्वविद्यालयमा पढ्दै गर्दा पुस्तकालय निर्माण गर्ने शैलेश मुनकर्मीहरू सम्भवत: नेपाल र

नेपालीका गौरव र प्रेरणा बन्नेछन्। उनीहरू जस्ता नेपालीहरू नेपालको परिवर्तनका वाहक हुनेछन् अनि परिवर्तित नेपालको चास्नी चाट्न चाहिँ दुःखमा भाग्ने र सुखमा साथ दिने अवसरवादीहरू परिचयको खोजीमा भौँतारिँदै नेपाल भित्रिनेछन्। भारतमा अहिले त्यस्तै भैरहेको छ। देशमा परिवर्तन अधिकार खोज्ने तर कर्तव्यबाट विमुख हुनेहरूले होइन, आफ्नो ज्ञान, सीप, सृजनात्मक क्षमता र सम्पत्तिलाई जहाँ बसे पनि भारतमै प्रयोग गर्न चाहने भारतीयहरूले लेराइरहेका छन्। अनि त्यो परिवर्तनको रसास्वादन गर्न चाहिँ अवसरवादी भारतीयहरू लाखौँको सङ्ख्यामा भारत भित्रिरहेका छन्। त्यो दिन नेपालमा पनि अवश्य आउनेछ।

दोस्रो, देशको नीतिनिर्माणको तहमा माथि उल्लेख गरिए जस्ता अब्बल दर्जाको शैक्षिक पृष्ठभूमि भएका र नेपालकै लागि गर्नुपर्छ भन्ने गहिरो प्रतिबद्धता भएका युवाहरू नपुगी हुँदैहुँदैन। शैक्षिक पृष्ठभूमि,

ज्ञानको दायरा र विवेकको स्तरले प्रशासनिक र राजनीतिक नेतृत्वको सन्दर्भमा ठूलो महत्त्व राख्छ। तर, त्यस्ता गुणहरूले सम्पन्न व्यक्तिहरूको सङ्ख्या हामीकहाँ नेतृत्व तहमा अझै पनि ज्यादै न्यून छ। उदाहरणका लागि, प्रशासन क्षेत्र कुनै पनि राज्य सञ्चालनको मेरुदण्ड हो। हाम्रा कैयौँ प्रशासनिक अधिकारी अत्यन्त इमानदार र स्वाभिमानी छन्। नेपालभित्रकै परिप्रेक्ष्यमा ती सक्षम पनि छन्। खास गरी देशको प्रशासन यस्तो क्षेत्र हो जसको नेतृत्व अन्तर्राष्ट्रिय परिप्रेक्ष्यमै सक्षम हुन जरूरी हुन्छ। तर , हाम्रा अधिकांश प्रशासनिक अधिकारी देशको कमजोर शिक्षा प्रणालीकै उत्पादन हुनाले नेपालभित्र जतिसुकै सक्षम देखिए पनि ती अन्तर्राष्ट्रिय परिप्रेक्ष्यमा आफ्ना विदेशी समकक्षीहरूभन्दा कमजोर हुने गर्छन्। खास गरी तिनको, अत्यावश्यक भैसकेको अङ्ग्रेजी बुझाइ, अभिव्यक्ति, लेखन, विश्वासिलो र स्पष्ट तर्क क्षमता ज्यादै कमजोर हुने गर्छ। परिणामस्वरूप, कैयौँ प्रशासनिक

अधिकारी विदेशी दाता तथा राष्ट्रका अधिकारीहरूसँग वार्ता गर्दा आत्मविश्वासका साथ प्रभावकारी रूपमा प्रस्तुत हुनै सक्दैनन्। भाषागत समस्या भए दोभाषे प्रयोग गरे पनि हुने हो; तर अधिकांशले कामचलाउ अङ्ग्रेजी जान्ने हुनाले दोभाषे प्रयोग गर्न चाहँदैनन्। समस्या भाषामा मात्र सीमित छैन। संसारभर राम्रा विद्यालयहरूमा विद्यार्थीलाई सानैदेखि तथ्यमा आधारित भएर सिलसिलाबद्ध रूपमा र प्रभावकारी ढङ्गबाट तर्क गर्न प्रशिक्षित गरिएको हुन्छ। हाम्रा अधिकांश विद्यालयमा विद्यार्थीहरूको जीवनमा ठूलो महत्त्व राख्ने त्यो पक्ष पूर्णतः शून्य रहन्छ। हाम्रा विश्वविद्यालयबाट उत्कृष्ट श्रेणीमा एमए पास गरेका विद्यार्थीलाई समेत आफ्नो तर्क पेश गर्दा त्यसको उपयुक्त संरचना कस्तो हुनुपर्ने हो, तथ्य र सन्दर्भ सामग्रीलाई कसरी, कुनकुन ठाउँमा प्रयोग गर्नुपर्ने हो भन्ने ज्ञानै हुँदैन, जबकि राम्रा विद्यालयमा पढेका व्यक्तिहरूले त्यो क्षमता विद्यालय स्तरको शिक्षा पूरा गर्दा-नगर्दै विकास गरिसकेका

हुन्छन् । राजनीतिक नेतृत्वको हालत त झन् प्रशासनिक नेतृत्वको भन्दा कैयौँ गुना गएगुज्रेको छ । राजनीतिमा त हाम्रो कमजोर शिक्षा प्रणालीभित्रका पनि कमजोर विद्यार्थीको बाहुल्य छ, जसमा ज्ञान, विवेक, इमानदारी, स्वाभिमान, सृजनात्मकता र पूर्वदृष्टिको अभाव छ । वास्तवमा आज देशले भोगिरहेको पीडा सर्वत्र चर्चा भैरहेझैँ राज्य व्यवस्थाको स्वरूपसँग होइन, राज्यको नेतृत्वको स्तरसँग गाँसिएको छ । भोलि राज्यको पुनर्संरचना भएर नयाँ संविधान लेखियो भने पनि, प्रशासन र राजनीतिमा अब्बल दर्जाका युवाहरूलाई आकर्षित गर्न नसक्ने हो भने, परिस्थितिमा सुधार आउनेछैन ।

अब सक्षम युवाहरूलाई प्रशासनिक र राजनीतिक नेतृत्वमा आकर्षित गर्नका लागि के गर्ने त ? यसमा सम्बन्धित सबै पक्षले केही न केही योगदान पुऱ्याउन सक्छन् । सबभन्दा पहिले, क्षमतावान् युवाहरूले विदेशमै घरजम गरेर आरामदायी जीवन व्यतीत गर्नुमा भन्दा

स्वदेशमा अलिकति दुःख गरेर राष्ट्रको परिवर्तनको वाहक बन्नुमा, राष्ट्रको नेतृत्वदायी तहमा पुग्नुमा शान, मान र सन्तुष्टि बढी हुन्छ भन्ने बुझ्न जरूरी छ। नेपालका सामान्य विद्यालयमा पढे पनि आफ्ना दौँतरीहरूभन्दा अगाडि रहेका अनि राम्रा विद्यालयहरू र विदेशका राम्रा कलेजहरूमा पढेका प्रतिभाशाली व्यक्तिहरूले जिन्दगीको लक्ष्य र अर्थ सम्पत्ति आर्जन र आरामदायी जीवनमा मात्र सीमित छैन भनेर सोच्ने हो भने, भोलिका दिनहरूमा शिवानी बस्नेत र इला मैनाली जस्ता युवाहरू प्रशासन र परराष्ट्र सेवामा सचिव हुनेछन्। राष्ट्रपति, प्रधानमन्त्री, अर्थमन्त्री, परराष्ट्रमन्त्री बन्नेछन् र तिनले देशलाई परिवर्तनको दिशामा डोऱ्याउनेछन्। छोराछोरी अमेरिका या बेलायतमा डाक्टर छन्; इन्जिनियर छन्; ठूलो कम्पनीमा, ठूलो ओहोदामा काम गर्छन् भन्ने कुरामा अभिभावकहरूले पनि गर्व गर्न छोड्नु राम्रो होला। तिनले त्यो व्यक्तिकेन्द्रित सफलता र विवेकहीन दम्भको निरर्थकतालाई

बोध गर्नु उपयुक्त हुन्छ। काठमान्डु बसेर देश बनाउने भाषण गर्ने, देश बिग्रियो भनेर चिन्ता गर्ने अनि देश बनाउन सकारात्मक भूमिका खेल्न सक्ने आफ्ना छोराछोरीलाई चाहिँ "ओहो, यस्तो स्थितिमा नेपाल फर्किन हुन्न है" भनेर नेपाल फर्किन दुरुत्साहन गर्ने प्रवृत्ति घातक आडम्बर हो। राजनीतिक दलहरूले चाहिँ अब्बल दर्जाका युवाहरूलाई राजनीतिमा आकर्षित गर्न छुट्टै समिति गठन गरेर रणनीति नै तयार गर्नु उपयुक्त हुन्छ। युवा भए पनि कमसल राजनीतिकर्मीहरूको भीडले मात्र राजनीतिमा सुधार आउँदैन। सक्षम युवाहरूलाई आकर्षित गर्न प्रयास गर्नैपर्छ। हामी पत्रकारहरूले भने, स्वदेशमै बसेर विभिन्न क्षेत्रमा नेतृत्वदायी भूमिकाको खोजी गर्ने प्रतिभाशाली युवाहरूका गतिविधिबारे कलम चलायौँ भने, त्यसबाट उनीहरूको बाटोमा हिँड्न निश्चय पनि अरू धेरै युवा प्रेरित हुनेछन्। सबैले आआफ्नो ठाउँबाट सकारात्मक प्रयास गरे मात्र देश बन्ने हो।

नत्र व्यक्ति त बन्लान्, देश चाहिँ कहिले पनि बन्नेछैन। शिवानी बस्नेत र इला मैनाली जस्ता युवाहरू यो देशमा बस्न नचाहने, यहाँ फर्किनै नचाहने सुपठित र सुयोग्य युवाहरूका लागि प्रेरक र आत्मचिन्तनका पात्र बनून् !

*नागरिक दैनिक, २०६७ भदौ २३*

# 'खान पुगोस्, दिन पुगोस्'

मेरा एक साथीकी आमा छिन्, पवित्रदेवी रायमाझी। उनको दिनचर्या उनको नामजत्तिकै पवित्र रहन्छ। प्रेम, उदारता, स्वच्छता र भक्तिभाव उनका विशिष्ट गुण हुन्। दिनभरि प्रत्यक्ष र अप्रत्यक्ष पाप गर्ने अनि साँझ-बिहान भगवान्को पूजा-अर्चना गरेर त्यसलाई पखाल्न खोज्नेहरूको भीडमा, पवित्रदेवीको घरमा प्रवेश गर्दा मलाई आफूभित्रका तुसहरू एकै छिनका लागि भए पनि मेटिएको आभास हुन्छ। आफूसँग भएभरको सुम्पिएर लोककल्याणमा जीवनै अर्पण गर्ने अनुराधा कोइराला या दिलशोभा श्रेष्ठको जस्तो महानता औँलामा गन्न सकिने मान्छेहरूमा मात्र हुन्छ। त्यसैले, 'व्यावहारिक परोपकार' या हरेक व्यक्तिले आफ्नो गच्छे अनुसार सकेको कल्याणकारी काम गर्ने संस्कारको विकास गर्न सकियो भने समाज धेरै न्यायपूर्ण र

सुसंस्कृत हुन सक्थ्यो भन्ने मेरो विश्वास रहिआएको छ। त्यसैले ‘व्यावहारिक परोपकार’ का कुरा म मौका पाउनेबित्तिकै गरिहाल्छु। गफगाफका क्रममा एक दिन पवित्रदेवीका छोरा तथा मेरा आत्मीय मित्र श्रीरामले मलाई भने, “मेरी आमाले दशैँमा आशीर्वाद दिँदा सधैँ भन्नुहुन्छ– खान पुगोस्, दिन पुगोस् !” पवित्रदेवीका ती पवित्र चार शब्द मेरो जीवनमा ‘व्यावहारिक परोपकार’ को मेरो विश्वासलाई भत्किन नदिने प्रेरणादायी शब्दका रूपमा अङ्कित भएका छन्। र, हरेक दशैँमा म उनलाई श्रद्धापूर्वक सम्झने गर्छु।

आजसम्म दशैँमा मैले जेजति आशीर्वाद पाएँ, ती सबै मैसँग सम्बन्धित थिए र सम्भवतः भविष्यमा पनि त्यस्तै हुनेछन्। ‘तँ ठूलो भएस्; तँ ज्ञानी भएस्; तँ मानी भएस्; तँ धनी भएस्; तँलाई कहिले रोग नलागोस्; चन्द्रमा सधैँ दाहिने हुन्’ आदि-इत्यादि मैले सुनिआएका आशीर्वादहरू हुन्। अहिले म यसो सोच्छु–

यो समाज बिग्रनु, यो संसार आर्थिक, वैज्ञानिक र बौद्धिक ज्ञानको भण्डारका रूपमा विकसित भएर पनि यति विघ्न अमानवीय समस्याहरूबाट ग्रस्त हुनुमा मूल रूपले बालबालिकालाई जुन ढङ्गबाट हुर्काइन्छ, बढाइन्छ र पढाइन्छ, त्यो नै जिम्मेवार छ। सानैदेखि हामी मान्छेलाई यति व्यक्तिकेन्द्रित हुन प्रेरित गर्छौं, ठूलो हुँदासम्म उसका लागि व्यक्तिगत उपलब्धिले जति महत्त्व केहीले पनि राख्दैन। तर ठूलो भएपछि भने पढेलेखेका, जानेबुझेका, धनसम्पत्ति भएकाहरूले तुलनात्मक रूपमा व्यक्तिगत उपलब्धिभन्दा सामाजिक रूपान्तरणका सम्बन्धमा बढी बोल्नुपर्ने बाध्यता सृजना हुन्छ। त्यसै भएर धेरै ठूला कहलिएका मानिसहरूले 'पद-पैसा मेरो लागि केही पनि होइन; मेरो लागि यो समाज र राष्ट्रको हितले बढी महत्त्व राख्छ' भनेको हामी बारम्बार सुन्छौँ। अधिकांश स्थितिमा तिनले जे भन्छन् त्यो झूट हो भन्ने तिनीहरू स्वयंलाई थाहा हुन्छ। किनभने, हामी सबैलाई सानैदेखि आशीर्वादका

पुण्य घडीहरूदेखि यत्र-तत्र-सर्वत्र व्यक्तिगत हितलाई सर्वोपरि ठान्न यसरी प्रशिक्षित गरिएको हुन्छ, हाम्रा नसा-नसामा व्यक्तिगत मान, प्रतिष्ठा र अर्थोपार्जनका कोषिकाहरू बहिरहेका हुन्छन् । यसर्थ हामी बालबालिकालाई व्यक्तिकेन्द्रित हुन जसरी प्रशिक्षित गर्छौं र तिनै बालबालिकाबाट उनीहरू वयस्क भएपछि समाजका लागि जे अपेक्षा गर्छौं, त्यसका बीचमा ठूलो विरोधाभास छ ।

आज संसारमा देखिएका अधिकांश समस्या त्यही विरोधाभासका नतिजा हुन् । हरेक दिन काठमान्डुका कैयौँ पाँचतारे होटेलमा यो देश कसरी बनाउने भनेर गोष्ठीहरू भैरहेका हुन्छन्; हरेक दिन संसारभर समाज रूपान्तरणका विषयलाई लिएर सयौँ पुस्तक प्रकाशन भैरहेका हुन्छन्; हरेक दिन लाखौँलाख मानिसले त्यस्ता 'अग्रगमनकारी' सोचपूर्ण पुस्तकहरू पढिरहेका हुन्छन् । तर, समष्टिगत रूपमा हेर्दा यो समाज र संसार उँभो लागिरहेको महशूस हुँदैन । हत्या, हिंसा, सामाजिक

असुरक्षा, वातावरणीय ह्रास बढ्दो छ, र त्योभन्दा पनि महत्त्वपूर्ण, गरीब र धनीबीचको खाडल कहालीलाग्दो रूपमा फराकिलो र गहिरो छ। किनभने, ज्ञान विवेकको संवाहक नभएर गर्व र प्रदर्शनको वस्तु भएको छ। अधिकांश परिस्थितिमा ज्ञान भोको हुन्छ; त्यसले माग्छ मात्र, दिँदैन। त्यो कसैको दोष होइन; हामीलाई त्यस्तै सिकाइएको छ। सानैदेखि मेरो मस्तिष्कमा धेरै पढेको, ठूलो ओहोदामा पुगेको, धेरै धन कमाएको, नाम कमाएको व्यक्ति ठूलो मान्छे हो भन्ने छाप परेको छ। तिनैलाई मेरो प्रेरणा र आदर्शका रूपमा प्रस्तुत गरिएको छ। ठूलो मान्छेको नशा यति विघ्न कडा हुन्छ, त्यसले अन्तिम साससम्म पनि मान्छेलाई छोड्दैछोड्दैन। ठूलो मान्छे हुने नशा लागेपछि मान्छेको चेतना ठूलै हदले साँगुरिएर आफैंमा केन्द्रित हुन जान्छ। मान्छेलाई स्वकेन्द्रित नशाले गाँजेको थाहा नहुने होइन, राम्रैसँग थाहा हुन्छ। तर, 'म स्वार्थी छु' भनेर स्वीकार गर्न ऊ लजाउँछ र आफूले आफ्नै वृत्ति

विकास, नाम र दामका लागि गरिरहेको कामलाई ऊ समाज रूपान्तरणसँग जोड्न लालायित हुन्छ। त्यसैले पत्रकारसहित सबै पेशाका मान्छेले सधैँ आफ्नो कर्मले समाज र देशलाई योगदान पुऱ्याइरहेको दावी गर्छन्। तर, समाज र देश बिग्रनुको जिम्मेवारी भने कोही पनि लिन चाहँदैनन्। सबैले अरू, खास गरी राजनीतिकर्मीहरूलाई दोषी देख्छन्। वास्तविकता चाहिँ के हो भने, हामी सबै दोषी छौँ। गन्दा वातावरणका माऊ आआफ्नो पेशागत दायित्व इमानदारीपूर्वक पूरा गर्नेहरू अलि कम जिम्मेवार छन्; त्यति पनि पूरा नगर्नेहरू बढी जिम्मेवार छन्। फरक त्यत्ति हो। तर, जिम्मेवार चाहिँ हामी सबै जिम्मेवार छौँ।

हामी सबैले आफू, आफ्नो पेशा र परिवारबाहेक अरूको वास्ता गरेकै छैनौँ। गैर-इमानदार र भ्रष्टहरूको त कुरै छोडिदिऊँ; इमानदार भए पनि आर्थिक रूपमा विपन्नहरूको पनि कुरा छोडिदिऊँ। हामीले कति त्यस्ता व्यक्तिहरू देखेका छौँ, जो इमानदार, समाज र

देशको रूपान्तरणबारे चिन्तित छन्, आर्थिक रूपमा सम्पन्न छन् अनि साथसाथै आफ्नै खल्ती खोलेर केही न केही सकारात्मक काम पनि गर्छन् ? अधिकांश स्थितिमा बैठक, गोष्ठी, कार्यशाला आदिमा आदर्शको भाषण दिन मान्छे आउँछन्; तर कुनै राम्रो कामका लागि अलिकति पैसा झिकौँ न त भन्यो भने 'ओहो, म त त्यस्तो पैसा दिन सक्ने स्थितिको मान्छे त होइन नि हो' भनेर पन्छिन्छन् । अधिकांश स्थितिमा त्यो आर्थिक विपन्नता होइन; हाम्रो घर, परिवार, समाजले रोपिदिएको मानसिक र भावनात्मक दरिद्रताको परिणाम हो । समाज रूपान्तरणका सबभन्दा ठूलठूला कुरा गर्ने एउटा वर्ग राजनीतिज्ञहरूको हो । हाम्रा धेरै राजनीतिज्ञ असाध्यै धनी छन् । तर, तीमध्ये कति जनाले राजनीतिक घेराभन्दा बाहिर गएर समाज रूपान्तरणलाई साँच्चिकै र ठोस रूपमा सघाएका होलान् ? तिनले त्यस्तो गर्दैगर्दैनन् । किनभने आफ्नो पेशामार्फत समाज रूपान्तरणको कुरा र काम गर्न सजिलो छ, तर आफैँ,

आफ्नै स्रोत प्रयोग गरेर उदाहरण भएर पेश हुन धेरै गाह्रो छ ।

जबसम्म व्यक्तिव्यक्तिले पेशामार्फत मात्र होइन, व्यक्तिगत रूपमै समाज रूपान्तरणका लागि योगदान पुऱ्याउन चाहँदैनन्, समाज न्यायपूर्ण हुनै सक्दैन । त्यसका लागि व्यक्तिव्यक्तिले आफ्नो भाग काटेर दिन जान्नैपर्छ । असाध्यै हुनेले वर्षमा करोडौँ काट्लान्; अलि कम हुनेले लाखौँ काट्लान्; त्योभन्दा 'नि कम हुनेले हजारौँ, सयौँ काट्लान्; तर सबैभित्र 'मैले अरूका लागि गर्नैपर्छ' भन्ने भावनाको विकास हुनैपर्छ । धर्मकर्ममा खूब विश्वास राख्ने, अटुट रूपमा पूजाआजा गर्ने अर्बपति, करोडपतिहरूमा त त्यस्तो भावना झन् बढी हुनुपर्ने हो । किनभने, हाम्रो शास्त्रले नै लाभांशको १० प्रतिशत सत्कार्यमा खर्च गर्नू भन्छ । सत्कार्य सम्बन्धी त्यस्तो वाणीलाई बेवास्ता गर्ने हो भने, साँझ-बिहान मन्त्र जप्नुको के अर्थ ! तिनलाई त पूजाबाट धर्म होइन, पाप लाग्छ ।

संसारकै उदाहरण हेर्ने हो भने पनि, जुन समाजमा हुनेहरूले नहुनेहरूलाई सक्दो बढी दिएका छन्, ती समाजहरू सबभन्दा सुसंस्कृत छन्। त्यहाँ झन्डैझन्डै सदाबहार शान्ति, स्थिरता, समृद्धि र खुशी छाएको पाइन्छ। लोककल्याणकारी राज्य व्यवस्था भएका नर्वे, स्विडेन, फिनलन्ड, डेनमार्क जस्ता देशहरू त्यस्तो समाजका उत्कृष्ट उदाहरण हुन्। त्यहाँ हुनेहरूले सरकारलाई ६० प्रतिशतसम्म कर तिर्छन्, जसमध्ये ठूलो अंश नहुनेहरूको हितमा खर्च हुन्छ। अन्य समाजवादी पश्चिमा मुलुकहरूमा पनि हुनेहरूबाट सरकारले ठूलो रकम कर असुल्ने गर्छ। त्यति कर तिरीकन पनि अझ तुलनात्मक रूपमा हरेक भनेजसो सबल व्यक्तिले कुनै न कुनै र कतिपय स्थितिमा त कैयौँ लोककल्याणकारी कार्यमा नियमित रूपले योगदान पुऱ्याइरहेका हुन्छन्।

तसर्थ यो समाज, यो देश बनाउने हो भने व्यक्तिव्यक्तिले पेशागत दायराभन्दा बाहिर गएर यो समाजलाई ठोस

रूपमा, थोरै नै किन नहोस्, दिनैपर्छ। त्यसका लागि व्यक्ति र समाजप्रतिको हाम्रो धारणामा आधारभूत रूपमै परिवर्तन लेराउनुपर्ने देखिन्छ। शुरूआत आउने दशैँबाटै किन नगर्ने? दशैँमा हुनेहरू अधिकांशले जुवा, रक्सी, भोजभतेर र मस्तीमा धेरै पैसा उडाउनेछन्। के त्यसको सानो अंश उनीहरूले दशैँलाई दशा सम्झिन बाध्य गरीब र असहायहरूलाई छुट्ट्याउन सक्लान्? के तिनले कुनै बालगृह या वृद्धाश्रममा गएर मासु-भात खुवाउन सक्लान्? के तिनले कुनै या केही गरीब परिवारलाई 'ल, तपाईं पनि रमाइलोसँग दशैं मनाउनोस् है' भनेर दुई-चार हजार रुपैयाँ दिन सक्लान्? तुलनात्मक रूपमा केही गर्न सक्नेहरूको मनमा त्यस किसिमको भावना आइदिने हो भने, अनुमान गरौं, यो दशैंले कति परिवारको मुहारमा खुशी लेराउँथ्यो होला! दशैंको बेला त्योभन्दा ठूलो धर्म के हुन्छ होला! दुर्गा भवानीको आराधना गर्दैमा धर्म हुने होइन। त्यसैले, दशैँमा हामीले दिने आशीर्वादलाई

पनि व्यक्तिमुखीबाट समाजमुखी बनाउने हो कि? र, आफ्ना कनिष्ठजनलाई आशीर्वाद दिँदा पवित्रदेवीले ॐ नबिर्सीकन भन्ने हो कि– 'खान पुगोस्, दिन पुगोस्' ?

*नागरिक दैनिक, २०६७ असोज १३*

# हिमानीलाई शुभकामना !

१०-११ वर्षअगाडिको कुरा हो, जति बेला गणतन्त्रको चर्चा मूलतः माओवादी वृत्तमा मात्र सीमित थियो र लोकप्रिय ठानिएका राजा वीरेन्द्र गद्दीनशीन नै थिए। त्यति बेला तत्कालीन *नेपाल* पाक्षिकमा म 'भूमध्यरेखा' शीर्षकमा स्तम्भ-लेख लेख्थेँ। तीमध्ये एउटा *नेपालमा पनि 'युवराजाधिराज कोष' स्थापना गरे कसो होला?* (२०५७ चैत १६) भन्ने थियो। सो आलेखमा मैले बेलायती राजपरिवारका सदस्यहरूको लोककल्याणकारी कार्यमा रहेको व्यापक संलग्नता र त्यसले उनीहरूको प्रतिष्ठा उचा राख्न पुऱ्याएको सहयोगबारे चर्चा गरेको थिएँ। बेलायत जस्तो आधुनिक र क्षमतालाई कदर गर्ने 'मेरिटोक्रयाटिक' समाजमा राजतन्त्र कायम रहनुको एउटै कारण त्यहाँको राजसंस्थाले लोककल्याणमा पुऱ्याएको योगदान नै हो भन्दै मैले लेखेको थिएँ,

"राजसंस्था भनेको सामन्तवादको प्रतीक हो भन्ने गणतन्त्रवादीहरूको बढ्दो सङ्ख्या र प्रजातन्त्र प्राप्तिसँगै राजपरिवारका सदस्यका लागि राष्ट्रले गरिरहेको खर्चको औचित्य खोज्नेहरूको तर्कलाई विचार गर्दा राजपरिवारका सदस्यबाट सामाजिक कल्याणका कार्यमा अगुवाइ र सक्रियता बढाउनु नितान्त जरूरी देखिन्छ।" बेलायतमा पनि पढेका र बेलायतको भ्रमण गर्दा त्यहाँको युवराजाधिराज कोष (प्रिन्सेज ट्रस्ट) बारे राम्ररी जानकारी लिएका तत्कालीन युवराज दीपेन्द्रले त्यस्तो सुझावलाई सकारात्मक रूपमा लिनुपर्ने हो जस्तो मलाई लागेको थियो। तर, सो आलेख छापिएको तीन महिना पनि नपुग्दै भएको राजदरबार हत्याकाण्डले राजसंस्थाको स्वरूपलाई पूर्ण रूपमा बदलिदियो। यद्यपि, दरबार हत्याकाण्डपछि युवराज बनेका पारसको बदनाम विगतका कारण उनको छवि निर्माणका लागि युवराजाधिराज कोषको अवधारणाले अझ बढी महत्त्व राख्ने थियो। तर, त्यसतर्फ न उनले न त उनका पिताले कुनै

चासो लिएको देखियो।

राजा ज्ञानेन्द्रलाई वियोगान्त घटनाको परिणामस्वरूप नै किन नहोस्, भाग्यले इतिहासको पानामा स्वर्ण अक्षरले नाम लेखाउने मौका प्रदान गरेको थियो। उनले निर्वाचित सरकारबाट सत्ता हत्याउँदासमेत जनसङ्ख्याको ठूलो हिस्साले उनलाई कैयौँ महिनासम्म शङ्काको लाभ दिएको थियो। तर, राजकीय गुण र नेतृत्व क्षमताको अभाव अनि चरम हठले गर्दा उनले आफ्नो धरातल छिटै गुमाए। आन्तरिक शक्तिहरूसँग सन्तुलित व्यवहार गर्न सकेका भए सम्भवतः उनी भारतीय डिजाइनको शिकार बन्ने थिएनन्। 'मेरिटोक्रसी' मा विश्वास गर्ने यो पङ्क्तिकार जन्माधिकारलाई मान्ने राजसंस्थाको कहिले पक्षधर हुन सकेन र कहिले हुने पनि छैन। तर नेपालको परिस्थितिमा राजतन्त्र नहुँदा त्यसले राष्ट्रको स्थिरता, अखण्डता र सार्वभौमसत्तामा दूरगामी नकारात्मक असर पार्छ भन्नेमा चाहिँ म सधैँ विश्वस्त छु। त्यसै भएर राजतन्त्रको

अन्त्य हुनेबित्तिकै *दुःख छैन, चिन्ता छ* (*नेपाल* साप्ताहिक, २०६५ असार ११) शीर्षक आलेखमा मैले लेखेको थिएँ, "देशको शान्ति, राष्ट्रिय अखण्डता र सार्वभौमसत्ताको वास्तविक निर्क्योल दिल्लीमा हुने परम्परालाई हामीले यस पटकको परिवर्तनबाट झन्डैझन्डै संस्थागत गरिदिएका छौँ।" त्यति बेला त्यस्तो लेख्दा धेरैले मलाई प्रतिगामी भन्ठाने। आज ती सबै नारायणहिटी दरबारमा रहेको शक्ति दिल्ली दरबारमा सरेको तथ्य सार्वजनिक रूपमै स्वीकार गर्छन्। त्यसै सन्दर्भमा एक वरिष्ठ माओवादी नेताले यो पङ्क्तिकारलाई भने, "राजा हुँदा कति कुरा दिल्लीले भनेको उनले मान्नुपर्थ्यो र कति कुरा चाहिँ राजाले भनेको दिल्लीले मान्नुपर्थ्यो। दुई देशबीच कम से कम एक हदसम्मको सन्तुलित र सम्मानजनक व्यवहार हुन्थ्यो। अब त दिल्लीले जे भन्यो त्यही मात्र हुने परिस्थिति आएको छ।" यो परिस्थिति आउँछ भन्ने स्पष्ट आशङ्का भएकाले देशभर गणतन्त्रको दक्षिणी बतास चलिरहेको

बेला म उल्टो बहिरहेको थिएँ। नेपालमा राजतन्त्रमा सुधार ल्याएर, त्यसको शक्तिलाई नियन्त्रित राखेर परिकल्पना गरिएको परिवर्तन मात्र वर्तमान नेपालको परिप्रेक्ष्यमा फलदायी हुन्छ भन्ने मेरो मान्यता थियो। तर, नेताहरू खराब हुँदा तिनलाई सुधार्न निरन्तर दबाव दिने नेपालीहरूमा राजा खराब हुँदा चाहिँ उनलाई सुधार्न बाटो खोज्ने धैर्य रहेन। बरु, हाम्रा नेताहरू सहसचिव स्तरका भारतीय राजदूतको आज्ञा शिरोपर गर्न तयार भए। राजासँग खूब स्वाभिमानका कुरा गर्ने नेताहरूले यो देशका प्रधानमन्त्रीलाई औपचारिक भेटमा भारतीय राजदूत राकेश सूदले मोजा पनि नलगाईकन लगाएका जुत्ता र पाइन्ट-सर्टमा भेट्दा आफ्नो स्वाभिमान गिरेको महशूस गरेनन्। यो लेख्नुपर्दा पनि मुटु काटिएर आउँछ !

यो परिस्थिति नआओस् भन्नका लागि ज्ञानेन्द्र शाह राजा हुँदै अन्तर्वार्ता लिने प्रयासमा भएको दुई पटकको भेटमा अनौपचारिक कुराकानी हुँदा यो पङ्क्तिकारले

उनलाई अन्य देशका राजतन्त्रको लोकप्रियताका कारणहरू उल्लेख गर्दै 'राजनीतिशून्य, लोककल्याणले पूर्ण' आचरण प्रस्तुत गर्दा राम्रो हुने विचार सुझाएको थियो। त्यति बेला उनले मलाई भनेका थिए, "हामी त्यसबारे सोच्दै छौँ।" तर कहिलेकाहीँ कुनै सामाजिक कार्यका लागि उनले जुन नगण्य पैसा दान गर्छन्, त्यसलाई हेर्दा, खल्तीबाट पैसा झिक्नुपर्‍यो कि पसिना आउने व्यक्तिले बृहत्तर लोककल्याणकारी योजनाबारे सोचे होलान् भन्नेमा मलाई शङ्कै छ। सामाजिक कामका लागि उनले गरेभन्दा बढी आर्थिक सहयोग त निम्नमध्यम वर्गका मैले नै चिनेका कैयौँ व्यक्तिले गरिरहेका छन्। त्यति बेला उनलाई राजा वीरेन्द्रको सम्पत्तिबाट कल्याणकारी 'ट्रस्ट' स्थापना गर्न व्यापक रूपमा सुझाइएको थियो। तर, उनी व्यक्तिगत लालसाबाट माथि उठ्नै सकेनन्। त्यस्तो परिस्थितिमा राजा हुनुको महत्त्व बुझ्नै सकेनन्। उनी राजाबाट हटिसकेपछि पनि मैले *नागरिक* दैनिकमा लेखेको *पूर्वराजालाई खुला*

*पत्र* (२०६६ भदौ ३१) मा लोककल्याणमा बाँकी जीवन अर्पण गर्नुमै उनको हित छ भन्ने सुझाएको थिएँ। तर विडम्बनाको कुरा, मौका पाउनेबित्तिकै "नेपाली जनताको सेवा गर्न चाहन्छु" भन्न नचुक्ने पूर्वराजाले अहिलेसम्म जनताको साँच्चिकै सेवा हुने काम गर्दै गरेका छैनन् भने पनि हुन्छ। उनले बुझ्नुपर्‍यो, उनी जस्तो पृष्ठभूमिको व्यक्तिबाट मठमन्दिरमा पूजा गरेर या मुखले बोलेर मात्र होइन, खल्ती नै खोलेर मात्र जनताको सेवा हुन सक्छ। खल्ती कसेर जिब्रोले आदर्श बक्नु उनका लागि शोभायमान हुँदैन।

हिमानी ट्रस्टको घोषणा गरेर राजतन्त्र कायमै रहँदा थालिनुपर्ने शुभकार्य पूर्वयुवराज्ञी हिमानीबाट ढिलै भए पनि थालनी भएको छ, जुन सराहनीय छ। तर, अहिलेसम्मको हकमा हिमानीका परोपकारी कार्यबारे कामभन्दा कुरा धेरै भएका छन्। उदाहरणका लागि, आफ्नो जन्मदिनमा उनी पशुपति या अन्य कहीँ गएर असहायहरूलाई खानेकुरा र कम्बल-सम्बल वितरण

गर्छिन् अनि खूब दङ्ग पर्छिन्। सञ्चार माध्यमहरूले प्रमुखताका साथ त्यसलाई प्रकाशन र प्रसारण गर्छन्। तर वास्तविकता के हो भने, उनले जे गर्दै आएकी छन् त्यो त कैयौँ सामान्य नेपालीले गर्दै आएको काम हो। उनी जस्ता व्यक्तिबाट हुने काम त्योभन्दा ठूलो स्तरको हुनुपर्छ। आफ्ना ससुराको जस्तो काम सानो अनि 'जनताको सेवा' र 'जनताको आँसु' का कुरा ठूला गर्ने बानी उनले नसिक्दा राम्रो। भविष्यमा हिमानी ट्रस्टबाट हुने गतिविधिलाई कामका आधारमा मूल्याङ्कन गरिनुपर्छ, उनको बोली र प्रचारात्मक खानेकुरा र कम्बल वितरणका आधारमा होइन। उनले ५० लाख रुपैयाँ राखेर ट्रस्टको शुरूआत गरेको बताएकी छन्। फेरि भन्नुपर्ने हुन्छ, उनको र ट्रस्टमा संलग्न अन्यको पृष्ठभूमि हेर्दा त्यति ठूलो तामझामका साथ घोषणा गरिएको ट्रस्टको राशि ५० लाख मात्र हुनु धेरै ठूलो कुरा होइन। तुलना गर्न खोजिएको होइन, तर उनको पृष्ठभूमिको व्यक्तिले गरीब र

दुःखीको आँसु पुछ्ने कुरा सार्वजनिक रूपमै उठाइसकेपछि, उनले उठाएको कदम पनि त्यही अनुरूपकै हुनुपर्छ। उनले आफ्नो ट्रस्टको उद्देश्य अत्यन्त फराकिलो राखेकी छन्। आउँदा दिनमा धेरै ठूलो रकम नजुटाउने हो भने ५० लाख रुपैयाँको ट्रस्ट स्थापना गरेर त्यसले शिक्षा, स्वास्थ्य, बालबालिका, वृद्धवृद्धा र युवा सबै क्षेत्रमा काम गर्न असम्भव हुनेछ।

हिमानी शाहले ट्रस्टलाई राजनीतिसँग नजोड्न आग्रह गरिन्। तर, उनी स्वयंले ट्रस्टको उद्‌घाटन समारोहमा पूर्वराजारानीलाई अझै पनि राजतन्त्र कायमै छ भन्ने अर्थ लाग्ने गरी 'श्री ५ महाराजाधिराज' र 'श्री ५ बडामहारानी' भनेर सम्बोधन गरिन्। त्यो पूर्णतः राजनीतिक सम्बोधन थियो। समाजसेवा नै गर्ने हो भने, त्यस्ता अनावश्यक राजनीतिक रङ्ग नदल्दा नै उनको हित हुनेछ। नेताहरूको खस्कँदो छविका कारण पूर्वराजा, हिमानी स्वयं र पूर्वयुवराज पारसको समेत स्वीकार्यता बढ्दै गएको देखिएको छ। तर, कुन

हदसम्म स्वीकार गर्ने भन्ने विषय पूर्वराजपरिवारले जनता र राजनीतिक दलहरूलाई नै छोडिदिनु उपयुक्त हुनेछ । विशुद्ध समाजसेवा गर्ने हो भने पूर्वराजपरिवारको छवि स्वत: सकारात्मक बन्दै जानेछ । यदि भोलि देशको स्थिति अत्यन्त प्रतिकूल हुँदै गयो भने, निश्चय पनि धेरैले पुन: राजतन्त्रको ओत खोज्नेछन् । तर, समाजसेवाको जाल हालेर धमिलो पानीबाट 'श्री ५ महाराजाधिराज' र 'श्री ५ बडामहारानी' लाई सतहमा लेराउन खोजेको हो भने हिमानी ट्रस्टले बृहत्तर सद्भाव बटुल्न सक्नेछैन । ट्रस्टको उद्घाटन समारोहमा पूर्वराजाले आफूलाई सिर्फ 'ज्ञानेन्द्र शाह' भनेर सम्बोधन गर्दा खुशी लाग्ने बताए । तर उनकै नाममा बाँडिएको विजयादशमीको शुभकामना कार्डमा उनको नाम 'ज्ञानेन्द्रवीरविक्रम शाहदेव' लेखिएको छ, जबकि गद्दीनशीन राजाबाहेक अरूका हकमा 'देव' लेखिँदैलेखिँदैन ।

माथि उल्लिखित सबै बुँदाप्रति ध्यानाकर्षण गराउनुको तात्पर्य के हो भने, नेपालको आन्तरिक र भूराजनीतिक

परिस्थितिका कारण नेपालले भोलि नराम्रै अनिष्टको सामना गर्नु नपर्ला भनेर ढुक्क हुन सक्ने स्थिति छँदै छैन । त्यसबारे विश्लेषक तथा राजनीतिज्ञहरूले बारम्बार चिन्ता व्यक्त गरिरहेकै छन् । साँच्चिकै त्यस्तो परिस्थिति आयो भने बलियो परम्परागत र सांस्कृतिक आधार भएको पूर्वराजसंस्था राष्ट्रका लागि अत्यन्त उपयोगी साबित हुन सक्छ । त्यसै भएर, पूर्वराजाप्रति जसलाई जति आक्रोश भए पनि, राजसंस्थाको अवधारणामै जसको जति विमति भए पनि र सो संस्थाका सबै सदस्य आम नागरिकसरह भैसकेका भए पनि, तिनको गतिविधि र तिनको छवि उच्च नै रहनु नेपाल र नेपालीका लागि हितकर हुनेछ । गणतन्त्र घोषणा हुनुपूर्वका केही वर्षमा राजा ज्ञानेन्द्रको छवि र विश्वसनीयतामा यति नराम्रो ह्रास आयो, त्यसको असर अझसम्म गैसकेको छैन । त्यसलाई सुधार गर्नमा हिमानी ट्रस्टले महत्त्वपूर्ण भूमिका निर्वाह गर्न सक्छ । तर, त्यसका लागि हिमानी शाहमा अत्यधिक

इमानदारीको खाँचो पर्नेछ र उनले बोलेर होइन, उल्लेख्य कामै गरेर देखाउनुपर्ने हुन्छ।

*नागरिक दैनिक, २०६७ असोज २७*

# साम्यवादी र पूँजीपतिका कुरा

२०६७ कात्तिक २८ गते मेरा आलेखहरूको सङ्ग्रह *भूमध्यरेखा : अर्थहीनताभित्र अर्थ खोज्दा*को विमोचन समारोहमा म दुई व्यक्तित्व साम्यवादी नेता डा. बाबुराम भट्टराई र पूँजीपति व्यापारी डा. उपेन्द्र महतोका बीचमा बसेको थिएँ। मेरो पत्रकारितागत लेखनका मूल धारहरू राजनीति र कल्याण रहेका छन्। राजनीतिमा मैले खुला पत्र लेखेको र खुला पत्रकै रूपमा त्यसको जवाफ दिएका व्यक्ति भट्टराई थिए भने कल्याणको क्षेत्रमा मैले खुला पत्र लेखेको र खुला पत्रकै रूपमा त्यसको जवाफ दिएका व्यक्ति महतो थिए। त्यसैले, मेरो पत्रको जवाफ पनि दिने अनि राजनीति र कल्याणलाई प्रतिनिधित्व पनि गर्ने उनीहरू दुवै जनालाई मैले आफ्नो पुस्तक विमोचनका लागि आग्रह गरेको थिएँ। उनीहरू दुवैप्रति मेरो ठूलो

श्रद्धा पनि छ। विमोचनका क्रममा झन्डै डेढ घण्टा उनीहरूसँग बस्दा मेरो मनमा केही धारणा तरङ्गित भैरहेका थिए। हाम्रा बहुरूपी साम्यवादी नेताहरूले परिस्थिति अनुसार साम्यवादलाई जसरी अर्थ्याए पनि वास्तविक सार के हो भने, साम्यवादमा 'नाफा' व्यक्तिको होइन राज्यको हुन्छ। मेरो दाहिनेपट्टि सोही आस्थाका अनुयायी भट्टराई बसेका थिए, जसले आफ्नो भएको अलिकति सम्पत्ति पनि पार्टीलाई बुझाइसकेका छन्। अनि मेरो देब्रेपट्टि महतो बसेका थिए, जो यो संसारमा भट्टराईको आस्था अनुरूपको राज्य व्यवस्था हुने हो भने आजको महतो बन्नै सक्ने थिएनन्। उनी सर्लाहीको एउटा गाउँको सामान्य परिवारबाट उठेर बहुराष्ट्रिय अर्बपति बनेका छन्। 'नाफा' राज्यको होइन, व्यक्तिको हुनुपर्छ भन्ने पूँजीवादी मान्यताका कारण उनी अर्बपति बनेका हुन्। समाजलाई न्यायपूर्ण र शान्तिपूर्ण बनाउन ती दुवैको उपस्थिति जरूरी छ। तर ती दुवैमा एउटा-एउटा यस्ता भयानक कमजोरी

रहेछन्, जसका कारण समाज न्यायपूर्ण र शान्तिपूर्ण हुनमा ठूलो बाधा पुग्दो रहेछ। समाजवादी र कल्याणकारी सरकार भएको देशमा त्यस्तो कमजोरीलाई ठूलो हदसम्म राज्यले न्यूनीकरण गरिदिन्छ; तर अन्य समाजमा ती कमजोरीका घातक असरहरू पर्ने गरेका छन्।

साम्यवादीहरू वर्तमानको ख्याल नगरी भविष्यलाई र पूँजीवादीहरू भविष्यको ख्याल नगरी वर्तमानलाई हेर्दा रहेछन्। साम्यवादीहरूलाई साम्यवादी भविष्यको र पूँजीवादीहरूलाई नाफामूलक वर्तमानको मात्र चिन्ता हुँदो रहेछ। साम्यवादीहरू सुन्दर भविष्यको आशामा वर्तमानलाई ध्वस्त पार्न पछि पर्दैन रहेछन् भने, पूँजीवादीहरू समृद्ध वर्तमानको आशामा भविष्यलाई ध्वस्त पार्न नहिचकिचाउने रहेछन्। यसरी सुन्दर समाज निर्माणमा विशिष्ट योगदान पुऱ्याउन सक्ने दुई प्रमुख वर्गमा एउटाले वर्तमानमाथि र अर्कोले भविष्यमाथि घात गर्दा रहेछन्। त्यसैको परिणाम हो, संसारमा

वर्तमान र भविष्यप्रतिको निराशा बढ्दो छ।

हाम्रा माओवादी मित्रहरूलाई वर्तमान बनाउने रहर, चासो, चिन्ता कहिले पनि भएन। उनीहरू 'आफ्नो क्षमता अनुसार दिने र आवश्यकता अनुसार लिने' भविष्यको त्यो काल्पनिक स्वर्गको निर्माणका लागि बडो प्रतिबद्धताका साथ लडेका लड्यै छन्। मान्छे भनेको प्रकृतिको अंश हो। प्रकृतिको नियम अनुसार १२ घण्टा उज्यालो भयो भने १२ घण्टा अँध्यारो हुनैपर्छ। चौबीसै घण्टा उज्यालो हुनै सक्दैन। अँध्यारो र उज्यालोको अनुपातलाई विश्वका कैयौँ समाजवादी र कल्याणकारी राष्ट्रमा जस्तो न्यूनीकरण गर्न सकिन्छ। तर समस्या के छ भने, हाम्रा माओवादी साम्यवादीहरू प्रकृतिको त्यो नियमलाई भविष्यको कुनै विन्दुमा पूर्ण रूपले उल्टचाएर यो संसारमा चौबीसै घण्टा घाम लगाउन सकिन्छ भन्ने विश्वास गर्छन्। भविष्यमा त्यो प्राकृतिक निमय उल्टिन्छ भनेर उनीहरू वर्तमानलाई 'विशिष्ट सङ्घर्ष' को परिस्थिति ठान्छन्। उनीहरूको

दृष्टिमा पुरानो नभत्काईकन नयाँ निर्माण हुनै सक्दैन। त्यसैले भविष्य निर्माणका लागि विशिष्ट सङ्घर्षको अवस्थामा वर्तमानलाई चिराचिरा पारे हुन्छ; मान्छेले मान्छेको घाँटी रेटे हुन्छ; संसद्मा अर्थमन्त्रीलाई लछारपछार पारे हुन्छ; सामाजिक सद्भाव र सहअस्तित्वलाई विखण्डित तुल्याइदिए हुन्छ। सारांशमा भन्नुपर्दा, उज्ज्वल भविष्यको सैद्धान्तिक लक्ष्यका लागि वर्तमानलाई ध्वस्त पारिदिए हुन्छ। त्यही आस्था र त्यही विश्वासका कारण हाम्रा माओवादी नेताहरू लडेका लड्यै छन्। प्रचण्ड र डा. बाबुराम भट्टराई चौबीसै घण्टा घाम लाग्ने त्यो काल्पनिक भविष्यका लागि गत ३०-३५ वर्षदेखि लडिरहेछन्। बिचरा कामरेड मोहन वैद्य त त्यसरी लडेको ५० वर्षै भैसक्यो होला। तर उनीहरूले इतिहासको अविच्छिन्न गतिले निर्माण गरेको वर्तमानको जगलाई यसरी खलबल्याइसके, अब उनीहरूको राज भयो भने पनि उनीहरूले आफूले चाहेको परिवर्तन आफ्नो जीवनकालमा देख्ने कुनै सम्भावनै छैन।

सैद्धान्तिक परिवर्तनका अमूर्त रेखाहरूबाटै सन्तुष्टि लिएर उनीहरूले मर्नुपर्ने निश्चितप्राय: छ। उनीहरू भन्लान्, क्रान्ति भनेको निरन्तरको प्रक्रिया हो, हामीले बालेको क्रान्तिको ज्योतिलाई भावी पुस्ताले अगाडि बढाउनेछ भनेर। तर, त्यो वर्तमान बनाउन नसक्नेहरूले आफ्नो असफलतालाई ढाक्न गर्ने सैद्धान्तिक तर्क मात्र हो। वर्तमान बनायो भने भविष्य आफैँ बन्छ। जसले वर्तमान बनाउन जान्दैन, त्यसले कुनै पनि हालतमा भविष्य निर्माण गर्न सक्दैन। वर्तमानको सौन्दर्यलाई भस्म बनाएर अनिश्चित भविष्यको रेखाचित्र मात्र कोर्ने हो भने त भन्नैपर्ने हुन्छ, ३०-३५ वर्ष क्रान्तिको नाममा लडी मात्र रहेका वरिष्ठ माओवादी नेताहरूको जीवनभन्दा १० वर्षमै देशका २० हजार गरीब बालबालिकालाई सस्तो र स्तरीय शिक्षा दिने समाजसेवी उत्तम सन्जेलको जीवन कैयौँ गुणा बढी सार्थक र सुन्दर लाग्छ। राजनीतिको चरित्रका कारण, राजनीतिज्ञहरूले ठूलठूला कुरा गर्न मञ्च पाउलान्;

ठूलठूला मानिसहरूसँग अन्तरक्रिया गर्लान् र आम सर्वसाधारणले राजनीतिज्ञहरूलाई बढी चिन्लान्; सञ्चार माध्यमहरूमा उनीहरू सधैँ छाउलान् । तर ठोस उपलब्धिलाई हेर्ने हो भने, वर्तमान भस्म पार्ने नेताहरूलाई भविष्यप्रति आशावादी हुँदै आभार प्रकट गर्नुपर्ने खासै कारण देखिँदैन ।

यी त भए साम्यवादीका कुरा । तर मेरो देब्रेपट्टि थिए अति धनाढ्य पूँजीपति डा. उपेन्द्र महतो । महतो नेपालका लागि धन र मनका दुर्लभ सङ्गम हुन्, जसले बढ्दो रूपमा आफ्नो धन सामाजिक हितमा खर्च गर्न थालेका छन् । उनको व्यक्तिगत राजनीतिक मान्यता जेसुकै भए पनि उनी पूँजीवादका एउटा प्रतीक पनि हुन्, जो सोही आर्थिक अवधारणाको परिणामस्वरूप पूँजीपति बनेका हुन् । जसरी समानता र न्यायका लागि वकालत गर्ने साम्यवादीहरू समाजका लागि अत्यावश्यक छन्, त्यसै गरी समाजको समृद्धिका लागि पूँजीपतिहरू नभै हुँदैन । तर समस्या कहाँनिर

सृजना हुन्छ भने, जसरी साम्यवादीहरू वर्तमानभन्दा बढी भविष्यमुखी हुने गर्छन्, त्यसै गरी पूँजीपतिहरू भविष्यभन्दा बढी वर्तमानमुखी हुने गर्छन् । वर्तमानको नाफाको लालसाले पूँजीपतिहरूको भविष्यको आँखा बन्द गरिदिएको हुन्छ । सानो उदाहरण दिऊँ, राजधानी काठमान्डुले सवारीको चाप धान्नै नसक्ने स्थिति बनिसकेको छ । तर, सवारी साधनका धनाढ्य व्यापारीहरूलाई त्यसको कत्ति पनि फिक्री छैन । भोलि १० मिनेटको बाटोमा उनीहरू नै दुई घण्टा सवारी जाममा फस्नेछन्; भोलि काठमान्डुको वायु प्रदूषणले उनीहरू र उनीहरूकै परिवारको पनि स्वास्थ्य बिग्रनेछ । तर नाफाको लालसाले उनीहरूलाई यसरी गाँजेको छ, उनीहरू सरकारलाई सार्वजनिक सवारीलाई चुस्त बनाएर निजी सवारी साधनको चापलाई कम गर्नुपर्छ भन्दैभन्दैनन् । किनभने, त्यसो गर्दा उनीहरूको व्यापारमा नकारात्मक असर पर्छ । तिनलाई वर्तमानमा पैसा कमाए पुग्यो; भविष्यको कुनै ख्यालै छैन । पूँजीवादीहरूको

त्यही प्रवृत्तिले गर्दा उनीहरू आफैँ हिँड्नुपर्ने बाटोमा खाल्डैखाल्डा परेका छन् भने आफैँ बाँच्नुपर्ने यो धरती वातावरणीय विनाशका कारण धुजाधुजा परेर गैरहेको छ। अहिले नै नपाएका भए पनि भविष्यमा तिनकै सन्तानले दुःख पाउने निश्चित छ।

त्यति मात्र होइन, उनीहरूको अधिक पूँजीमोहका कारण यो समाज र संसार भावी पुस्ताका लागि बढ्दो रूपमा असुरक्षित र अन्यायपूर्ण बन्दै छ। सक्नेले जति पनि कमाउने स्वतन्त्रता पाउनुपर्छ भन्ने पूँजीवादीहरूको मान्यता हो। तर, सक्नेले कमाएको सबै आफैँ राख्न पाउने व्यवस्था कालान्तरमा समाजका लागि हितकर हुँदैन भन्ने तथ्य बढ्दो रूपमा उजागर हुँदै गैरहेको छ। अफ्रिकाका कैयौँ ठाउँमा खान नपाएर अस्थिपञ्जर मात्र बाँकी भई लडिरहेका आमा र बालबालिकाका मुखमा भनभन झिँगा भन्किरहँदा, स्वतन्त्रताको नाममा कुनै व्यक्ति विरलै प्रयोगमा आउने कैयौँ महल, जेट विमान र पानीजहाजको

मालिक हुनको औचित्य दर्शाउन मिल्छ कि मिल्दैन ? संसारको ५० प्रतिशत सम्पत्तिमाथि संसारका केवल एक प्रतिशत धनाढ्यको नियन्त्रण रहनु र संसारको तल्लो तप्काका ५० प्रतिशत मानिसको हातमा केवल दुई प्रतिशत सम्पत्ति मात्र रहनु मानव सभ्यता र भावी पुस्ताका लागि शुभ सङ्केत हो कि होइन ? यी कुनै मनगढन्ते तथ्याङ्क होइनन्। यी वैज्ञानिक रूपमा गरिएका अध्ययन र अनुसन्धानका नतिजा हुन्। यस्तो स्थितिमा पूँजीपतिहरूले भविष्यबारे सोच्ने कि नसोच्ने ?

डेढ घण्टासम्म साम्यवाद र पूँजीवादका दुई प्रतिनिधि पात्रका बीचमा बस्दा मलाई लागिरहेको थियो– साम्यवादीहरूले अलि बढी वर्तमानको र पूँजीवादीहरूले अलि बढी भविष्यको चिन्ता गरिदिने हो भने तिनको जीवन र यो संसार कति सार्थक र सुन्दर हुने थियो !

*नागरिक दैनिक, २०६७ मङ्सिर ८*

# विकास पर्यटन यात्रा

जनकपुर अञ्चलको रामेछाप विकासको दृष्टिले अत्यन्त पिछडिएको जिल्लामध्ये एक हो। केही समयअघि तामाकोशी सेवा समिति, मन्थली बचत तथा ऋण सहकारी, तामाकोशी अस्पताल तथा जगदीश घिमिरे प्रतिष्ठानको आयोजनामा २० भन्दा बढी साहित्यकार तथा पत्रकारको रामेछापको सदरमुकाम मन्थली तथा त्यसआसपासका क्षेत्रहरूको घुमफिरका अवसरमा जे देखियो, त्यसबाट दुइटा कुरा स्पष्ट भए। पहिलो, अलिकति पढेलेखेका, जानेबुझेका र पहुँच भएका व्यक्तिहरूले काठमान्डु बसे पनि आफ्नो जिल्लालाई नबिर्सिदिने हो भने तिनबाट सम्बन्धित जिल्लाले धेरै राम्रा कुरा पाउने रहेछ। र दोस्रो, समुदायहरू गुटबन्दीबाट उठेर कम से कम सुकार्यका लागि आपसमा मिलिदिने हो भने त्यसबाट प्रतिकूल

स्थितिमा पनि कैयौँ सकारात्मक काम सम्भव हुने रहेछन् । तर अफसोच, अधिकांशले आफ्नो सानो गाउँठाउँलाई बिर्सेर काठमान्डुमा कुर्लीकुर्ली सिङ्गो देशै बनाउने भाषण गर्छन् । तिनले न देश बनाउँछन्, न त आफ्नो गाउँ नै । अनि स्थानीय तहमा चाहिँ ईर्ष्या, व्यक्तिगत-राजनीतिक स्वार्थ र अहंका कारण धेरै स्थानीयवासी नै सुकार्यमा बाधा बनिरहेका हुन्छन् ।

नेपालका कतिपय क्षेत्रसँग तुलना गर्दा मन्थली खासै प्राकृतिक सौन्दर्य भएको स्थान होइन । तर, व्यक्तिगत र सामुदायिक अग्रसरतामा भएको दिगो विकासमा चासो राख्नेका लागि भने त्यो एउटा नमूना क्षेत्र हो, जसलाई सहयात्री पत्रकार कृष्णमुरारी भण्डारीले 'विकासको मन्थली मोडेल' को संज्ञा दिए । दुईदिने मन्थली बसाइको अन्त्यमा मानिसहरू प्राकृतिक, ऐतिहासिक, सांस्कृतिक सौन्दर्य हेरेर मात्र होइन, स्थानीय प्रयासबाट भएको विकासको सौन्दर्य हेरेर पनि त्यत्तिकै आनन्द लिन सक्दा रहेछन् र हर्षित हुँदा रहेछन् भन्ने प्रस्ट

भयो। तसर्थ, मन्थली यात्रालाई यो पङ्क्तिकारले पर्यटन वर्षका अवसरमा 'विकास पर्यटन यात्रा' को संज्ञा दिनु उचित सम्झिएको छ। सो यात्राका क्रममा मूल रूपमा तीन प्रकारका सेवाबाट भएका विकासका नमूना देख्न पाइयो।

## 'सामन्तीको छोरा' को सेवा

बहुचर्चित पुस्तक *अन्तर्मनको यात्रा*मा जगदीश घिमिरेले लेखेका छन्, "मन्थलीको संसारमा म केवल सामन्तको सन्तान, माइला जिम्वालको छोरा 'साइँला जिम्वाल' थिएँ।" मन्थलीमा जतातते घिमिरेको बयान सुनेपछि, मैले कुराकानी गरेका केही स्थानीयवासीमध्ये एक जनाले भने, "उनका आलोचक हुँदै नभएका त होइनन्, तर समग्रमा उनी सबै पक्षका व्यक्ति भएका छन्।"

मैले हत्तपत्त सोधेँ, "आलोचकहरू के भन्छन्?"

ती स्थानीयवासीले भने, “सामन्तीको छोरा भन्छन्।”

मैले भनें, “जगदीशजीका बुवा सामन्ती थिए या थिएनन् मलाई थाहा हुने कुरा भएन। तर, सबै सामन्ती भनिएकाहरूका छोराछोरीले आफू जन्मिएको ठाउँप्रति यत्तिकै स्नेह र आस्था राख्ने हो भने त देश बनाउन धेरै सजिलो हुने थियो नि, होइन र ?”

ती स्थानीयवासीले भने, “हो, पक्का हो। धेरै छन् रामेछापका सफल मान्छेहरू काठमान्डुमा; तर तिनले रामेछापलाई कहिले सम्झिएनन्। जगदीश घिमिरे अरूका लागि बाँचे; त्यो ठूलो कुरा हो र उनले रामेछापको विकासको प्रयासलाई कहिले मागिखाने भाँडो बनाएनन्।”

अर्का एक जनाले जगदीश घिमिरे काङ्ग्रेसी भएकामा असन्तुष्टि जनाए। तर, सँगै बसेका अर्का स्थानीय युवाले भने, “जगदीश घिमिरेको आस्था नेपाली काङ्ग्रेसमा होला; तर उनले आफ्नो आस्थाको साँगुरो घेरामा बसेर टिकट र पदको राजनीति त गरेका छैनन् नि

!”

जगदीश घिमिरेले २०४१ सालमै बेलायतमा राम्रो अन्तर्राष्ट्रिय जागिर पाएका थिए। तर बेलायतको बासमा ‘जीवनको कुनै बृहत्तर लक्ष्य’ नदेखेर र ‘त्यहाँ काम गर्नुको सम्पूर्ण लक्ष्य खालि पैसा कमाउनु, खानु, पिउनु, मोज गर्नु मात्र हो’ भन्ने ठानेर ‘मुखमुखमा आएको बेलायती बसाइँसराइको कानूनी सम्भावना लत्याएर’ उनी दुई वर्षपछि नै नेपाल फर्किएका थिए। त्यसको चार वर्षपछि काठमान्डुमा भएको अन्तर्राष्ट्रिय जागिर पनि छोडेर उनी रामेछापको सामुदायिक विकासको काममा समर्पित भएका थिए। बाँच्नका लागि उनको आफ्नो केही पैतृक सम्पत्ति थियो र उनी विभिन्न अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाका लागि ‘कन्सल्टेन्सी’ गर्थे। उनी र उनकी श्रीमती दुर्गा घिमिरेले मन्थलीका बासिन्दासँग मिलेर स्थापना गरेको तामाकोशी सेवा समिति (तासेस) ले रामेछापको सामुदायिक विकासमा गरेको कामका लागि अनेकौं

राष्ट्रिय र अन्तर्राष्ट्रिय पुरस्कार प्राप्त गरेको छ। तासेसको अग्रसरतामा जिल्लाका २० गाविसमा झन्डै ६० वटा बचत तथा ऋण सहकारी संस्था सञ्चालित छन्। तासेस र मन्थली बचत तथा ऋण सहकारी संस्थाको अग्रसरतामा मन्थलीमा सफा, सुलभ र सस्तो १५ शय्याको सामुदायिक अस्पताल सञ्चालित छ। त्यसै गरी प्राकृतिक पानी दुर्लभ मानिने रामेछापमा तासेसकै नेतृत्वमा एक सय ७५ वटाभन्दा बढी खानेपानी आयोजना र झन्डै एक सय वटा साना र मझौला सिँचाइ आयोजना सम्पन्न भएका छन्। मन्थली र आसपासका क्षेत्रमा जताततै वर्षाको पानी सङ्कलन केन्द्रहरू देख्न सकिन्छ। त्यसै गरी जिल्लामा २० हजार पानीबन्ध शौचालयको निर्माण भएको छ भने, कृषि र शिक्षाका क्षेत्रमा पनि तासेसले त्यत्तिकै उदाहरणीय कामहरू गरेको छ।

स्थानीयवासीलाई विकासका काममा व्यक्तिगत स्वार्थभन्दा माथि उठेर निरन्तर रूपमा सक्रिय रहन प्रेरित गर्नु

तासेसको सम्भवत: सबभन्दा सबल पक्ष हो। मन्थली उच्च माध्यमिक विद्यालयमा जाँदा थाहा भयो, सो विद्यालयमा बन्द-हडताल गर्न माहिर अखिल क्रान्तिकारीको युनियन भए पनि त्यहाँ कहिले बन्द-हडताल नगर्न सबै पक्षले सहमति गरेका रहेछन्। सो विद्यालय हामीसँगै गएका एक व्यवसायी सुहृद घिमिरेका बुवाले २०१२ सालमा स्थापना गरेका रहेछन्। घिमिरेले सो विद्यालयलाई विज्ञान प्रयोगशाला निर्माणका लागि पाँच लाख र आफू बाँचुन्जेल खेलकुदका लागि वर्षमा एक लाख रुपैयाँ प्रदान गर्ने घोषणा गरे। यो पङ्क्तिकारलाई लाग्यो– जिल्लाजिल्लाबाट आएका र काठमान्डुमा सम्पन्न भएर बसेका सबैले यसै गरी आआफ्ना गाउँलाई ससाना सहयोग गरिदिने हो भने पनि त्यसले कति ठूलो अन्तर पार्ने थियो! तर, काठमान्डुको दुर्गन्धमा पसेपछि अधिकांशको चेतना पनि दुर्गन्धित हुँदो रहेछ।

## गरीबको सेवा

मन्थली बसाइकै क्रममा त्यहाँका एक साहित्यकार, कतिपय पुस्तकका लेखक माधवप्रसाद उपाध्याय 'सयपत्री' सँग भेट भयो। पाँच वर्षको उमेरमा बुवा बितेपछि काठमान्डुमा बाल श्रमिकका रूपमा कुनै कोइरालाको घरमा काम गर्न बस्दा भाँडा माझ्नुका साथै 'मालिक्नी' को रजस्वला भएको पेटीकोट धोएको र कैयौँ पटक निकृष्ट व्यवहार सहेको कथा उनले सुनाए। तैपनि उनी सो परिवारप्रति आफूलाई एसएलसीसम्म पढाइदिएकामा अनुगृहीत थिए। उनले प्रथम श्रेणीमा एसएलसी पास गरे पनि त्यसपछि आर्थिक कारणले पढ्न सक्ने स्थिति नरहेपछि उनी रामेछाप फर्किएछन् र एउटा विद्यालयमा पढाउन थालेछन्। पढाउँदापढाउँदै उनले नेपालीमा स्नातक गरेछन् र विभिन्न सामाजिक काममा जुटेछन्। यो पङ्क्तिकारलाई तीमध्येको उनको सबभन्दा उदाहरणीय काम 'पुस्तक उपहार अभियान' लाग्यो। उनले २०५५ सालदेखि थाल, कचौरा,

खड्कुलो, गाग्रीको साटो पुस्तक उपहार दिन थालेछन्। २०६७ सालदेखि सो अभियानलाई एक कदमअगाडि बढाएर उनले दशैं लगायतका चाडपर्वमा पनि पुस्तक नै दक्षिणा दिन थालेछन्। २०६६ सालमा उनले केही शिक्षक साथीकै सहयोगमा तीन वटा विद्यालय र समुदायलाई पायक पर्ने गरी आफूले २०४२ सालदेखि किनेका सबै पुस्तक दिएर एउटा पुस्तकालय स्थापना गरेछन्। सो पुस्तकालयलाई अहिले एसिया फाउन्डेसनले लाखौं रुपैयाँका पुस्तक किनिदिएको रहेछ। उनी *राजधानी* दैनिकमा छापिएको आफ्नो लेखमा लेख्छन्, "यो मेरो एक किसिमको आन्दोलन भने पनि हुन्छ। यसलाई राम्रो मान्नेले अनुसरण गर्लान्; नमान्नेले कुरा काट्लान्। मेरो अनुरोध/आग्रह छ, पढेलेखेका शिक्षकहरू राजनीतिलाई केन्द्रमा राखेर चाकरीको जागिर खानुभन्दा पुस्तकको संसारमा रमाऔं। पुस्तक पढौं। पुस्तक लेखौं। पुस्तक बोकौं। पुस्तक किनौं। हाम्रा एकएक क्रियाकलापको अवलोकन साना नानीहरूले गरिरहेका

हुन्छन् । हामीले जे गर्छौं, उनीहरूले त्यही सिक्छन् ।”

आफ्नो प्रेरणादायी कथा सुनाएपछि उपाध्यायले भने, “रजस्वला भएको पेटीकोट धुनुपरेकोमा चाहिँ मलाई अझै पनि पीडा हुन्छ ।”

मैले भनेँ, “पीडा त जसले धुन लगायो उसलाई हुनुपर्छ । तपाईंले त आफ्नो श्रम बेचेर पेट पाल्नुभयो र पनि यति धेरै उपलब्धि हासिल गर्नुभयो । त्यसमा त तपाईंले गर्व गर्नुपर्छ ।”

मैले त्यसो भन्दा उनी मुसुक्क हाँसे । मैले सोचेँ, यो देशलाई उनी जस्ता नागरिकहरूको ठूलो खाँचो छ ।

**पेशाकर्मीको सेवा**

मन्थलीमै अर्का साहित्यकार भेटिए, डाक्टर सुमन कर्माचार्य । उनी पनि गजबका मान्छे रहेछन् । ४६ वर्षीय कर्माचार्य एक दशकभन्दा बढी समयदेखि तामाकोशी सहकारी अस्पतालमा चिकित्सकका रूपमा

निरन्तर काम गरिरहेका छन् । उनी दङ्ग छन् आफ्नो जन्मथलोको सेवा गर्न पाएकामा ।

"तपाईं कसरी यति लामो समय यहीँ बस्नुभयो ? तपाईंलाई पनि काठमान्डु जाने, बढी पैसा कमाउने रहर भएन ?" भनेर सोध्दा, उनले भने, "जगदीश घिमिरेजीकै प्रेरणा होला । उहाँले नै मलाई एमबीबीएस पढ्दै यहाँ आएर काम गर्न प्रेरित गर्नुभएको थियो ।"

कर्माचार्य आफ्नो कवितासङ्ग्रह *आत्माहरू बुद्ध भए*मा लेख्छन्, "आदर्श र व्यवहारको तादात्म्य नभएको आदर्शको खास अर्थ रहँदैन ।" आफ्नो जन्मथलोलाई स्थायी कर्मथलो बनाएर, धेरै ठूलो आर्थिक महत्त्वाकाङ्क्षा नराखेर सम्भवत: उनले त्यही तादात्म्य खोज्ने प्रयास गरिरहेका छन् । केही दिनअघि मात्र राष्ट्रपति रामवरण यादवले समता शिक्षा निकेतनमा गएर विद्यार्थीहरूलाई 'ठूलोभन्दा पनि असल मान्छे' बन्न प्रेरित गर्दा उनको मनमा सायद कर्माचार्य जस्तै व्यक्तिहरू थिए होलान् ।

मन्थली भ्रमणकै क्रममा सिर्फ एक रोपनी जग्गामा

अनारको खेती गरेर आफ्ना तीन छोराछोरीलाई पढाउन सक्षम 'अनारबाजे' जस्ता कृषक, विकासका कामहरूको निःस्वार्थ संयोजन र नेतृत्व गर्ने ध्रुवकुमार सुवेदी र गुञ्जबहादुर श्रेष्ठ जस्ता समाजसेवीहरूसँग पनि प्रेरणादायी भेटहरू भए भने विद्यालयलाई अलिअलि होइन, ५५ रोपनी जग्गा दान गर्ने हरिशङ्कर घिमिरेबारे पनि सुनियो। काठमान्डु फर्किंदा बाटोभरि लागिरह्यो– विदेशमा बस्ने, स्वदेशमा बस्ने सबै नेपालीले सिङ्गो देशै बनाउनेभन्दा आफ्नो जिल्ला मात्र बनाउने प्रयास गरिदिए भने पनि यो देश कति सुन्दर हुन्थ्यो होला !

*नागरिक दैनिक, २०६७ माघ ५*

# को हुन् 'सिलेब्रटी' ?

२०६७ फागुन २३ गतेको *नागरिक* दैनिकको अन्तिम पृष्ठमा मदनकृष्ण श्रेष्ठ र हरिवंश आचार्य (मह जोडी) ले स्वर्गीय नेता कृष्णप्रसाद भट्टराईलाई भावपूर्ण श्रद्धाञ्जली अर्पण गरिरहेको फोटो छापिएको थियो। सँगै बसिरहेकी मेरी श्रीमतीले त्यो फोटो हेरेर भनिन्, "नेपाली राजनीतिमा सर्वश्रद्धेय नेता भट्टराई मात्र हुन् भने नेपाली मनोरञ्जनको दुनियाँमा 'साँच्चिकै' सिलेब्रटी मह जोडी मात्र हुन्, हगि ?" भट्टराई र मह जोडी दुवैबारेको उनको टिप्पणीप्रति मेरो पूर्णत: सहमति थियो। भट्टराईको निधनपश्चात् उनीबारे प्रशस्त टिप्पणी भैसकेको र तिनले उनीबारे मेरा मनका धारणाहरू सबैजसो समेटिसकेकाले मेरो मस्तिष्कमा भट्टराईलाई लिएर गरिएको टिप्पणीले खासै तरङ्ग सृजना गरेन। तर, मह जोडीलाई 'सिलेब्रटी' भन्दा सो शब्दअगाडि

मेरी श्रीमतीले थपिदिएको विशेषणले भने 'सिलेब्रटी' लाई हामीले जुन ढङ्गबाट बुझिरहेका छौँ, त्यसबारे सोच्न मलाई बाध्य गरायो ।

शब्दकोशमा 'सिलेब्रटी' को अर्थ 'चर्चित, परिचित व्यक्ति' भनेर लेखिएको हुन्छ । सामान्य बुझाइमा टेलिभिजन, चलचित्र र कहिलेकाहीँ रेडियोमा, आआफ्नो प्रतिभाका कारण समाजमा, खास गरी युवाहरूमाऌ, परिचय स्थापित गरेका व्यक्तिहरूलाई 'सिलेब्रटी' भन्ने गरिन्छ । सामान्यतया 'सिलेब्रटी' लाई सकारात्मक रूपमा बुझ्ने गरिन्छ र उनीहरूलाई कैयौँ युवाले आदर्शका रूपमा पनि लिने गर्छन् । तर जुन अर्थमा 'सिलेब्रटी' लाई बुझिन्छ, त्यो आधारमा हामी जो-जसलाई 'सिलेब्रटी' भन्ने गर्छौं र जो-जसले आफूलाई 'सिलेब्रटी' ठान्ने गर्छन्, ती वास्तवमा 'सिलेब्रटी' हुन् कि होइनन् भन्ने प्रश्न उठाउनु अनुपयुक्त हुँदैन । आफूले अँगालेको पेशाकै कारण समाजमा आम परिचय स्थापित हुँदैमा कसैलाई 'सिलेब्रटी' भन्न

मिल्छ कि मिल्दैन? कुनै अत्यन्त प्रतिभाशाली समाजशास्त्री अथवा प्रशासक 'सिलेब्रटी' हुन नसक्ने, तर सार्वजनिक रूपमा जाँड-रक्सी र लागू औषध सेवन गर्ने तर राम्रो गीत गाउने, मोडलिङ गर्ने या चलचित्रमा अभिनय गर्ने व्यक्ति चाहिँ अन्तर्राष्ट्रिय 'सिलेब्रटी' हुन सक्ने स्थिति उचित हो या होइन? यी प्रश्नहरूको परिप्रेक्ष्यमा हेर्दा मेरी श्रीमतीले 'सिलेब्रटी' को अगाडि 'साँच्चिकै' थपेर अन्य 'सिलेब्रटी' कहलिएकाहरूको अवमूल्यन गर्न खोजेकी थिइनन्। तर, चलनचल्तीको भाषामा 'सिलेब्रटी' लाई जसरी बुझिन्छ, त्यसलाई उनको मस्तिष्कले स्वस्फूर्त र अत्यन्त तर्कपूर्ण रूपमा पुनर्परिभाषित भने गरिरहेको थियो।

कुनै शब्दलाई शब्दकोशले जसरी व्याख्या गर्‍यो या पश्चिमाहरूले जसरी बुझेका छन्, सबैले त्यसै गरी बुझ्नुपर्छ भन्ने जरूरी छैन र त्यसलाई पुनर्व्याख्या गर्न खोज्नु गल्ती हुँदैन। वास्तविक 'सिलेब्रटी' ती हुन्, जसले समाजको ठोस रूपान्तरणका लागि पेशागत

दायराभन्दा बाहिर गएर आफ्नो प्रतिभालाई प्रयोग गर्छन् । त्यसो नगर्नेहरू पेशाकर्मी मात्र हुन्, 'सिलेब्रटी' होइनन् । तर अफसोच, अफ्रिकामा भोकमरीमा मर्न आँटेका लाखौँ मानिसका लागि आफ्नो साङ्गीतिक प्रतिभा प्रयोग गरेर अर्बौं रुपैयाँ सङ्कलन गर्न सघाएका बब गेल्डोफभन्दा झन्डै-झन्डै नाङ्गिएर आधा नितम्ब देखाउँदै गीत गाउने सुन्दरी गायिका ब्रिट्नी स्प्यर्सको 'सिलेब्रटी' पहिचान बढी छ । बब गेल्डोफको नाम कति युवाहरूलाई थाहासम्म छैन होला ।

मदनकृष्ण श्रेष्ठ र हरिवंश आचार्य सबभन्दा मन पराइएका, सबभन्दा चर्चित र सबभन्दा प्रतिष्ठित थोरै नेपालीमध्येका एक जोडी हुन् । हरेक पल्ट मह जोडीलाई भेट्दा यो पङ्क्तिकारको मन श्रद्धाले त्यसै नतमस्तक हुने गर्छ । उनीहरू अत्यन्त सामान्य पृष्ठभूमिबाट आफ्नो प्रतिभा, निरन्तरको परिश्रम, इमानदारी र सकारात्मक सोचले माथि उठेका व्यक्तिहरू हुन् । तिनले आफ्नै लागि पैसा कमाउन उपयोगी हुन सक्ने

समयको महत्त्वपूर्ण अंश र बेलाबेलामा आफ्नो पैसा पनि निरन्तर रूपमा सत्कार्यका लागि खर्च गर्दै आएका छन्। उनीहरूको सबभन्दा ठूलो योगदान दोस्रो जनआन्दोलनको बेला देखियो, जति बेला उनीहरूले आन्दोलनमा घाइते भएकाहरूको उपचारका लागि सबभन्दा बढी चाप भएमध्येको काठमान्डु मोडल हस्पिटलमा 'जनआन्दोलन प्राथमिक उपचार कोष' स्थापना गरे। उनीहरूले व्यक्तिगत रूपमा दुई लाख रुपैयाँ राखेर शुरू गरेको उक्त कोषमा पछि उनीहरूको अपिलका कारण दुई करोड ५५ लाख रुपैयाँ जम्मा भयो र त्यसबाट पाँच हजारभन्दा बढी घाइते आन्दोलनकारीहरूको उपचार भयो। दलहरू आन्दोलनका लागि आह्वान चाहिँ गर्थे, तर घाइतेहरूको उपचारलाई भने वास्ता गर्दैनथे। मह जोडी आफूले स्थापना गरेको कोषका कारण सयौँ मानिस मर्नबाट जोगिएकामा र समयमै उपचार हुँदा हजारौँ मानिस दीर्घकालीन शारीरिक अशक्तताबाट बचेकामा असाध्य खुशी महशूस

गर्छन्। केही दिनअघि मात्र जनकपुरमा आयोजित एउटा कार्यक्रममा उनीहरूले मञ्चबाट जिस्कीजिस्की घोषणा गरे, "हामी धनी मान्छे त होइनौं; तर मिथिला नाट्य कला परिषद्ले रङ्गमञ्चको क्षेत्रमा असाध्य राम्रो काम गरेको छ र उसले आफ्नै भवन बनाउन चाहेको रहेछ; त्यसैले हामी पनि उक्त भवनको लागि एक लाख रुपैयाँ सहयोग गर्न चाहन्छौं।"

मह जोडीको मानवीय भावना बुझ्न अलिकति इतिहास कोट्याउनुपर्ने हुन्छ। एक दिन एउटा यात्राका क्रममा हरिवंश आचार्यले सिलसिलावश पुरानो घटना सुनाए। २२-२३ वर्षअगाडि उनीहरूले गुल्मीको रिडीमा एउटा कार्यक्रम गरेका रहेछन्, जसका लागि उनीहरूलाई ३५ सय रुपैयाँ पारिश्रमिक दिइएको रहेछ। त्यति बेलाको ३५ सय रुपैयाँलाई ठूलै रकम मान्नुपर्ने हुन्छ। कार्यक्रमको भोलिपल्ट मह जोडी बिहान मैदान बस्न गएछन्। एउटा ढुङ्गाको पल्लोपट्टि मैदान बसिरहेका अन्य दुई जना गफ गर्दै रहेछन्।

तीमध्येको एउटाले भनेछ, “हिजो मुर्दाहरू (मह जोडी) ले हँसाउन त खूब हँसाए, तर कार्यक्रम हेरेर घरबाट नून किन्न ल्याएको पैसै सकियो। अब के गर्ने होला !” आफ्नो एउटा कार्यक्रम हेर्दा एउटा परिवारले नूनसम्म किन्न नसक्ने स्थिति देखेर मह जोडीलाई दिक्क लागेछ र उनीहरूले ३५ सय रुपैयाँ त्यहीँ एउटा सत्कार्यका लागि चन्दा दिएर आएछन्। यो पङ्क्तिकारले उनीहरूको कल्याणकारी भावनालाई अलि बढी कोट्याउँदै जाँदा थाहा भयो, उनीहरूले एउटा कार्यक्रम गर्दा पाँच हजार रुपैयाँसम्म पारिश्रमिक पाउन थालेपछि ‘ओहो, यतिका पैसा हामी आफैँले मात्र प्रयोग गर्नु राम्रो हुँदैन’ भनेर एउटा खुत्रुके बनाएर अलिअलि पैसा त्यसमा जम्मा गर्न थालेछन्। र, २०४० सालतिर बन्दै गरेको नारायणी कला मन्दिरमा जाँदा त्यहाँ पर्दा राख्न रकम अपुग भएको थाहा पाएपछि उनीहरूले खुत्रुकेमा जम्मा भएको साढे सात हजार रुपैयाँमा अढाई हजार रुपैयाँ थपी १०

हजार रुपैयाँ पर्दा राख्न चन्दा दिएछन्। त्यो घटना सम्झँदै मदनकृष्ण श्रेष्ठले यो पङ्क्तिकारलाई एक पटक भने, “१० हजार रुपैयाँको पर्दा हालिदिँदा दशौँ लाखको आनन्द आयो।” निश्चय पनि २७-२८ वर्षअगाडि १० हजार रुपैयाँ भनेको सानो रकम थिएन र त्यति बेला मह जोडीको आर्थिक स्थिति पनि आजको जस्तो थिएन।

त्यति बेलादेखि नै लगातार रूपमा यस प्रकारका कल्याणकारी कामहरू गर्दै आएका उनीहरूले दुःखको बेला पत्रकार पदम ठकुराठीदेखि कवि मोहन कोइरालासम्मलाई सहयोग गरे। अन्य कैयौँ ठाउँमा सकेको आफैँले सहयोग गरेका छन्; नसकेको ठाउँमा आफ्नो परिचयलाई प्रयोग गरेर लाखौँलाख उठाउन मदत गरेका छन्। निर्धनहरूको विद्यालय, समता शिक्षा निकेतनका ‘पिता’ बनेर परेका बखत सारातिर दौडधूप गरेका छन्। त्यति त भयो-भयो, देशमा कानूनी शासनको स्थापना हुनुपर्छ, हिंसा अन्त्य हुनुपर्छ

भनेर उनीहरूले बेलाबखत श्रोता र दर्शकहरूलाई भावुक बनाउने गरी हाम्रा कतिपय नेताले भन्दा राम्रो भाषण पनि दिने गरेका छन्। हिमाल, पहाड र मधेशका बीचमा नेताहरूले जबरजस्ती पारिदिएको चिरामा उनीहरू मलम लगाउँछन् र खुशीको कुरा, हिमालदेखि मधेशसम्मका धेरै सर्वसाधारणले उनीहरूले भनेको सुन्छन् पनि। बाहुनवाद र नेवार-राजको कुरा उठिरहेको बेला नेवार र बाहुन मिलेर बनेको मह जोडी स्वयं पनि एकता, सहकार्य, सद्भाव र सहअस्तित्वको एउटा अद्वितीय उदाहरण हो।

तर, मानव मनोविज्ञान अचम्मको हुँदो रहेछ। त्यसले राजनीतिक आदर्श, इमानदारी, नैतिकता र दक्षता सबैका हकमा गिरिजाप्रसाद कोइरालाभन्दा सयौँ गुणा अगाडि रहेका कृष्णप्रसाद भट्टराईबीचको भिन्नता खुट्टयाउनै सक्दैन रहेछ। सक्दो हो त कोइरालाको शवयात्रामा धेरै कम र भट्टराईको शवयात्रामा धेरै बढी मानिसको उपस्थिति हुनुपर्ने थियो। तर, वास्तविकता

त्यसको विपरीत रह्यो। सर्वश्रद्धेय मह जोडी लाख-लाख वर्ष बाँचून्। तर, तिनले पनि एक दिन देहत्याग गर्नैपर्छ। यो पङ्क्तिकारलाई लागिरहेको के हो भने, के तिनले देहत्याग गर्दा श्रद्धाञ्जली अर्पण गर्न भट्टराईको शवयात्रामा निस्किएका जति पनि मानिसहरू सडकमा निस्किएलान्? शङ्कै छ। किनभने, हामीले जति नै आफूलाई जान्ने-सुन्ने सम्झिए पनि, असल र खराब, आदर्श र अनादर्श अनि समाजको निर्माण र विनिर्माणका कारकहरू के हुन् भन्ने आधारभूत प्रश्नहरूको उत्तरमै हामी अधिकांश चुक्ने गरेका छौँ। यो नेपालको मात्र होइन, सारा संसारकै समस्या हो। तसर्थ 'सिलेब्रटी' शब्दलाई हामीले जसरी बुझेका छौँ, त्यो त्रुटिपूर्ण हुनु त्यति आश्चर्यजनक विषय होइन। त्यो बुझाइलाई सुधार्ने हो भने मानिसहरूले मह जोडीलाई उदाहरण बनाएर सो शब्दको पुनर्परिभाषा गर्नुपर्ने हुन्छ।

*नागरिक दैनिक, २०६७ फागुन २५*

# जे सोच्छौँ, ठूलो सोचौँ

कृष्णप्रसाद भट्टराईको निधन भएपछि काठमान्डु उपत्यकाको दक्षिणपूर्वमा रहेको बाडेगाउँस्थित सरकारी स्वामित्वको उनको निवासलाई सङ्ग्रहालय तथा आध्यात्मिक चिन्तनस्थल बनाइने चर्चा चल्न थालेको छ। कृष्णप्रसाद भट्टराई प्रतिष्ठानले त्यसबारे छिटै बृहत् छलफल थालिने जनाएको छ। राम्रो कामको सपना देख्ने तर सोचाइको साँगुरो दायराबाट माथि उठ्न नसक्ने नेपालीहरूका पछिल्ला कैयौँ पुस्ताको चरित्रका कारण गज्जबको ऐतिहासिक र सांस्कृतिक इतिहास बोकेको नेपालले मल्लकाल र केही हदसम्म राणाकालयता त्यस्ता कुनै पनि स्थल या स्मारक निर्माण गर्न सकेको छैन। यस सन्दर्भमा भट्टराई अध्यात्म केन्द्रको सोच साह्रै सराहनीय भए पनि सो सोच कार्यान्वयन गर्नुअगाडि भट्टराई प्रतिष्ठान र

सरकारले केही आधारभूत विषयमा ध्यान दिनु जरूरी हुन्छ। ती विषयहरू हामीले गर्न खोज्ने दीर्घकालीन महत्त्वका अन्य कामका लागि पनि त्यत्तिकै सान्दर्भिक हुन सक्छन्।

सबभन्दा पहिले, हामीले आफ्नो सोचाइको दायरालाई ठूलो बनाउनु नितान्त आवश्यक भएको छ। बाध्यात्मक परिस्थितिमा बाहेक, हामी जे सोच्छौँ ठूलो सोचौँ; जे गर्छौं गज्जबले गरौँ र त्यसलाई अन्तर्राष्ट्रिय स्तरको बनाउने सपना बुनौँ। आफ्नो सोचाइलाई हामीले त्यसरी प्रशिक्षित नगरी भएको छैन। भट्टराई निवास जम्मा पाँच रोपनी क्षेत्रफलमा फैलिएको छ। त्यति क्षेत्रफलभित्र गाईगोठ, राधाकृष्ण मन्दिर, सहयोगी आवास, सङ्ग्रहालय, पुस्तकालय, पाहुना, प्राविधिक र सुरक्षाकर्मी घर सबै बनाउने सोचाइ राखिएको छ। कुनै धनी आध्यात्मिक व्यक्तिको निजी घर भैदिएको भए भिन्दै कुरा, त्यो सबै ठीक थियो। तर यहाँ त हामी ऐतिहासिक महत्त्वको केन्द्रको चर्चा गरिरहेका छौँ।

त्यस्तो ऐतिहासिक महत्त्वको केन्द्रका लागि सबभन्दा पहिले त्यसको परिसर सक्दो विशाल हुनुपर्छ। हाम्रो सोच कति साँगुरो छ भन्ने कुरा भूतपूर्व प्रधानमन्त्री माधवकुमार नेपालले काठमान्डुको केन्द्रमा अवस्थित साँगुरो रत्नपार्क क्षेत्रमा भव्य गणतन्त्रात्मक स्तम्भ बनाउने योजना गरेबाट प्रस्ट हुन्छ। सोचाइको दायरा नै साँगुरो भएपछि के लाग्छ ! त्यसैले, पाँच रोपनी जग्गामा गाईजात्रे ढङ्गको आध्यात्मिक केन्द्रको परिकल्पना गर्नुभन्दा पहिले, भट्टराई प्रतिष्ठान र सरकारले सो परिसरलाई सक्दो ठूलो क्षेत्रफलमा फैलाउने योजना गर्नु उपयुक्त हुन्छ। हामी नेपालीहरू यति सङ्कीर्ण भैसक्यौँ, बाटो बनाउनुपऱ्यो भने हाम्रो सोच हतपती १२ फुटभन्दा चौडा हुनै सक्दैन। हाम्रो सौन्दर्य चेतनामा यति ह्रास आइसक्यो, हामी मन्दिरलाई सुन्दर बनाउन त्यसमा ट्वाइलेटमा प्रयोग हुने टायल टाँस्न थालेका छौँ। अन्य कतिपय अवस्थामा मान्छे बस्ने घर वा ईश्वर बस्ने मन्दिर छुट्ट्याउन गाह्रो पर्ने

भैसकेको छ। आफूले घर बनाउनुपर्‍यो, कलाशून्य घरहरू निर्माण गर्छौं। हाम्रा पुर्खाहरूले काठमान्डुमा बनाएका मन्दिर र दरबार स्क्वायरहरू हेरौँ, ती यति खुला, राम्रा र कलात्मक बनाइदिएका छन् कि ती अहिले पनि मानवनिर्मित पर्यटन आकर्षणका एक मात्र केन्द्र हुन पुगेका छन्। अलि पैसा हुने राणाहरूले यस्ता राम्राराम्रा र विशाल घरहरू बनाए, ती अहिले पनि असाध्यै कलात्मक लाग्छन् र तिनले देशको प्रशासनिक केन्द्रका रूपमा काम गरिरहेका छन्। तिनले त्यति बेला बग्गी चलाउन बनाएको बाटोले अहिले पनि मूल रूपमा काठमान्डुको ट्र्याफिकलाई धानिरहेको छ। हामीलाई चाहिँ के भएको यस्तो! कुनै काममा विशालता छैन; कुनै काममा कलाको नामनिशान छैन। पैसा नभएर हामी यस्ता भएका होइनौँ। हाम्रो सोचाइको स्तर नै दिन-प्रतिदिन खुम्चिँदै गएको छ।

तसर्थ, भट्टराई अध्यात्म केन्द्र बनाउने हो भने, कलाविहीन गाईजात्रे मन्दिर, अव्यवस्थित सङ्ग्रहालय,

पुस्तकालय र हेरविचार नपुगेर हाड-छाला देखिने गाईहरू राखिने गोठ निर्माण गर्न हतारिनुभन्दा आजभन्दा दुई सय वर्षपछि पनि मानिसहरूले भ्रमण गर्ने एउटा केन्द्रका रूपमा विकास गर्ने उद्देश्यले योजना बनाउनु राम्रो हुन्छ। त्यसका लागि बाडेगाउँवासीले साथ नदिने प्रश्नै उठ्दैन। त्यो उनीहरूका लागि ठूलो प्रतिष्ठाको विषय हुनेछ। उनीहरूले भट्टराईलाई धेरै माया र सम्मान दिएर राखेका थिए। त्यसका लागि जजसले आफ्नो जग्गा गुमाउँछन्, तिनलाई चलनचल्तीको दरमा मुआब्जा दिनु उपयुक्त हुन्छ। समयमा बजेट लेराउन ढिलो गरेर अर्बौंको घाटा बेहोर्दा मतलब नगर्ने नेताहरूले वर्तमान नेपालका सम्भवत: एक मात्र सर्वश्रद्धेय नेताको सम्झनामा बनाउन लागिएको ऐतिहासिक महत्त्वको सो स्थलका लागि डेढ-दुई अर्ब रुपैयाँ खर्च गर्नु भनेको ठूलो कुरा नहुनुपर्ने हो। यस्ता काममा विदेशी दातालाई सहयोगका लागि अनुरोध गर्दा पनि लाज हुँदैन। अत्यन्त लामो समयदेखि हाम्रा सरकारहरूले

कुनै पनि विशिष्ट महत्त्वको धार्मिक, सामाजिक, पर्यटकीय स्थल या स्मारक बनाउन नसकिरहेको अवस्थामा प्रधानमन्त्री झलनाथ खनालका लागि इतिहास निर्माण गर्ने यो एउटा अवसर पनि हो। कृष्णप्रसाद भट्टराईप्रति मानिसहरूमा भएको आस्था र श्रद्धाका कारण यस्तो सोचलाई कार्यान्वयन गर्ने हो भने उनले प्रशस्त प्रशंसा पाउनेछन् र भट्टराई प्रतिष्ठानका सदस्यहरू पनि आम कृतज्ञताका पात्र हुनेछन्।

कठिन सुनिएला, तर हामीले यस्ता कामहरू गर्दा विशाल सोच नराखी भएकै छैन। *उद्देश्य के लिनु? उडी छुनु चन्द्र एक* भनेझैँ, चन्द्रमा छुने उद्देश्य राखे हामी छेउको पहाडसम्म छुन सकौँला; उद्देश्य नै छेउको पहाड छुने भएपछि, त्यहाँबाट पर फैलने त कुनै गुन्जायस नै रहँदैन। प्रधानमन्त्री खनाल तथा भट्टराई प्रतिष्ठानका कैयौँ सदस्यले राम्रै विदेश भ्रमण गरेका छन्। उनीहरूले विदेशमा देखेको हुनुपर्छ, विशाल सोच र पूर्वदृष्टि हुनेहरूले पैसा छैन भनेर

गाईजात्रे काम गर्दैनन्। तिनले बरु पैसा नभएसम्म कामै गर्दैनन्, तर जब काम गर्छन् त्यसको निश्चित स्तर हुन्छ। हामीकहाँ त इतिहास पुरुषका सालिकहरूसमेत यति गाईजात्रे ढङ्गबाट बनाएर गाईजात्रे तरीकाबाट राखिएका छन्, तिनको कतै, कुनै कलात्मक र पर्यटकीय महत्त्वै देखिँदैन। जबसम्म हाम्रो समष्टिगत सोच नै अत्यन्त साँगुरो रहन्छ, तबसम्म हामीले त्योभन्दा फैलिएर काम गर्न सक्दैसक्दैनौँ। त्यही साँगुरो घेराभित्र बसेर योजना बनाउँछौँ र त्यसै अनुरूप रकम खोज्छौँ। अनि केके नै गऱ्यौँ भनेर दङ्ग पर्छौं। यस्तो मानसिकतालाई तोड्ने हो भने हामीले दूरगामी महत्त्वका यस्ता आयोजनाहरूबारे जे सोच्छौँ त्यसलाई दूरदृष्टि राखेर विशाल, कलात्मक र ऐतिहासिक ढङ्गबाट सोच्ने संस्कार विकास गर्नु अत्यन्त जरूरी भएको छ।

तसर्थ, सबभन्दा पहिले भट्टराई परिसरलाई सक्दो विस्तार गर्न सकियो भने, भट्टराई स्वयं र भट्टराई

प्रतिष्ठानका सदस्यहरूको सपनाप्रति न्याय गरेको ठहरिनेछ। परिसर विस्तार भैसकेपछि, सयौँ वर्षयता नेपालमा बन्दै नबनेको स्तरको कलात्मकताले भरिपूर्ण राधाकृष्ण मन्दिर बनाऔँ; गाईगोठ बनाऔँ; कृष्णले पोखरीछेउ रूखमा बसेर गोपिनीहरूलाई फकाउन बाँसुरी बजाएको कथालाई बगैँचामा त्यस्तै पोखरी र परिवेशको निर्माण गरेर उतारौँ। पोखरीमा कमल फुलाऔँ; रजहाँसलाई नचाऔँ; आन्तरिक र बाह्य पर्यटकहरूलाई आकर्षण गर्न दिनमा दुई-चार घण्टा बाँसुरीवादक कृष्ण र गोपिनीहरूको लीला मञ्चन गरौँ र एक जना 'गाइड' राखेर अतिथिहरूलाई छोटकरीमा कृष्णलीला सुनाऔँ। गज्जबको सङ्ग्रहालय बनाऔँ; वरिपरि रूखहरू लगाएर जङ्गल बनाऔँ; गाई चराऔँ; चराचुरुङ्गी पालौँ। स्वदेशी र नेपाल आउने विदेशीहरूले कम से कम एकपल्ट भ्रमण नगरी नहुने एउटा केन्द्रका रूपमा त्यसलाई विकास गरौँ। पश्चिमा राष्ट्रका त्यस्ता केन्द्रहरूमा हुने अन्तर्राष्ट्रिय स्तरको सौन्दर्य,

स्वच्छता र व्यवस्थापनको परिकल्पना गरौँ। अनि, त्यहाँ भ्रमण गर्न आउनेहरूका लागि शुल्क लगाऔँ। नत्र, सधैँ स्वयम्भू र बौद्ध अनि उपत्यकाका दरबार स्क्वायरहरू देखाएर कति गर्व गरिरहने !

सम्बन्धित कतिपयले यसलाई 'हावादारी कुरा, कहाँ हुन्छ त्यस्तो, पैसा भएको भए हामीले जानेका थिएनौँ र" पनि भन्लान्। त्यस्तो सोच्ने हो भने हाम्रा पितापुर्खाले जे गरे, गरे। हामी अब तिनको स्तरमा कहिले पनि पुग्न सक्नेछैनौँ। होइन, प्रयास गरेपछि किन सकिँदैन, सकिन्छ भनेर सोच्ने हो भने, त्यति गर्न नसकिने कुरै छैन। मूल प्रश्न, बाह्रफुटे बाटोलाई ठूलो उपलब्धि ठान्ने सोच र मन्दिरमा ट्वाइलेटको टायल टाँस्ने स्तरबाट हामी माथि उठ्ने कि नउठ्ने भन्ने हो।

*नागरिक दैनिक, २०६७ चैत ८*

# हामीले यस्तो कहिले गर्ने ?

*लन्डन इभिनिङ स्ट्यान्डर्ड* लन्डनको सानो आकारको एउटा प्रमुख दैनिक हो। एक सय ८० वर्षसम्म सशुल्क रहेको सो दैनिकले सन् २००९ अक्टोबरदेखि निःशुल्क रूप धारण गरेको छ। सो पत्रिकाले सन् २०११ मा लन्डन प्रेस क्लबले प्रदान गर्दै आएको प्रतिष्ठित 'वर्षको उत्कृष्ट दैनिक समाचारपत्र' को उपाधि प्राप्त गऱ्यो। सो पत्रिका दैनिक रूपमा सात लाख प्रति निःशुल्क वितरण गरिन्छ र १५ लाख मानिसले नियमित रूपमा पढ्ने अनुमान गरिन्छ। सन् २०११ जुन ६ तारिख मैले बीबीसीको मुख्यालय रहेको बुश हाउसबाट नजिकैको ट्रेन स्टेसन हलबोर्न पुगेपछि पत्रिकावालाले हातमा थमाइदिएको *इभिनिङ स्ट्यान्डर्ड*को एक प्रति समाएँ र ट्रेनमा गएर बसेपछि पत्रिकाको पहिलो पृष्ठको समाचार पढ्ने तरखर गरेँ।

त्यो दिन सो पत्रिकाको पहिलो पृष्ठमा जे छापिएको थियो, त्यो पत्रकारिताका लागि अत्यन्त असामान्य तर यो पङ्क्तिकारले उपलब्धिमूलक पत्रकारिताका लागि अत्यन्त आवश्यक भन्दै बारम्बार उठाउँदै आएको विषयसँग सम्बन्धित थियो। पत्रिकाको अग्रपृष्ठको सम्पूर्ण स्थान प्रदान गरिएको उक्त सामग्री 'परोपकारी पत्रकारिता' को ज्वलन्त उदाहरण थियो। पढिरहेको बालकको फोटोसँगै पत्रिकाको दायाँदेखि बायाँसम्मै छापिएको शीर्षकमा लेखिएको थियो– 'निरक्षरताका विरुद्ध स्ट्यान्डर्डद्वारा अभियान शुरू : लन्डनलाई पढाऔँ'। त्यसको ठीक मुन्तिर दुइटा बुँदामा पाठकलाई प्रत्यक्ष आग्रह गर्दै लेखिएको थियो–

- हामी तपाईंलाई विद्यालयमा पढ्न सिकाउने स्वयंसेवीहरूका लागि चन्दा दिन अनुरोध गर्छौं।

- तपाईं आफैँ पनि स्वयंसेवी बनेर बालबालिकालाई सहयोग गर्न सक्नुहुन्छ।

त्यसपछि 'इभिनिङ स्ट्यान्डर्ड अभियान' को नामबाट लेखिएको अभियानमूलक समाचारको बेहोरा अलिकति लामो भए पनि, त्यसले यो आलेखको मूल भावलाई ठ्याक्कै समेट्ने हुनाले त्यसको पूर्णपाठ नै अनुवाद गर्नु उपयुक्त सम्झिएको छु।

*लन्डन इभिनिङ स्ट्यान्डर्ड* लन्डनलाई पढाउनका लागि आज एउटा अभूतपूर्व अभियान शुरू गर्छ– र, त्यसमा हामी तपाईंलाई सहयोग गर्न आग्रह गर्छौं।

हामी पढ्न कठिनाइ भोगिरहेका बालबालिकालाई पढ्न सहयोग पुऱ्याउन स्वयंसेवीहरूको खोजीमा छौं। हामी ती स्वयंसेवीहरूको खर्च बेहोर्न चन्दाका लागि पनि आग्रह गर्छौं।

गत हप्ता हामीले (लन्डनमा) हरेक तीन जनामा एक बालकसँग पुस्तक नभएको र काम गरेर जीविकोपार्जन गर्ने १० लाख वयस्क पढ्नै नसक्ने भएको तथ्य सार्वजनिक गरेका थियौँ।

यो हाम्रा बालबालिका र यो महान् शहरलाई हामीले दिएको धोका हो। निरक्षरताको यो अभिशापसँग जुध्न, हामी 'साक्षरता सहयोगका लागि स्वयंसेवी' नामको एउटा विशेष प्रकृतिको कल्याणकारी संस्थासँग सहकार्य गर्दै छौँ। सो कल्याणकारी संस्थाले सयौँ बालबालिकाको जीवन परिवर्तन गरिदिइसकेको छ।

सो संस्थाले पढ्न र लेख्न कठिनाइ भोगिरहेका विद्यालयका केटाकेटीलाई सहयोग पुऱ्याउन सर्वसाधारण वयस्कहरूलाई तालीम दिने असाधारण काम गर्छ। ती वयस्कहरूले सहयोग गरेका १० मध्ये नौ बालबालिकाको पढ्ने र लेख्ने क्षमतामा व्यापक सुधार भएको देखिएको छ। तर, सो संस्थालाई नयाँ स्वयंसेवीहरू र तिनलाई लाग्ने खर्चको आवश्यकता छ।

आज हामी नयाँ स्वयंसेवीहरूका लागि आवश्यक पर्ने खर्च जुटाउन चन्दाका लागि र स्वयंसेवी

बन्न चाहनेहरूलाई अगाडि आउन अपिल गरिरहेका छौँ । 'लन्डनलाई पढाऔँ' हाम्रो अभियान नि:सहायहरूको जीवनमा परिवर्तन लेराउन चाहन्छ ।

आजको हाम्रो आग्रह हाम्रो पुरस्कार-विजेता गरीबीविरुद्धको अर्को अभियानकै निरन्तरता हो । गत वर्ष हामीले चलाएको सो गरीबीविरुद्धको अभियानमा हामीले राजधानी लन्डनका अति विपन्नहरूको स्थितिलाई उजागर गरेका थियौँ र गरीबीविरुद्ध लडिरहेका कल्याणकारी समूहहरूका लागि लगभग ८५ करोड रुपैयाँ उठाएका थियौँ ।

परिवर्तनका लागि हामीलाई साथ दिनोस् । आजै स्वयंसेवी बन्नोस्; आजै चन्दा दिनोस्– र, जीवन बदलिदिनोस् ।

पत्रिकाको सो प्रयास त्यतिमा मात्र सीमित थिएन । सो अभियानमूलक समाचारको अन्त्यमा सो अभियानसँग सम्बन्धित अन्य सामग्री पृष्ठ २, ३, ४, ५, ६, ७ र १४ मा पढ्न आग्रह गरिएको थियो । ती थप

सामग्रीमा सो अभियानसँग सम्बन्धित विभिन्न तथ्य र विश्लेषण प्रस्तुत गरिएका थिए अनि सोही अभियानबारे सम्पादकीय पनि लेखिएको थियो।

यो आलेख *नागरिक* दैनिकलाई इमेल गर्नुअगाडिसम्मको एक हप्तामा सो अभियानका लागि पत्रिकाले झन्डै एक करोड रुपैयाँ सङ्कलन गरिसकेको थियो। सो अभियानलाई सघाउनेमा युवराज चार्ल्सकी पत्नी कमिला, भूतपूर्व प्रधानमन्त्री टनी ब्लेर, कैयौँ 'सिलेब्रटी', गुगल जस्ता केही ठूला कम्पनी र सयौँ सर्वसाधारण रहेका छन्। गत वर्ष गरीबी विरुद्धको अभियानमा *इभिनिङ स्ट्यान्डर्ड*ले लक्ष्य गरेभन्दा बढी रकम सङ्कलन गरेको थियो र त्यसका लागि सबभन्दा उपलब्धिमूलक अभियान चलाएकामा 'वर्षको अभियान' पुरस्कार पनि प्राप्त गरेको थियो।

यहाँ सो पत्रिकाको अग्रपृष्ठमा प्रकाशित सामग्रीको सम्पूर्ण अनुवाद प्रस्तुत गर्नु र यति फूलबुट्टा भर्नुका धेरै कारण छन्।

पत्रकारिताको काम सामाजिक कल्याण गर्दै हिँड्नु होइन, पत्रकारितामूलक संस्थाले पत्रकारिता गर्नुपर्छ, सामाजिक काम गर्ने जिम्मेवारी सामाजिक संस्थाहरूलाई नै छोडिदिनुपर्छ भन्नेहरूका लागि *इभिनिङ स्ट्यान्डर्ड*को अभियान एउटा गतिलो जवाफ हो। *इभिनिङ स्ट्यान्डर्ड* त्यति सहजै हल्का रूपमा लिन सकिने पत्रिका होइन। अन्यथा, न त्यसले वर्षको उत्कृष्ट दैनिक पत्रिकाको उपाधि पाउँथ्यो, न त त्यसलाई कमिला, ब्लेर, कैयौँ 'सिलेब्रटी' र गुगल जस्ता प्रतिष्ठित कम्पनीले साथ नै दिन्थे। पत्रकारिताको दायराभित्र सामाजिक कल्याणको अजेन्डालाई साङ्केतिक रूपमा मात्र होइन, ठोस परिवर्तनकारी रूपमै कति प्रभावकारी ढङ्गबाट समाहित गर्न सकिँदो रहेछ भन्ने कुरालाई *इभिनिङ स्ट्यान्डर्ड*ले पुष्टि गरिदिएको छ। पत्रपत्रिकाबाट यस्ता कल्याणकारी प्रयास भएका थिएनन्/छैनन् भन्ने होइन; तर ती सामान्यतया प्राकृतिक विपद् र अन्य तात्कालिक परिस्थितिबाट निर्देशित हुने गर्थे/गर्छन्।

तर, बेलायत जस्तो देशमा *इभिनिङ स्ट्यान्डर्ड*जत्तिको लोकप्रिय पत्रिकाले गरीबी या निरक्षरता जस्तो सामाजिक समस्यालाई सामान्य अवस्थामा उठाएर, त्यसका लागि अग्रपृष्ठको सम्पूर्ण भाग र भित्रका कैयौँ पृष्ठ खर्च गरेर, उठाइएको समस्यालाई सम्बोधनै गर्ने गरी उच्च महत्त्व दिँदै अभियान चलाउनु भनेको चाहिँ विरलै हुने घटना हो। त्यस प्रकृतिको परोपकारी पत्रकारितालाई सक्दो प्रवर्धन नगरी भएको छैन। किनभने, विश्वभर नै पत्रकारिता परिवर्तनको भन्दा बढी बहसको संवाहक बनेको छ।

परोपकारी पत्रकारिता बेलायतलाई भन्दा नेपाल जस्तो देशलाई बढी खाँचो छ। बेलायतमा त निरक्षरै भए पनि कम से कम राज्यले त्यो व्यक्तिलाई थोरै नै किन नहोस् हेरचाह गर्छ; पैसा नभए पनि बिरामी हुँदा नागरिकले उपचार पाउँछन्। नेपाल जस्ता देशहरूमा आम सर्वसाधारणको स्थिति सधैँ नाजुक हुने गर्छ। मानिसहरू खान नपाएर मर्ने गर्छन्; विद्यालय जानबाट

वञ्चित हुन्छन्; बिरामी हुँदा सिटामोलसम्म खान पाउँदैनन् । तर हामी तर्क गर्छौं, "त्यस्ता समस्याहरूको समाधानका लागि राजनीति नै गतिलो हुनुपर्छ । त्यसैले हाम्रो पहिलो दायित्व राजनीतिलाई सुधार्नु हो ।" त्यो तर्क ठूलो हदसम्म सही हो । तर, जुन देशमा सामाजिक उत्तरदायित्वको एउटा प्रमुख संवाहक बन्नुपर्ने पत्रकारिता आफ्नो उत्तरदायित्वलाई राजनीतिको चस्माबाट मात्र हेर्छ, जुन देशमा आम नागरिक व्यक्तिगत उत्तरदायित्व बिर्सेर केवल राजनीतिक उत्तरदायित्वको खोजी गर्छन्, त्यो देशमा न राजनीति सुध्रिन्छ, न त समाज सुसंस्कृत नै हुन्छ । यदि राजनीतिक स्थिरताले मात्र सबै समस्याको सम्बोधन गर्ने भए बेलायत जस्तो देशमा एउटा पत्रिकाले गरीबी र निरक्षरताविरुद्ध अभियान नै चलाउनुपर्ने थिएन ।

यहाँ भन्न खोजिएको के हो भने, बेलायतमा त त्यस्तो पत्रकारिताको त्यति ठूलो महत्त्व देखियो भने हाम्रो जस्तो देशमा झन् त्यसको कति महत्त्व होला !

तर हाम्रो त कुरै छोडिदिऊँ, विकसित देशका अधिकांश पत्रकारले पनि सम्बन्धित अधिकारीहरूबाट जवाफदेहिताको खोजी मात्र गर्ने पत्रकारिताको साँगुरो दायराबाट निस्किएर समाजप्रति आफैँ जवाफदेही हुने पत्रकारिताको अभ्यास गर्न सकेका छैनन् । त्यसो नगरेसम्म पत्रकारिता ठोस सकारात्मक रूपान्तरणको वाहक बन्नै सक्दैन । त्यसले आफ्नो पेशाको मूल धर्म – सार्वजनिक हित – को लक्ष्य हासिल गर्नै सक्दैन । यसो भन्नुको अर्थ परम्परागत रूपमा पत्रकारिताले अवलम्बन गर्दै आएका सबै मूल्यमान्यतालाई त्याग्नुपर्छ भन्ने होइन । तर, सधैँ अरूबाट खोज्नेले आफैँले पनि सकेको दिएर देखाउनैपर्छ ।

*इभिनिङ स्ट्यान्डर्ड*ले सम्भवत: वर्षभरि सम्बन्धित अधिकारीहरूबाट जवाफदेहिताको खोजी गर्छ । तर, वर्षमा एक पटक मात्र पनि आफूले वास्तवमै 'हित' गर्नुपर्ने वर्गका लागि आफैँ जवाफदेही भएर देखाउँदा, उसप्रतिको सद्भाव, सहयोग र उसको छवि ह्वात्तै

बढेको देखिन्छ। जतातत्तै समस्यैसमस्या भएको हाम्रो समाजमा के कुनै राष्ट्रिय स्तरको पत्रिकाले *इभिनिङ स्ट्यान्डर्डले* जस्तै पत्रकारिताको मूल धर्मप्रति इमानदारी र पत्रकारिताको परम्परागत अभ्यासलाई बदल्ने आँट देखाउन सक्ला? के कुनै राष्ट्रिय दैनिकले अग्रपृष्ठमा 'दशौँ वर्षसम्म हाम्रो पत्रिकाले राजनीतिक जवाफदेहिता खोज्दाखोज्दा अनि अशिक्षा र गरीबीबारे लेख्दालेख्दा हामीले खासै केही परिवर्तन लेराउन सकेनौँ। तर अब चाहिँ सानै किन नहोस्, कर्मद्वारा नै आजदेखि त्यो स्थितिलाई बदल्ने जिम्मेवारी हामी स्वयं पनि वहन गर्दै छौँ' भनेर आफैँ या कुनै कल्याणकारी संस्थासँग मिलेर अभियान चलाउन सक्ला? वर्षमा एक पटक मात्र एउटा राष्ट्रिय दैनिकले या अन्य लोकप्रिय क्षेत्रीय प्रकाशनले त्यस्तो अभियान सञ्चालन गर्ने हो भने मानव जीवनलाई प्रत्यक्ष प्रभाव पार्ने कैयौँ सत्कार्य नागरिक तहबाटै हुने थिए। तर, परोपकारी लेख र समाचारहरूलाई त्यति महत्त्व नदिने र अरू कतिपय

स्थितिमा स्थानै नदिने पत्रकारिताको बजारमा पत्रिका स्वयंले परोपकारी अभियानकै नेतृत्व गर्ला भनेर धेरै आशावादी हुने ठाउँ चाहिँ छैन। तैपनि फाट्टफुट्ट-फाट्टफुट्ट पहिलेभन्दा बढी परोपकारी समाचार र विचारहरू प्रकाशन हुन थालेको परिप्रेक्ष्यमा पूर्णतः निराश भैहाल्नुपर्ने स्थिति पनि देखिँदैन। तर यस मामिलामा जसले पहिलो हुन साहस देखाउँछ, त्यसले व्यापक सद्भाव र सम्मान मात्र आर्जन गर्ने नभै, नेपाली पत्रकारितामा नयाँ इतिहास पनि निर्माण गर्नेछ।

*नागरिक दैनिक, २०६८ असार १*

# कहालीलाग्दो तथ्य र हाम्रो आडम्बर

पूर्वअर्थसचिव रामेश्वर खनाललाई विद्यालय शिक्षाको विकासमा विशेष चासो रहेछ। तर अधिकांशले जस्तै उनले परिस्थितिप्रति चिन्ता मात्रै व्यक्त गरेनन्, हालै आफ्नो खल्तीबाट पैसै झिकेर एक महिनाको पेन्सन ( १७ हजार चार सय ८० रुपैयाँ) विद्यालयमा पुस्तकालय र महिलामैत्री शौचालय निर्माणमा सहयोग पुऱ्याउन एउटा कल्याणकारी संस्थालाई सहयोग गरे। उनले हरेक वर्ष आफ्नो महिनादिनको पेन्सन उक्त कामका लागि छुट्ट्याउने भएका छन्। खनाल खासै धनी मान्छे होइनन्। तर, उनले जेको बारे चिन्ता जाहेर गरे, त्यसलाई सम्बोधन गर्न खल्तीबाट आफूले सकेको पैसा पनि झिके। निश्चय पनि त्यसले उनलाई गरीब बनाएन। बरु, आध्यात्मिक र मनोवैज्ञानिक रूपमा समृद्ध बनाएको हुनुपर्छ। तर, हामी अधिकांश चाहिँ

चिन्ता व्यक्त गर्न सधैँ अघि र खल्तीबाट पैसा झिक्नुपरे सामान्यतया पछि सरिहाल्छौँ ।

राजनीतिज्ञहरूले यो देशलाई धेरै बिगारे भन्नेमा कुनै शङ्का छैन । तर, राजनीतिज्ञभन्दा निकम्मा हामी तथाकथित मध्यम र उच्च वर्गका, ठूला कुरा गर्ने तर पाएसम्म आफैँलाई पोस्ने र आफ्नै व्यक्तित्व र छवि निर्माणमा लिप्त हुने सदस्यहरू छौँ भन्ने तथ्यलाई बिनाहिचकिचाहट स्वीकार गर्‍यौँ भने त्यसबाट उत्पन्न हुने दोषानुभूतिले अलिकति सकारात्मक प्रेरणा मिल्थ्यो कि ?

यो तीतो विश्लेषण गर्नुको कारण यस्तो छ ।

यो देशमा २८ हजारभन्दा केही बढी सामुदायिक विद्यालयहरू भएको तथ्याङ्क शिक्षा मन्त्रालयसँग छ । तीमध्ये पाँच हजार विद्यालयमा मात्र 'ठीकैको पुस्तकालय' भएको अनुमान विज्ञहरू गर्छन् । बाँकी २३ हजार विद्यालयमा पुस्तकालय नै छैन या नाम मात्रको

पुस्तकालय छ। त्यसै गरी अधिकांश विद्यालयमा महिलामैत्री शौचालय छैनन्। सरकारले यो विषयलाई अलि प्राथमिकता दिएपछि आर्थिक वर्ष २०६७-६८ सम्ममा पाँच हजारभन्दा बढी विद्यालयमा त्यस्ता शौचालयहरू निर्माण गरिए। अबको वर्षमा पनि सो प्रयासलाई जारी राखिने बताइएको छ। तर, त्यस्ता शौचालयहरू निर्माण गरिए पनि धेरै ठाउँमा पानीको प्रबन्ध नगरिएको हुनाले तिनबाट अपेक्षित उपलब्धि हासिल भएको छैन। महिलामैत्री शौचालय नहुँदा, महिनावारी शुरू भएपछि छात्राहरू कैयौं दिनसम्म विद्यालय नै नआउने गर्दा, उनीहरूको माथिल्लो कक्षामा गएपछि विद्यालय र एसएलसी उत्तीर्ण सङ्ख्यामा ठूलो असर परिरहेको जानकारहरू बताउँछन्।

देशभरि जम्मा २८ हजार सामुदायिक विद्यालय मात्र हुनु आफैँमा एउटा दुःखद तथ्य हो। त्यो आफ्नै ठाउँमा छँदै छ। तर, तीमध्ये लगभग २३ हजार विद्यालयमा ठीकैको सम्म पनि पुस्तकालय नहुनु र

अधिकांशमा महिलामैत्री शौचालयसम्म नहुनु वर्तमान युगप्रति नै उपहास हो। हामी जस्ता पढेलेखेका र तुलनात्मक रूपमा सहज जिन्दगी बिताउने मानिसहरूका लागि त्यो एउटा व्यङ्ग्य हो, एउटा लज्जा हो।

भन्नेले भन्लान्, यो नागरिकको जिम्मेवारी होइन, सरकारको जिम्मेवारी हो। त्योभन्दा लाचार उत्तर अर्को हुनै सक्दैन। सरकारले गर्न सक्ने भैदिएको भए यस्तो आलेख लेख्नैपर्दैनथ्यो। तर हामी सबैलाई थाहा छ, सरकारलाई वर्षौंदेखि सरकारका रूपमा चल्न पनि धौंधौ भैरहेको छ भने, नागरिकका रूपमा जे हामी गर्न सक्छौँ त्यसको जिम्मेवारी हामीले लिने कि नलिने ? जति हामी त्यो जिम्मेवारीबाट पन्छिन खोज्छौँ र कमजोर सरकारबाट जवाफदेहिताको मात्र अपेक्षा गर्छौं, त्यति नै परिस्थितिको दीर्घकालीन असरको शिकार हामी आफैँ हुनेछौँ। ठूलो हदसम्म त्यसको असर हामीले अहिले पनि भोगिरहेका छौँ।

यो देश व्यक्तिगत जिम्मेवारी पूरा नगर्ने, तर अरू

र खास गरी राजनीतिक नेतृत्वबाट जिम्मेवारी खोज्ने समाजका सचेत नागरिकहरूको आडम्बरबाट आहत भएको छ। यो देश सबैतिर ठूलठूला कुरा गर्ने तर आफ्नो खल्तीबाट एक पैसा नझिक्ने र अरू पाए विद्यमान जटिलताबाट आर्थिक फाइदा लिन खोज्नेहरूको भीडमा अलमलिएको छ। तर तिनै नागरिक हुन्, जो यत्र-तत्र-सर्वत्र सञ्चार माध्यमहरूमा छाउँछन् र यत्र-तत्र-सर्वत्र देश बनाउने भाषण गर्छन्। यो देशका लागि विरोध, विवाद र बहस यति प्यारो भैसक्यो, अधिकांश टाठाबाठाले त्यही बाटो अपनाएर आफ्नो सार्वजनिक छवि निर्माण गर्छन्; त्यसैलाई आफ्नो उपलब्धि ठान्छन् र आम सर्वसाधारणले पनि त्यसैलाई श्रेय दिन्छन्। हामी सारमा होइन, रूपमा रमाएका छौँ। यहाँ मात्रै होइन, संसारकै रीत त्यस्तै छ। तर अहिले हामीलाई संसारको होइन, नेपालको मात्रै मतलब छ। त्यसैले नेपालकै कुरा गरौँ।

कल्याणकारी कार्यमा लागेका संस्थाहरूको अनुभव

हेर्ने हो भने, पाँच लाख रुपैयाँबाट गाउँको विद्यालयमा एउटा राम्रै खालको पुस्तकालय निर्माण हुन्छ। किनभने, सामान्यतया त्यति रकम सहयोग गर्दा गाउँलेहरू उत्साहित भएर श्रमदान गर्छन् र साथसाथै अन्य स्रोतबाट सहयोग जुटाउने प्रयास पनि गर्छन्। के नेपालमा पुस्तकालय नभएका बाँकी २३ हजार विद्यालयमा एक पटक पाँच लाख रुपैयाँ खर्च गरेर एउटा पुस्तकालय निर्माण गरिदिन सक्ने २३ हजार नेपाली छैनन् होला ? जत्ति भए पनि छन्। त्यसको दोब्बर-तेब्बर नेपालीहरू छन् जसले चाहे भने सहजै त्यति या त्योभन्दा धेरै बढी रकम खर्च गर्न सक्छन्। तीमध्ये कतिपयले अन्य कल्याणकारी काममा खर्च गरिरहेका हुन सक्छन्। सबैले सबै ठाउँमा खर्च गर्न सक्दैनन्। तिनलाई छोडिदिँदा पनि पाँच लाख रुपैयाँ खर्च गर्न सक्ने २३ हजार नेपाली सहजै बाँकी रहनेछन्। काठमान्डु उपत्यका अनि अन्य जिल्लाका सदरमुकाम र शहरका ठूलठूला घर हेरेरै थाहा हुन्छ,

ती घरमा बस्नेहरू कोही पनि एक पटक पाँच लाख रुपैयाँ खर्च गरेर गरीब हुनेवाला छैनन्, न त त्यसबाट तिनको जीवन शैलीमा खासै ठूलो भिन्नता नै आउनेछ। पाँच लाख खर्च गर्दा घर र व्यक्तिगत जिन्दगीमा ठूलै भूकम्प आउँछ जस्तो लाग्छ भने, वर्षातको पानीलाई जम्मा गर्ने ठाउँ बनाईकन महिलामैत्री शौचालय निर्माण गर्नका लागि त्यसको आधा रकम भयो भने छेलोखेलो हुन्छ। के २०-२५ हजार विद्यालयमा त्यति गर्न सक्ने नेपाली नेपालमा छैनन् होला ? हामीजत्तिको ठीकै आम्दानी गर्ने अधिकांश पेशाकर्मी त्यति गर्न सक्षम छौं। त्यति पनि गर्ने क्षमता छैन भने, जति सकिन्छ त्यति योगदान पुऱ्याएर पनि गर्न चाहनेलाई सघाउन सकिन्छ। तर हामी अधिकांश त्यसो गर्दैनौं, किनभने त्यसबाट हामीलाई व्यक्तिगत रूपमा नोक्सानी हुन्छ। हामी त्यस्ता कदमहरू मात्र चाल्न चाहन्छौं जसबाट अरू नै कोही हामीले चाहेको काम गर्न बाध्य होस् र हामी आफूले चाहिँ

केही गरेको जस्तो देखियोस् ।

सधैँ राजनीतिक रूपमा मात्र जागेर र राजनीतिमा सुधार नआईकन अरू केही पनि सुध्रन्न भन्ने सोचबाट बिरामी परेर यो देशले साह्रै सकस भोगिसक्यो । अब जनता जाग्ने हो भने कल्याणकारी क्रान्ति गरेर जाग्नुपर्छ । यसको अर्थ राजनीतिक नेतृत्वमाथिको दबावलाई छोड्ने भन्ने हुँदै होइन । तर, त्यो दबाव दिएर ठूलो कुरा गर्नेहरूले कम से कम सानै भए पनि केही न केही काम गरेर देखाउनैपर्छ भन्ने मात्र हो । माने लिऊँ, देशको हरेक विद्यालयमा कुनै न कुनै नेपालीका पिताको, माताको, छोराको, छोरीको या अरू कसैको सम्झनामा या सम्मानमा पुस्तकालय निर्माण भयो । त्यसबारेको शिलापत्र देख्दा नेपाली नागरिक हुनुको हाम्रो गर्व कति ठूलो होला ! आम नागरिकबाट हुने ठोस उपलब्धिमूलक हस्तक्षेपबाट राजनीतिक नेतृत्वमा जति ठूलो नैतिक दबाव पर्छ, त्यस प्रकृतिको दबाव लेखेर या बोलेर कुनै पनि हालतमा पर्दैन । किनभने,

राजनीतिज्ञहरूलाई पनि ‘यी ठूला कुरा गर्नेहरू मात्र हुन्; काम केही गर्दैनन्’ भन्ने राम्रै थाहा छ। अहिलेको नेपालको अवस्था भनेको खोक्रो ढ्वाङले खोक्रो ढ्वाङलाई दबाव दिन खोज्दा दुवै किच्चिएको अवस्था हो।

बेलायतका भूतपूर्व प्रधानमन्त्री टनी ब्लेरले, पदभार ग्रहण गरेपछि “तपाईंको सरकारको प्राथमिकता के हो ?” भनेर सोध्दा, “शिक्षा, शिक्षा, शिक्षा” भनेका थिए। बेलायत जस्तो देशमा त उनले शिक्षालाई त्यत्रो महत्त्व दिएका थिए भने, हाम्रो जस्तो देशमा शिक्षाको कति महत्त्व होला, स्वतः अनुमान लगाउन सकिन्छ। एउटा राम्रो पुस्तकालयसम्म नभएको विद्यालयबाट पढाइ पूरा गर्ने विद्यार्थीको भविष्य कस्तो होला ? अथवा, उचित शौचालयको अभावले विद्यालयमा नियमित हाजिर भएर पढ्न नपाउने छात्राको भविष्य कस्तो होला ? त्यो पनि स्वतः अनुमान लगाउन सकिन्छ। यी त शिक्षा क्षेत्रका कहालीलाग्दा तथ्याङ्क भए।

अरू क्षेत्रका कैयौँ तथ्याङ्क पनि त्यत्तिकै कहालीलाग्दा छन्। त्यस्ता तथ्याङ्कहरू नै हुन् जसले नेपालको माओवादी विद्रोह, स्तरहीन राजनीति, निरन्तरको अस्थिरता र गरीबीमा ठूलो भूमिका निर्वाह गरेका छन्।

हामी भने पत्रिकामा लेखेर, सभा-समारोहहरूमा गज्जबको भाषण गरेर, खूब राम्राराम्रा अन्तर्वार्ता दिएर, अन्तर्राष्ट्रिय सभा-समारोहमा भाग लिएर, विविध प्रकृतिका आन्दोलनमा सहभागी भएर 'हिरो' भएका भयै छौँ। तर तथ्य के हो भने, देशका २८ हजार सामुदायिक विद्यालयमध्ये पाँच हजारजतिमा मात्रै 'ठीकैको पुस्तकालय' छ, बाँकीमा पुस्तकालय नै छैन भने पनि हुन्छ र देशका अधिकांश विद्यालयमा महिलामैत्री शौचालयसम्म पनि छैन। दोष काम गर्ने ढङ्ग र बुद्धि नभएको भनिएका नेताको कि, आफूमा काम गर्ने ढङ्ग र बुद्धि दुवै भएको विश्वास गर्ने हामी मध्यम र उच्च वर्गका नेपालीको, जो परिवर्तनकारी कुरा गर्न खप्पिस छन्, तर ठोस परिवर्तनकारी काम

चाहिँ गर्दैनन्? के हामी जस्ता नेपालीहरूले राजनीतिक परिवर्तनमा खेलेको भूमिकालाई नै महान् मानेर सन्तुष्टि लिन मिल्छ? मिल्दैन भने, र माथि उल्लिखित तथ्यहरूले हाम्रो आडम्बरपूर्ण चेतनामा अलिकति पनि प्रहार गर्छन् भने, अब आफ्नै खल्तीबाट पैसा झिकेर कुनै गाउँको विद्यालयमा एउटा पुस्तकालय वा महिलामैत्री शौचालय बनाउने सहयोग गर्ने कि ? नत्र, देश बनाउने भाषण गर्ने हाम्रा नेता र देश बनाउने कुरा गर्ने हामीहरूबीच कुनै अन्तर हुनेछैन ।

*नागरिक दैनिक, २०६८ असार २९*

# मासुभात र भोका पेट

“दाइ, काठमान्डु गौशालाको तिलगङ्गामा ‘केटाकेटी निःशुल्क विद्यालय’ छ। सो विद्यालयमा काठमान्डुबाहिरबाट आएका गरीब श्रमिकका करीब दुई सय ५० छोराछोरी निःशुल्क पढ्दा रहेछन्। स्कुलमा सरहरूले ‘बिहान के खाएर आयौ तिमीले?’ भनेर सोध्दा बडो अप्ठेरो मानीमानी कसैकसैले ‘बिहान मासुभात खाएर आएको, सर’ भन्दा रहेछन्। तर वास्तविकता चाहिँ के रहेछ भने, उनीहरूमध्ये कतिपय घरमा खानेकुरा नभएर भोकै स्कुल आएका हुँदा रहेछन्। विद्यार्थीहरूले भोक छोप्न त्यसरी ढाँटिरहेको थाहा पाएपछि स्कुलले उनीहरूको लागि सकी-नसकी दिउँसोको खानाको व्यवस्था गर्न थालेछ। तर स्कुललाई खानाको खर्च जुटाउन साह्रै गाह्रो परिरहेको छ। त्यसैले हाम्रो संस्था अनुभूति इन्टरन्यासनलले सो

स्कुललाई केही पैसा सङ्कलन गर्न एउटा कार्यक्रमको आयोजना गर्दै छ। त्यसमा तपाईं पनि आइदिनुपर्‍यो भनेर फोन गरेको।"

शिशिर खनाल र स्वस्तिका श्रेष्ठ दम्पती मैले भेटेमध्ये दुई जना अत्यन्त प्रेरणादायी युवाहरू हुन्। अमेरिकामा राम्रो शिक्षा पाएका उनीहरू सम्पन्न पारिवारिक पृष्ठभूमि नभए पनि नेपालमै केही गर्नुपर्छ भनेर केही वर्षअगाडि फर्किएका थिए। केही गर्नुपर्छ भन्ने त्यही भावनाको परिणामस्वरूप उनीहरूले सो विद्यालयलाई सहयोग गर्ने तत्परता देखाएका थिए। मलाई सहयोग गर्न आग्रह गर्दै फोन गर्ने शिशिर खनाललाई "तपाईंहरूले के गरेर पैसा सङ्कलन गर्न लागेको?" भनेर प्रश्न गर्दा उनले बडो रचनात्मक र रोचक योजना सुनाए।

"हामी यहाँका राम्राराम्रा कलेजमा पढ्ने करीब दुई सय विद्यार्थीलाई काठमान्डुको व्यापारिक केन्द्र सिभिल मलमा जम्मा भएर एक दिनभरि भौंकै बस्न आग्रह

गर्दै छौँ, ताकि उनीहरूलाई भोक कस्तो हुँदो रहेछ भन्ने थाहा होस्। तर, उनीहरूले सो भोक अभियानमा भाग लिनुअगाडि साथीभाइ, परिवार र नातागोताबाट 'केटाकेटी नि:शुल्क विद्यालय' का केटाकेटीको खानाका लागि कम से कम एक हजार रुपैयाँ उठाएर ल्याउनुपर्नेछ। गगन थापा, तपाईं र अन्य केहीले ती युवाहरूका लागि प्रेरणाका केही शब्द बोलिदिनुहोला भन्ने हाम्रो अपेक्षा हो।"

समयले भ्याएसम्म त्यस्तो सत्कार्यमा सहभागी नहुने भन्ने त कुरै थिएन। जब २०६८ असार ३२ गते शनिबार म कार्यक्रममा सहभागी हुन सिभिल मल पुगेँ, त्यहाँको माहौल देखेर म त्यसै द्रवीभूत भएँ। त्यहाँ दुई सय होइन, कैयौँ कलेजका झन्डै पाँच सय छात्रछात्रा भोकविरुद्धको टिसर्ट लगाएर नाचगान गर्दै, सिभिल मलमा किनमेल गर्न आउनेहरूसँग चन्दा उठाइरहेका थिए। खनाल र श्रेष्ठ दम्पतीले दुई लाख रुपैयाँ उठाउने लक्ष्य राखेका थिए; तर सो दिन

कार्यक्रम आयोजनाको खर्च कटाएर चार लाख रुपैयाँभन्दा बढी जम्मा गरे। स्पष्ट छ, उनीहरूको प्रयासका कारण, भोकै स्कुल आउन बाध्य कैयौँ केटाकेटीले अब महिनौँसम्म मासुभात खाएको कल्पना गर्दै दिनभर भोकै बस्नुपर्नेछैन।

एकातिर मासुभातको स्वादको सपना देख्दै दिनभरि भोकै बस्न बाध्य केटाकेटी हाम्रो देशमा प्रशस्तै छन् भने, अर्कोतिर हरेक दिन सकी-नसकी मासु कोचेर खाने र अरू सँगसँगै जाँड धोकेर, खाएको जति बान्ता गर्ने वर्गको पनि हामीकहाँ कमी छैन। तर पनि सम्पन्न समुदायको चेतनाको दायरा अधिकांश स्थितिमा आफ्नो वर्गको सीमालाई काटेर त्योभन्दा पर जान नसक्ने रहेछ। वास्तविकता चाहिँ के हो भने, तिनको चेतनामा मानवीय संवेदनाका तन्तुहरू जागृत नभएसम्म हाम्रो जस्तो समाजको रूपान्तरण सम्भव हुँदैन। त्यसैले बारम्बार राम्रा कामबारे चर्चा गरिरहनु जरूरी छ, जसले गर्दा, क्षमता भएर पनि आफैँ र आफ्नै

व्यापार-व्यवसायमा सीमित सम्पन्न समुदायलाई या त राम्रो काम गर्न प्रेरणा मिलोस् या तिनलाई 'म त साँच्चिकै स्वार्थी रहेछु' भन्ने दोषभावले आहत तुल्याओस्।

खनाल र श्रेष्ठको चर्चा गर्दैगर्दा यो पङ्क्तिकारलाई बूढानीलकण्ठ स्कुलमा पढेका र अमेरिकाको राम्रै विश्वविद्यालयबाट स्नातक गरेका अर्का एक युवा सुवास घिमिरेको सम्झना भैरहेको छ। उनले आफ्नी आमा सरस्वती घिमिरेको स्मृतिमा आफ्नो गाउँ गोरखाको आरूपोखरीमा तल्ला तप्काका द्वन्द्वपीडित बालबालिकाका लागि आफ्नै अग्रसरतामा सरस्वती शान्ति विद्यालयको स्थापना गरेका छन्। उनलाई सो विद्यालयका लागि अझै केही सहयोगको खाँचो छ। किनभने, उनी भोको पेट हुँदाहुँदै 'इज्जत' बचाउनका लागि निर्दोषितापूर्वक 'मासुभात खाएँ' भन्न बाध्य बालबालिकाको जीवन परिवर्तन गर्न प्रतिबद्ध छन्। खनाल, श्रेष्ठ र घिमिरेले पनि संसारका अधिकांश मानिसले जस्तै आआफूले अपनाएको पेशामा इमानदारीपूर्वक काम गरे त्यसैबाट

समाजको सेवा भैहाल्छ नि भन्ने सहज मान्यता बोकेका भए न ‘केटाकेटी नि:शुल्क विद्यालय’ का बालबालिकाले महिनौँका लागि तातो दालभात खान पाउन स्थिति सृजना हुन्थ्यो, न त गोरखाको विकट आरूपोखरी गाउँमा स्कुल जान पाउने अत्यन्त न्यून सम्भावना भएका विपन्न बालबालिकाका लागि विद्यालय नै निर्माण हुन्थ्यो ।

केही समयअघिको कुरा हो, पत्रकार कनकमणि दीक्षितले स्थापना गरेको स्पाइनल (मेरुदण्ड) इन्जरी पुन:स्थापना केन्द्रका बिरामीको उपचारका लागि आर्थिक सङ्कट परेपछि उनले काठमान्डुमा चाहेको खण्डमा दिनदिनै मासुभात खान सक्ने धन र अलि ठूलो मन पनि भएका सय जनालाई प्रतिव्यक्ति १० हजार रुपैयाँ टिकट राखेर आफ्ना छोरा इलम दीक्षितद्वारा निर्देशित र अभिनीत एउटा नाटकको विशेष प्रस्तुति हेर्न आमन्त्रण गरे । उनले सो प्रयासबाट झन्डै १० लाख रुपैयाँ सङ्कलन गरे, जसले गर्दा मासुभात खाने त

परै छोडिदिऊँ, दालभात खान पनि धौधौ पर्ने र त्यसमा पनि झन् मेरुदण्डमा चोट लागेका कारण हिँडडुल नै गर्न नसक्ने कैयौँ बिरामीले उपचार पाउने भए। यस्ता कामहरू गर्ने अन्य कैयौँ नेपाली पनि छन्, जसको चर्चा समय र सन्दर्भ पर्दा अनि जानकारी पाउँदा हामी जस्ता पत्रकारहरूले गर्नु सधैं समाजका लागि हितकर हुन्छ।

शिशिर खनाल, स्वस्तिका श्रेष्ठ र सुवास घिमिरे जस्ताहरूले निश्चय पनि 'नेपालको स्थिति त्यस्तो खराब छ, फर्किएर के गर्ने?' भन्नेहरूलाई एकपल्ट सोच्न बाध्य तुल्याउनेछन्। किनभने, ती तीनै जना कुनै सम्पन्न पारिवारिक पृष्ठभूमिका युवा होइनन् र उनीहरू सबै अमेरिकामा राम्रै काम गरेर बस्ने क्षमता भएका व्यक्तिहरू हुन्। पत्रकार दीक्षितका हकमा कुरा गर्दा, उनी पनि अमेरिकाबाट राष्ट्रसङ्घको जागिर छोडेर युवा अवस्थामै नेपाल फर्किएका हुन्। धेरैले 'उनको जति धन भए हामी पनि फर्किन्थ्यौँ' भन्लान्;

तर वास्तविकता चाहिँ के हो भने, उनी जस्ता सम्पन्नहरू नफर्किएका धेरै उदाहरण छन् । र, जो फर्किएका छन्, तीमध्ये धेरै जना आफ्नै व्यापार र वृत्ति विकासमा लीन भएर अनि त्यसैबाट समाजलाई ठूलो योगदान पुऱ्याएको छु भन्ने भ्रम पालेर बसेका छन् । त्यस्ता दिग्भ्रमितहरूलाई एउटा सीधा प्रश्न तेर्स्याऔँ– कनकमणि दीक्षितले जस्तै उनीहरू पनि एउटा-एउटा अस्पताल स्थापना गर्ने अग्रसरता लिन किन सक्दैनन् ? त्यसरी अग्रसरता लिँदा सहयोगी हातहरू धेरै भेटिँदा रहेछन् भन्ने प्रशस्त उदाहरण छन् । तर, गर्न सक्ने क्षमता भएका धेरैजसो सरकारले यसो गरिदिएन र उसो गरिदिएन भनेर गुनासो मात्रै गरेर बस्छन् । काम चाहिँ कि त गर्दैगर्दैनन्, गरिहाले भने 'भएर पनि गरेन' भन्ने लाज छोप्नका लागि अधिकांश अवस्थामा साङ्केतिक रूपमा मात्र गर्छन् । त्यस्ता मानिसहरूको बाहुल्य हुँदा यो समाज राम्रैराम्रा खोक्रा कुरा अनि नराम्रैनराम्रा वास्तविकताले आक्रान्त

बन्नु स्वाभाविक हो। तर पनि राम्रा कामहरूको चर्चा सञ्चार माध्यममा बढीभन्दा बढी हुँदै जाने हो भने, काम नगर्ने र कुरा मात्र गर्ने ठूलाठालुहरूलाई स्वत: लाज हुन थाल्नेछ र केही गर्न नैतिक दबाव पर्नेछ।

एउटा यथार्थ चाहिँ के हो भने, सबै मानिसबाट माथि उल्लेख गरिएजत्तिकै स्तरमा समाजप्रतिको दायित्व निर्वाह होस् भन्ने अपेक्षा गर्न सकिँदैन। तर सबै सक्षम मानिसहरूले व्यावहारिक रूपमा जेजति सम्भव छ, त्यति चाहिँ अवश्य गर्न सक्छन् र त्यो अपेक्षा गर्नु अस्वाभाविक हुँदैन। किनभने, हामी सामाजिक प्राणी हौँ र हामी सबै सुसंस्कृत र विकसित समाज हेर्न चाहन्छौँ। त्यसका लागि अलि सक्नेले अलि बढी गर्नुपर्ने हुन्छ। उदाहरणका लागि, काठमाण्डुको प्रतिष्ठित 'भोजन गृह' का मालिक भरत बस्नेतले हरेक महिना निर्धनहरूको विद्यालय भनेर चिनिने समता स्कुललाई ३० हजार रुपैयाँ सहयोग गर्ने गरेको यो पङ्क्तिकारलाई

थाहा छ। मैले थाहा नपाएका अन्य धेरै त्यस्ता सहयोग भैरहेका होलान्। यद्यपि अधिकांश नेपालीले त्यति ठूलो रकम खर्च गर्न सक्दैनन्। तर, बियर खानेहरूले महिनाको एक बोतल बियर कम खान या चिया खानेहरूले महिनाको आठ-१० कप चिया कम खान भने अवश्य सक्छन्। सक्नेहरूले त्यति गरेर, महिनाको सय रुपैयाँ मात्र नसक्नेका लागि जम्मा गरिदिने हो भने पनि ती सय रुपैयाँहरू जम्मा हुँदा यो देशका कैयौं बालबालिकाले सहजै एक छाक तातो दालभात खान पाउनेछन्। त्यति गर्दा सय रुपैयाँ दिनेको जीवनमा कुनै तात्त्विक असर पर्नेछैन; बरु उसले ठूलो सन्तुष्टिको अनुभव भने अवश्य गर्नेछ। त्यही सोचबाट प्रेरित भएर हुनुपर्छ, मासिक तलब त्यति धेरै नहुने अर्धसरकारी जागिर भए पनि हालसालै नेपाल दूरसञ्चार प्राधिकरणका निर्देशक आनन्दराज खनालको अग्रसरता तथा प्राधिकरणको एक मात्र कर्मचारी युनियनको सक्रियतामा झन्डै ३० कर्मचारीले

महिनाको सय रुपैयाँ जम्मा गर्ने अभियान थालेका छन् । निर्देशक खनाल भन्छन्, "महिनाको सय रुपैयाँ ठूलो रकम नहोला; तर कर्पोरेट सोसल रेस्पोन्सिबिलिटी (सीएसआर) को अवधारणालाई कर्पोरेट अर्थात् संस्थागत जिम्मेवारी मात्र नसम्झिएर त्यसलाई सिटिजन्स अर्थात् नागरिकको सामाजिक जिम्मेवारीका रूपमा पनि बुझ्नुपर्छ भन्ने हाम्रो मान्यता हो । हामी जे गर्दै छौँ, त्यो सारा सरकारी र अर्धसरकारी कार्यालयहरूमा शुरू हुने हो भने त्यो नागरिक जिम्मेवारीका हकमा एउटा उदाहरणीय क्रान्ति हुनेछ र त्यसबाट दशौँ हजार असहाय बालबालिकाको गाँस-बासको प्रबन्ध हुन सक्छ । हामी अधिकांश कर्मचारी आफ्नो खाजा र चिया खर्चबाट त्यति बचाउन नसक्ने छैनौँ । आफूले गर्न सक्ने कुरा किन नगर्ने भन्ने हाम्रो सोच हो ।"

हुन पनि हो, आखिर कुरा धनभन्दा बढी मनको रहेछ । कुरा, बिहान केही नखाईकन स्कुल आउने अनि सरले 'आज घरमा के खायौ ?' भनेर सोध्दा

भोको पेटको पीडा र भोको हुनुको लाज लुकाउँदै 'बिहान मासुभात खाएँ, सर' भनेर जवाफ दिने बालबालिकाको संवेदनाले हाम्रो संवेदनालाई कुन हदसम्म स्पर्श गर्दो रहेछ भन्नेमा भर पर्ने रहेछ। जिन्दगीको के भरोसा ! हामी पनि केही गरिहाल्ने कि ?

*नागरिक दैनिक, २०६८ साउन ११*

# पूर्णमानका आँखा

के कोही मान्छेले मध्य काठमान्डुमा जन्मिएर, खानदानी बस्नेतको सन्तान भएर, २०१३ सालमै अङ्ग्रेजीमा स्नातक गरेर, सेनादेखि राजदरबारसम्म पहुँच हुँदाहुँदै, ती सबै त्यागी गाउँको कुनै स्कुलमा पढाएर जीवन बिताउन सक्ला ? सक्दा रहेछन् । देशभरिबाट अवसरको खोजीमा काठमान्डु आएर यहीं घरजम गरी बस्ने व्यक्तिहरू त छ्यासछ्यास्ती भेटिन्छन्; तर काठमान्डु खाल्डोमा एउटा प्रतिष्ठित परिवारमा जन्मिएर त्यति बेलाको परिस्थितिमा गज्जबको पारिवारिक र शैक्षिक पृष्ठभूमिका कारण प्राप्त हुन सक्ने सम्पूर्ण आर्थिक तथा पदीय उपलब्धिलाई तिलाञ्जली दिएर काठमान्डुबाहिर गई शिक्षक भएर जीवनै बिताउने मान्छे कमैले भेटेका होलान् या भेट्दै नभेटेका हुन सक्छन् । मैले चाहिँ त्यस्ता एक शिक्षकलाई ३०-३१

वर्षअगाडि स्कुल पढ्दादेखि नै भेटेको थिएँ र त्यसयता उनको परिवारसँग निरन्तर सम्पर्कमा रहेको छु। तर 'नजिकका देउता हेला' भनेझैँ, मैले धेरै राम्रा नेपालीबारे धेरै कुरा लेखिसक्दा पनि उनीबारे चाहिँ कहिले पनि लेख्ने जमर्को गरिनछु। तर, शिक्षा क्षेत्रमा केन्द्रित असाध्य राम्रो पत्रिका *शिक्षक* मासिकको पछिल्लो अङ्कमा उनीबारे राम्रो आलेख प्रकाशन भएपछि भने म ती शिक्षकबारे नलेखी बस्न सकिनँ। उनले जीवनमा सुख, शान्ति र सफलतालाई जसरी बुझेका र हेरेका छन्, त्यसरी हामी जस्ताहरूले बुझ्न सके यो समाज र यो देश नितान्त भिन्न हुने थियो भन्नेमा कुनै शङ्कै छैन।

काठमान्डुको मुटुमै अवस्थित असनमा सरदार चन्द्रमानसिंह बस्नेतका नाति र छिटै अवकाश लिएका मेजर सुबेदार शङ्करमानसिंह बस्नेतका छोरा पूर्णमान १९८९ सालमा जन्मिएका हुन्। उनले २०१३ सालमै स्नातक गरिसकेका थिए। उनीजत्तिको शैक्षिक र

पारिवारिक पृष्ठभूमि भएको व्यक्तिले त्यति बेला भनेको जस्तो जागिर पाउने र पदीय दृष्टिकोणबाट छिटै माथि पुग्ने कुरामा शङ्कै थिएन। तर पूर्णमानसिंह बस्नेत नितान्त भिन्न सोचका युवाका रूपमा प्रस्तुत भए। उनलाई भित्रैदेखि देशको परिस्थिति सुधार्ने हो भने शिक्षाको अवस्थामा सुधार नल्याई हुँदैन भन्ने लाग्यो र उनको त्यो चाहनालाई साकार पार्ने सूत्र बने नेपाली काङ्ग्रेस, बनेपाका तत्कालीन नेता हंसराज श्रेष्ठ। त्यसपछि बस्नेत ठूलो उत्साह र स्वाभिमान बोकेर २०१५ सालमा दिनभरि हिँडेर बनेपा पुगे र त्यहाँस्थित आजाद माध्यमिक विद्यालयमा पढाउन थाले। उनी भन्छन्, "बनेपा अहिले जस्तो थिएन। ठूला र बाक्ला घरहरू पनि थिएनन्। तर, राजनीतिक रूपमा भने बनेपा एकदमै सक्रिय थियो। शिक्षणसँगसँगै राजनीति पनि गर्नुपर्छ भनेर नेपाली काङ्ग्रेसका नेताहरूले मलाई असाध्यै दबाव दिन थाले। शिक्षकले राजनीति गर्‍यो भने विद्यालयको वातावरण र विद्यार्थीहरू

दुवैमा नराम्रो असर पर्छ भन्ने मेरो विश्वास थियो। त्यसैले म उनीहरूको दबावका सामु झुक्न चाहिनँ। परिणामस्वरूप मैले स्कुलै छोड्नुपर्ने अवस्था आयो। तर, म हार खाएर काठमान्डु फर्किनँ; बरु धूलिखेलको सञ्जीवनी विद्यालयले मलाई माध्यमिक शिक्षकका रूपमा पढाउन बोलायो र म २०१८ सालमा त्यतै लागेँ।"

त्यसको दुई वर्षपछि उनी सञ्जीवनीका प्रधान अध्यापक भए र उनले सो विद्यालयमा २०४९ सालसम्म पढाए। त्यहाँ ३० वर्षभन्दा बढी समय पढाउँदा, *शिक्षक* मासिक लेख्छ, "पूर्णमान सरले सञ्जीवनी हाइस्कुलको कायापलट मात्र गरेनन्, काभ्रेका धेरैलाई सुयोग्य सफल नागरिक हुने अवसर पनि दिलाए।" उनको नेतृत्वकालमा सो स्कुलबाट कैयौँ विद्यार्थीले एसएलसीमा उत्कृष्ट नतिजा लेराए। तिनै उत्कृष्ट नतिजा लेराउनेमध्येका एक हुन् अत्यन्त स्तरीय र नमूनाका रूपमा हेरिने धूलिखेल अस्पतालका

संस्थापक डा. रामकण्ठ श्रेष्ठ। सञ्जीवनी स्कुलमा आएपछि पनि बस्नेतले विद्यालयमा राजनीतिलाई सधैँ निरुत्साहन गरे। शिक्षकहरूको राजनीतिक सक्रियताले व्याप्त अहिलेको शैक्षिक वातावरण देखेर उनलाई दिक्क लाग्छ र उनी भन्छन्, "राजनीतिक दलमा लाग्नेहरू शिक्षक नै होइनन्। स्वच्छ शिक्षक नभै छात्रछात्रालाई ज्ञान दिन सकिँदैन। राजनीतिक दलको पछि लाग्नेले विद्यार्थीलाई पढ्न होइन, दलकै झोला बोक्न सिकाउँछन्।"

बस्नेतको सक्रिय जीवनको अधिकांश हिस्सा धूलिखेलमै र सञ्जीवनी स्कुलको आसपासमा बित्यो। त्यसबीच यता काठमान्डु खाल्डोमा उनका धेरै समकालीन र आफन्त सेना, प्रशासन र दरबारमा धेरै माथिल्लो ओहोदामा पुगिसकेका थिए। अचेल उनी हातखुट्टा कामिरहने पार्किन्सन्स रोगबाट पीडित भएर चाबहिलस्थित आफ्नो सामान्य निवासमा सामान्य जीवन बिताइरहेका छन्। आफूले आफ्ना समकालीन र आफन्तहरू जस्तै

'रवाफिलो' भनिने जिन्दगी गुमाएकामा उनलाई रत्ती पनि गुनासो छैन। उनी भन्छन्, "यो समाज र संसारलाई सुन्दर, शान्त, सफल र सुसंस्कृत बनाउने हो भने हामीलाई तथाकथित 'ठूला' भन्दा 'असल' मान्छेहरूको खाँचो छ।" सबै असल मानिसहरूले व्यक्तिगत स्वार्थ र सफलताको दायराभन्दा बाहिर गएर समाजमा ठोस रूपान्तरणकारी भूमिका निर्वाह गरेका हुन्छन् भन्ने छैन। तसर्थ बस्नेतले 'असल' मानिस भनेर निश्चय पनि त्यस्ता व्यक्तिहरूलाई सङ्केत गरेको हुनुपर्छ जो असल भैकन व्यक्तिगत आनन्द र सफलताको दायराभन्दा बाहिर गएर समाजका समस्याहरूलाई आफैँ सम्बोधन गर्न अग्रसर हुन्छन्। त्यसरी हेर्दा अमेरिकी धनाढ्य वारेन बफेट र बिल गेट्स जस्ता मानिसहरू साह्रै ठूला मात्र होइनन्, साह्रै असल मान्छे पनि हुन्। किनभने, उनीहरूले ठूलो हुनुका कारण प्राप्त सम्पूर्ण भनेजसो लाभलाई समाजको ठोस रूपान्तरणका लागि प्रयोग गरिरहेका छन्। अनि

भारतका अम्बानीहरू ठूला मान्छे कहलिएका होलान्; तर ती असल मान्छे हुन् भन्ने कुरामा चाहिँ यो पङ्क्तिकारलाई शङ्कै छ। झुपडी-झुपडीबीच संसारकै सबभन्दा महँगो महल ठड्याउने मान्छे मान्छे नै होइन। त्यसो भन्दा अम्बानी जस्ता धनाढ्यहरूले भन्नेछन्, "हामीले देशको अर्थतन्त्रमा कत्रो योगदान दिएका छौँ! दशौँ हजारलाई रोजगारी दिएका छौँ। कति परोपकारी काम पनि गरेका छौँ!" सुन्दा कुरा ठीकै लाग्ला; तर वास्तविकता के हो भने, जसरी म देशको पत्रकारिता क्षेत्रमा योगदान पुऱ्याउन पत्रकार बनेको हैन, त्यसै गरी अम्बानी पनि उनको देशको अर्थतन्त्रमा योगदान पुऱ्याउनका लागि व्यापारी बनेका होइनन्। यसमा कसैलाई भ्रम नरहोस्। पेशागत सफलता स्वाभाविक व्यक्तिगत आकाङ्क्षाको परिणाम मात्र हो। जहाँसम्म अम्बानी जस्ता धनाढ्यहरूको परोपकारी कामको कुरा छ, ती अधिकांश स्थितिमा लाज छोप्न गरिएका साङ्केतिक प्रयास हुने गरेका

छन्। उनी जस्ता मानिसहरूको छाती विशाल भैदिने हो भने यो संसारमा सम्भवतः यति कहालीलाग्दो आर्थिक विभेद नै हुने थिएन।

त्यसैले, यो संसारका वातावरणीयदेखि सामाजिक र गरीबीसम्मका अधिकांश समस्या स्पष्टतः तथाकथित ठूला भनिने मानिसहरूको आर्थिक या अन्य रूपमा सफल कहलाइने व्यक्तिगत आकाङ्क्षासँग जोडिएका छन् भन्नु कत्ति पनि गल्ती हुँदैन। ठूला कहलिएका मानिसहरू असल पनि भैदिएका भए यो संसार स्वर्गसमान हुने थियो। तर, यहाँ धेरै मानिस ठूला मात्र छन् र बस्नेतले सङ्केत गर्न खोजेझैँ 'असल' चाहिँ छैनन्। बस्नेतले इङ्गित गर्न खोजेका 'असल' मानिसहरू हरेक समाजमा धेरै हुनुपर्छ। तर दुःखको कुरा के हो भने, ती बृहत् परिवर्तनकारी भूमिका खेल्न सक्ने सामर्थ्य राख्दैनन्। समाजमा बस्नेत जस्ता मानिसको बाहुल्य हुने हो भने समाज समृद्ध त नकहलिएला, तर त्यो सबै वर्गका लागि अत्यन्त

न्यायपूर्ण र बस्नेतले भनेझैं 'सुन्दर, शान्त, सफल र सुसंस्कृत' भने अवश्य हुनेछ ।

बस्नेतले आफूले मात्र 'असल' मान्छे हुने बाटो समाएनन्, आफ्ना दुई छोराहरूलाई पनि 'ठूलो' भन्दा पनि 'असल' मान्छे बनाउने ढङ्गबाट शिक्षित र दीक्षित गरेका छन् । उनले दुवै छोरालाई सञ्जीवनी स्कुलमै पढाए । जेठा छोरा एउटा प्राइभेट फर्ममा कार्यरत छन् भने कान्छा छोरा अरुणसिंह बस्नेतको अधिकांश भनेजसो समय परोपकारी कार्यमै बित्छ । जीवन गुजारा गर्न उनको एउटा सानो व्यवसाय छ । बाँकी समय उनी यो पङ्क्तिकार पनि आबद्ध कल्याणकारी सञ्जाल 'हेल्प नेपाल नेटवर्क : नेपालका लागि महिनाको सय रुपैयाँ कोष' को नेपाल च्याप्टरको अध्यक्षको भूमिका निर्वाह गर्नमा व्यस्त रहन्छन् । उनी सो कामबाट एक पैसा पनि तलब लिँदैनन् । बरु, कैयौँ अवस्थामा आफ्नै पैसा खर्च गर्छन् । सो सञ्जालसँग सम्बन्धित स्वयंसेवीहरू भन्ने गर्छन्, "नेपाली-

नेपालीको विश्वास जितेर, नेपाली-नेपालीको पैसाबाट गाउँगाउँमा भएका दर्जनौँ स्कुल र पुस्तकालय निर्माण तथा स्वास्थ्यसँग सम्बन्धित अन्य कैयौँ काम अरुण बस्नेतको नेतृत्वबिना सम्भव हुने थिएन।" ठूलो पैसा र पद नकमाएकामा आफ्ना बुवाको कुनै गुनासो नभएको, बरु केही वर्षअगाडि आफूले सकी-नसकी जम्मा गरेको दुई लाख ५० हजार रुपैयाँ हेल्प नेपाललाई चन्दा दिएर बुवाले झन् कल्याणकारी काममा आफूलाई प्रेरित गरेकामा अरुण दङ्ग छन्।

आफू १० कक्षामा पढ्दा धेरै गैरहने बस्नेत परिवारको चाबहिलस्थित घरमा आजभोलि व्यस्तताले म त्यति जान सक्दिनँ। तर, जुन बेला जान्छु त्यो बेला ममा एउटा अनौठो प्रेरणा र ऊर्जा प्रवाहित हुने गर्छ। अनि, जीवनमा सबै मानिसले खोज्ने शान्ति, सुख र सफलतालाई म पूर्णमानसिंह बस्नेतका आँखाबाट हेर्न थाल्छु। ती यस्ता आँखा हुन्, जसले समाजको प्रत्यक्ष रूपान्तरणसँग नजोडिएको र व्यक्तिगत स्वार्थबाट

माथि नउठेको शान्ति, सुख र सफलतालाई अत्यन्त खोक्रो र निरर्थक देख्ने गर्छन्।

*नागरिक दैनिक, २०६८ भदौ १४*

# छोराछोरी नेपाल फर्काऔँ

ठूलै रमझमका साथ दशैँ सकियो र ठूलै रमझम लिएर तिहार आउँदै छ। तर दशैँको सेरोफेरो र दशैँको समयमा केही यस्ता दृश्य देखिए, जसले मेरो मनमा हामी कस्तो समाजको निर्माण गरिरहेका छौँ र समाजलाई कतातिर डोऱ्याइरहेका छौँ भन्ने प्रश्न गहिरोसँग उब्जाएका छन्। त्यस्ता दृश्यहरू अन्य समयमा पनि नदेखिएका होइनन्; तर यस पटक अलि बढी नै बलियोसँग अनुभूति भएको मात्र हो।

अघिल्ला वर्षहरू जस्तै यो वर्ष पनि हामी आफन्तहरूकहाँ पनि टीका लगाउन गयौँ। तीमध्ये एउटा परिवारमा करीब ८० वर्षका वृद्ध र करीब ७५ वर्षकी वृद्धा छन्। १०-१५ वर्षअगाडि उनीहरूको घर छोराछोरी, नातिनातिनाले भरिएको हुन्थ्यो। दशैँको बेला त्यहाँको उत्साह-उमङ्ग नै बेग्लै हुन्थ्यो। अहिले, स्थायी

रूपमा, उनीहरूका दुई छोराका परिवार अमेरिकामा र एक छोरीको परिवार अस्ट्रेलियामा छन्। दशैँका लागि भनेर उनीहरू आउन सक्ने कुरा भएन। त्यसैले उनीहरूले फोनमार्फत बुवाआमाबाट 'सुस्वास्थ्य, उत्तरोत्तर प्रगति र समृद्धि' को आशीर्वाद लिए। तर त्यो ठूलो घरमा मृत्यु पर्खेर बसेका ती बूढा बाउआमाको न स्वास्थ्य ठीक छ, न कुनै प्रगति छ, न समृद्धि नै। उनीहरूलाई आशीर्वाद दिने पनि कोही छैनन्। बुवा कान कम सुन्छन्। उनलाई मधुमेह भएको छ; अन्य समस्या पनि छन् र उनलाई नियमित रूपमा डाक्टरकहाँ जानुपर्छ। आमाको हालत अरू नाजुक छ। उनलाई पनि मधुमेह भएको छ; हातखुट्टा सुन्निन्छन्; शरीर जताततै दुख्छ र राति राम्रोसँग निद्रा लाग्दैन। सबै छोराछोरी सफल र सम्पन्न भए पनि लामो समयदेखि घरमा बस्दै आएकी एउटी घरेलु कामदारको दयामायामा ती दुवै बूढाबूढीको जिन्दगी घस्रिरहेको छ। को नातेदार टीका लगाउन आउलान् र एक छिन भए

पनि मन बहलाउन पाइएला भनेर बाउआमा यता ढोका कुरेर बसिरहँदा उता छोराछोरी चाहिँ साथीहरूको साथमा हरेक साँझ भिन्दाभिन्दै घरमा पार्टी गरेर, खूब रमाइलोसँग दशैँ मनाउने योजना गरिरहेका थिए होलान् भन्ने अनुमान लगाउन गाह्रो पर्दैन।

दशैँको ठीक अगाडिको कुरा हो। मेरै टोलमा एक वृद्ध दम्पतीको स्थिति झन्डैझन्डै माथि बयान गरिएका मेरा आफन्तको जस्तै थियो। उनका दुई छोरा क्यानडा र अमेरिकामा राम्रै जागिर खाएर बसेका छन्। एक छोरी काठमान्डुमै छिन्। उनी कहिलेकाहीँ बुवाआमालाई भेट्न र सहयोग गर्न आउँछिन्। तर, स्वाभाविक रूपमा उनलाई आफ्नै घर-परिवार सम्हाल्दैमा फुर्सद छैन। ती वृद्धवृद्धामध्ये श्रीमान्को अवस्था अत्यन्त खराब थियो र उनको हेरचाह श्रीमतीले गर्ने गर्थिन्। तर, एकाएक श्रीमतीको स्वास्थ्य नराम्रोसँग बिग्रियो। अस्पताल लगेको केही समयपछि उनलाई आईसीयुमा राखियो। आफन्तहरूले छोराहरूलाई खबर

गरे। छोराहरूले अचानक नेपाल आउनुपर्ने चाँजोपाँजो मिलाउँदा दुई दिन त्यसै बिते। त्यसपछि एक छोरा नेपाल आउन सके; अर्का चाहिँ आउन सकेनन्। छोरो आएको केही घण्टाभित्रमै आमाको निधन भयो। १३ दिनको काम सकेर चौधौँ दिन छोरा फर्किए। श्रीमती गुमाएपछि ती श्रीमान्को हालत बढ्दो रूपमा दयनीय बन्दै गएको छ। छोराहरूले त्यो देख्दैनन्; बाउले त्यो बताउँदैनन्।

माथि उल्लिखित दुइटा घटनाले नेपालका, र खास गरी काठमान्डुका, धेरै मध्यम र उच्च मध्यमवर्गीय परिवारको स्थितिलाई प्रतिविम्बित गर्छन्। व्यक्तिगत प्रगति, समृद्धि र आरामदायी जीवनको खोजीमा बसाइँ सर्नु अत्यन्त स्वाभाविक मानवीय चरित्र हो। तर त्यो चरित्रको दायरालाई कतिसम्म तन्काउने भन्नेमा चाहिँ संसारभरि नै मानिसहरू बढ्दो रूपमा चुक्दै गएका छन्, जसले पारिवारिक मूल्य-मान्यता, सुख-शान्ति, सामाजिक सद्भाव र जीवनको सौन्दर्य सबैमा अत्यन्त

नकारात्मक असर पारिरहेको छ। नेपालका हकमा कुरा गर्दा, हाम्रो पारिवारिक बनोट पश्चिमाहरूको जस्तो होइन। अहिले पनि हाम्रो परम्परामा व्यक्तिभन्दा परिवार हावी हुने गर्छ र त्यो नै परिवार, समाज र मानव सभ्यताका लागि उत्तम बाटो हो भन्नेमा शङ्का छैन। तर, त्यो सुन्दर र सुसंस्कृत परम्परालाई हामी बिस्तारै त्यागिरहेछौँ। जो नेपालीहरू गाईभैँसी र घरखेत बेचेर, ऋृण काढेर, परिवार पाल्न नसकेर र गर्न सक्ने केही नभएर विदेशिए र मौका मिल्दा त्यतै घरजम गरेर नेपालमा परिवार पालिरहेका छन्, तिनलाई दोष दिने ठाउँ छैन। मरता क्या न करता ! तर म जुन वर्गको कुरा गरिरहेको छु, ती पेट पाल्न धौधौ भएर, छोराछोरीलाई राम्रो विद्यालयमा पढाउन नसकेर या आर्थिक रूपमा सधैँ सङ्घर्ष गर्नुपरेर स्थायी रूपमा विदेश भासिएका होइनन्। उनीहरूलाई सुखसयलपूर्ण जीवनको मानवीय आकाङ्क्षाले डोऱ्याएको हो। तर, त्यस क्रममा उनीहरूले बढ्दो रूपमा

मानवताका दुइटा महत्त्वपूर्ण दायित्व बिर्सिंदै गएका छन् ।

पहिलो, पारिवारिक दायित्व, जुन असल समाज निर्माणको आधारशिला हो र दोस्रो, सामाजिक दायित्व, जुन विकसित समाज निर्माणको कडी हो । व्यक्तिगत उपलब्धिमा मात्र जिन्दगी केन्द्रित भएपछि त्यसले कालान्तरमा न व्यक्तिको हित गर्छ, न त समाजको । हो, सबैले शिक्षा, अनुभव, वृत्ति विकास र पैसालाई महत्त्व दिनुपर्छ । तर, घरमा वर्षौंवर्षसम्म अशक्त बाउआमा छोडेर, ती मर्नुभन्दा एक-दुई दिनअगाडि दौडीदौडी मुख हेर्न आएर या मरिसकेपछि दागबत्ती दिन आइपुगेर, 'सफल' र 'सम्पन्न' हुनुको के अर्थ ! त्यस्ता व्यक्तिहरू बहुराष्ट्रिय कम्पनीका प्रमुख कार्यकारी, विश्व ब्याङ्कका निर्देशक या राष्ट्रसङ्घका महासचिव नै किन नबनुन्, तिनले न आफ्ना छोराछोरीलाई पारिवारिक संस्कारको न मानवीय मूल्यमान्यताको महत्त्व सिकाउन सक्छन् । जिन्दगीभर श्री र सम्पत्तिमा

केन्द्रित भएर आफैँले अभ्यास नगरेको आदर्श छोराछोरीलाई कसरी सिकाउने ! तिनका छोराछोरी पनि भोलि बाउआमा जस्तै आत्मकेन्द्रित हुनेछन् भन्नेमा शङ्कै छैन ।

त्यसको असर परिवारमा मात्र होइन, प्रत्यक्ष रूपमा समाजमा पर्छ । त्यसै भएर, संसारमा व्यक्तिहरू ठूला हुँदै गैरहेका छन्, तर समष्टिगत रूपमा समाजहरू भने झन्झन् समस्याग्रस्त बन्दै गैरहेका छन् । हालै राष्ट्रसङ्घका महासचिव बान कि-मुनका विशेष सल्लाहकार तथा विश्वविख्यात अर्थशास्त्री जेफ्री स्याक्सले आफ्नो एउटा लेखको शुरूआत यसरी गरेका थिए, "हामी अत्यन्त चिन्ताग्रस्त समयमा बाँचिरहेका छौँ । संसारमा अभूतपूर्व सम्पत्ति हुँदाहुँदै पनि अत्यन्त ठूलो असुरक्षाको भावना, अस्थिरता र असन्तुष्टि छ । संयुक्त राज्य अमेरिकामा ठूलो बहुमत 'देश गलत दिशामा अघि बढिरहेछ' भन्नेमा विश्वस्त छ । निराशा बढ्दो छ । अन्य धेरै ठाउँमा यही स्थिति व्याप्त छ ।"

अनि आफ्नो फेसबुक पेजको आग्रहमा उनी लेख्छन्, “हामीले एक्काइसौँ शताब्दीको शुरूमा असल समाजको धारणालाई पुनर्परिभाषित गर्नु जरूरी छ ... हामीले भावी पुस्ताको पहरेदार भएर आफैँलाई समाजका आवश्यकताहरूबारे गहिरो रूपमा शिक्षित तुल्याउनुपरेको छ र दयाभाव समाजलाई बलियोसँग बाँधेर राख्ने डोरी हो भन्ने बुझ्नुपरेको छ।” तर हामी व्यक्तिगत सफलता र उन्नतिको खोजीमा यति लिप्त भएका छौँ र त्यसबाट यस्तो समाजको निर्माण गरिरहेका छौँ, जहाँ अरूको त कुरै छोडिदिऊँ, बाउआमाप्रतिको दायित्वसमेत औपचारिकतामा सीमित हुँदै गैरहेको छ। यद्यपि त्यसका लागि छोराछोरी मात्र हैन, बाउआमा पनि त्यत्तिकै दोषी छन्। छोराछोरीले अमेरिकी ग्रिनकार्ड या नागरिकता लिए भनेर दङ्ग पर्ने राम्रै पढेलेखेका र राम्रै घरजम भएका कैयौँ नेपालीलाई मैले भेटेको छु। ‘नेपालमै आएर केही गर्छु’ भन्दा ‘होइन, आउनु हुँदैन’ भनेर छोराछोरीलाई

आउन निरुत्साहन गर्ने नेपालीहरू देखेको छु। त्यस्तो मानसिकताले दीर्घकालमा कसैको पनि हित गर्दैन।

नेपाल जस्तो देशमा त झन् पारिवारिक र देशको रुग्ण परिस्थिति दुवै कारणले गर्दा नेपालीहरू अलि पढेपछि, देखेपछि, केही कार्य-अनुभव बटुलेपछि, बालबच्चा धेरै ठूला नहुँदै, आफ्नो र आमाबाबुको उमेर छँदै देश फर्किनु अत्यन्त जरूरी छ। विकसित विश्वमा सरकारले कम से कम बूढाबूढीका लागि राम्रो प्रबन्ध मिलाइदिएको हुन्छ र स्वास्थ्य सुविधाहरू पनि पुऱ्याइदिएको हुन्छ। हामीकहाँ ती दुवैको व्यवस्था छैन। राम्रा पढेलेखेका, सफल छोराछोरी हुँदाहुँदै बूढाबूढीले आफ्नो बुढेसकाल आफैँ र घरेलु कामदारको सहयोगले सम्हाल्नुपर्ने स्थितिको सृजना भएको छ। अर्को कुरा, यो देशलाई त सक्दो बढी सक्षम नेपालीहरूको खाँचो छ। विकसित विश्वमा हाम्रो जस्तो आदर्शवादी सुनिने राष्ट्रियताको भावनाले त्यति महत्त्व राख्दैन। किनभने, त्यो समाज विकसित भैसक्यो र त्यहाँबाट केही सक्षम

नागरिक विदेशमा बसाइँ सर्दा त्यसले त्यति ठूलो तात्त्विक असर पार्दैन। त्यसमा पनि त्यसको सोधभर्ना ठूलो हदसम्म विदेशबाट स्थायी रूपमा बसाइँ सरेर आउने सक्षम आप्रवासीहरूबाट हुने गर्छ। हाम्रो देशको परिस्थिति नितान्त भिन्न छ। त्यसै पनि गएगुज्रिएको अवस्थामा भएको देशबाट ठूलो सङ्ख्यामा सक्षम नागरिकहरू स्थायी रूपमा विदेशिएपछि देश अक्षमहरूको हातबाट सञ्चालित हुने नै भयो। अनि हामी, 'यस्तो स्थिति छ, नेपाल आएर के गर्ने?' भन्ने टिप्पणीहरू छोराछोरीलाई स्थायी रूपमा विदेशमै बस्न प्रेरित गर्ने र विदेशमै बस्न चाहने दुवैबाट जताततै सुन्ने गर्छौं। हो, शैक्षिक या व्यावसायिक दक्षता कम भएका नेपालीहरूले नेपाल फर्किनुअगाडि राम्ररी सोच्नुपर्छ। किनभने, चाहना र भावना मात्र भएर हुँदैन, आफू र परिवारको बाँच्ने आधार पहिल्याउनैपर्ने हुन्छ। तर, शिक्षित र व्यावसायिक दक्षता भएका अधिकांश नेपाली र तिनका बुवाआमाले त्यो चिन्ता गर्नैपर्दैन।

त्यस्ता धेरै नेपाली नेपाल फर्किएका छन् र तिनले पेशागत, व्यक्तिगत, र कैयौँका हकमा, सामाजिक रूपमा अत्यन्त उपलब्धिमूलक जिन्दगी बिताइरहेका छन्। त्यसरी फर्किने कोही बेकार भएको मैले देखेको छैन। उनीहरूले आफ्ना छोराछोरीलाई कि नेपालकै कि भारतका राम्रा विद्यालयमा राखेका छन् र त्यसबाट पनि उनीहरू सन्तुष्ट छन्।

नेपालमा जीवन गुजारा गर्ने आधार र आफूसँग शिक्षा र सीप छ भने, नेपाल फर्किनका लागि सिर्फ तीन वटा प्रतिबद्धताको आवश्यकता पर्छ। पहिलो, विदेशमा काम गर्दै जाँदा हासिल हुँदै जान सक्ने उच्च पद, प्रतिष्ठा र आम्दानी त्याग्ने दृढता, जसको लोभले गर्दा धेरै आप्रवासी फर्किने रहर हुँदाहुँदै पनि विदेशमै फसेको मैले देखेको छु। दोस्रो, पहिलो सन्तानलाई लगभग १० वर्षको उमेरभन्दा उता विदेशमा नराख्ने दृढता, किनभने त्योभन्दा बढी उमेर हुन थालेपछि उनीहरूलाई फर्काउन भाषागत र अन्य विविध कारणले

असम्भवप्राय: हुन्छ र फर्काउँदा उनीहरूमाथि अन्याय हुन सक्छ। र, तेस्रो प्रतिबद्धता बुवाआमासँग सम्बन्धित छ। उनीहरूले अरूको देखासिकी गरेर छोराछोरी नेपालमै छ भन्दा हीनताबोध गर्ने र अमेरिका या बेलायतमा छ भन्दा गर्व महशूस गर्ने मानसिकतालाई त्याग्नुपर्छ। यति भयो भने धेरै सक्षम नेपालीलाई नेपाल फर्किन खासै गाह्रो पर्दैन। त्यसो गर्दा उनीहरूको विदेशमा बस्नु र जागिर खानुको तथाकथित 'रवाफ' घट्ला; कतिपय स्थितिमा आम्दानी पनि कमै होला; तर एउटा कुरा चाहिँ प्रस्ट छ, उनीहरूले आफूलाई पहिलेभन्दा बढी सुखी र सन्तुष्ट भने अवश्य महशूस गर्नेछन्। बुवाआमा र नातागोतासँगको निकटता, त्यसले बालबच्चामा पार्ने सकारात्मक प्रभाव अनि राष्ट्र र सुसंस्कृत समाजको निर्माणमा उनीहरूले पुर्‍याउन सक्ने योगदानले उनीहरूलाई अझ बढी आनन्दको अनुभूति पनि दिनेछ। त्यति भयो भने कम शिक्षा र सीप भएका कारण विदेशिन बाध्य नेपालीहरूका

लागि पनि नेपालमै अवसरहरू सृजना हुने सम्भावना स्वतः बढ्नेछ ।छु । 'नेपालमै आएर केही गर्छु' भन्दा 'होइन, आउनु हुँदैन' भनेर छोराछोरीलाई आउन निरुत्साहन गर्ने नेपालीहरू देखेको छु । त्यस्तो मानसिकताले दीर्घकालमा कसैको पनि हित गर्दैन ।

नेपाल जस्तो देशमा त झन् पारिवारिक र देशको रुग्ण परिस्थिति दुवै कारणले गर्दा नेपालीहरू अलि पढेपछि, देखेपछि, केही कार्य-अनुभव बटुलेपछि, बालबच्चा धेरै ठूला नहुँदै, आफ्नो र आमाबाबुको उमेर छँदै देश फर्किनु अत्यन्त जरूरी छ । विकसित विश्वमा सरकारले कम से कम बूढाबूढीका लागि राम्रो प्रबन्ध मिलाइदिएको हुन्छ र स्वास्थ्य सुविधाहरू पनि पुऱ्याइदिएको हुन्छ । हामीकहाँ ती दुवैको व्यवस्था छैन । राम्रा पढेलेखेका, सफल छोराछोरी हुँदाहुँदै बूढाबूढीले आफ्नो बुढेसकाल आफैँ र घरेलु कामदारको सहयोगले सम्हाल्नुपर्ने स्थितिको सृजना भएको छ । अर्को कुरा, यो देशलाई त सक्दो बढी सक्षम नेपालीहरूको खाँचो छ ।

विकसित विश्वमा हाम्रो जस्तो आदर्शवादी सुनिने राष्ट्रियताको भावनाले त्यति महत्त्व राख्दैन। किनभने, त्यो समाज विकसित भैसक्यो र त्यहाँबाट केही सक्षम नागरिक विदेशमा बसाइँ सर्दा त्यसले त्यति ठूलो तात्त्विक असर पार्दैन। त्यसमा पनि त्यसको सोधभर्ना ठूलो हदसम्म विदेशबाट स्थायी रूपमा बसाइँ सरेर आउने सक्षम आप्रवासीहरूबाट हुने गर्छ। हाम्रो देशको परिस्थिति नितान्त भिन्न छ। त्यसै पनि गएगुज्रिएको अवस्थामा भएको देशबाट ठूलो सङ्ख्यामा सक्षम नागरिकहरू स्थायी रूपमा विदेशिएपछि देश अक्षमहरूको हातबाट सञ्चालित हुने नै भयो। अनि हामी, 'यस्तो स्थिति छ, नेपाल आएर के गर्ने?' भन्ने टिप्पणीहरू छोराछोरीलाई स्थायी रूपमा विदेशमै बस्न प्रेरित गर्ने र विदेशमै बस्न चाहने दुवैबाट जताततै सुन्ने गर्छौं। हो, शैक्षिक या व्यावसायिक दक्षता कम भएका नेपालीहरूले नेपाल फर्किनुअगाडि राम्ररी सोच्नुपर्छ। किनभने, चाहना र भावना मात्र भएर हुँदैन, आफू र

परिवारको बाँच्ने आधार पहिल्याउनैपर्ने हुन्छ। तर, शिक्षित र व्यावसायिक दक्षता भएका अधिकांश नेपाली र तिनका बुवाआमाले त्यो चिन्ता गर्नैपर्दैन। त्यस्ता धेरै नेपाली नेपाल फर्किएका छन् र तिनले पेशागत, व्यक्तिगत, र कैयौँका हकमा, सामाजिक रूपमा अत्यन्त उपलब्धिमूलक जिन्दगी बिताइरहेका छन्। त्यसरी फर्किने कोही बेकार भएको मैले देखेको छैन। उनीहरूले आफ्ना छोराछोरीलाई कि नेपालकै कि भारतका राम्रा विद्यालयमा राखेका छन् र त्यसबाट पनि उनीहरू सन्तुष्ट छन्।

नेपालमा जीवन गुजारा गर्ने आधार र आफूसँग शिक्षा र सीप छ भने, नेपाल फर्किनका लागि सिर्फ तीन वटा प्रतिबद्धताको आवश्यकता पर्छ। पहिलो, विदेशमा काम गर्दै जाँदा हासिल हुँदै जान सक्ने उच्च पद, प्रतिष्ठा र आम्दानी त्याग्ने दृढता, जसको लोभले गर्दा धेरै आप्रवासी फर्किने रहर हुँदाहुँदै पनि विदेशमै फसेको मैले देखेको छु। दोस्रो, पहिलो सन्तानलाई

लगभग १० वर्षको उमेरभन्दा उता विदेशमा नराख्ने दृढता, किनभने त्योभन्दा बढी उमेर हुन थालेपछि उनीहरूलाई फर्काउन भाषागत र अन्य विविध कारणले असम्भवप्राय: हुन्छ र फर्काउँदा उनीहरूमाथि अन्याय हुन सक्छ। र, तेस्रो प्रतिबद्धता बुवाआमासँग सम्बन्धित छ। उनीहरूले अरूको देखासिकी गरेर छोराछोरी नेपालमै छ भन्दा हीनताबोध गर्ने र अमेरिका या बेलायतमा छ भन्दा गर्व महशूस गर्ने मानसिकतालाई त्याग्नुपर्छ। यति भयो भने धेरै सक्षम नेपालीलाई नेपाल फर्किन खासै गाह्रो पर्दैन। त्यसो गर्दा उनीहरूको विदेशमा बस्नु र जागिर खानुको तथाकथित 'रवाफ' घट्ला; कतिपय स्थितिमा आम्दानी पनि कमै होला; तर एउटा कुरा चाहिँ प्रस्ट छ, उनीहरूले आफूलाई पहिलेभन्दा बढी सुखी र सन्तुष्ट भने अवश्य महशूस गर्नेछन्। बुवाआमा र नातागोतासँगको निकटता, त्यसले बालबच्चामा पार्ने सकारात्मक प्रभाव अनि राष्ट्र र सुसंस्कृत समाजको निर्माणमा उनीहरूले

पुऱ्याउन सक्ने योगदानले उनीहरूलाई अझ बढी आनन्दको अनुभूति पनि दिनेछ। त्यति भयो भने कम शिक्षा र सीप भएका कारण विदेशिन बाध्य नेपालीहरूका लागि पनि नेपालमै अवसरहरू सृजना हुने सम्भावना स्वत: बढ्नेछ।

प्रगतिको नाममा हामीले पारिवारिक मूल्य-मान्यता तथा सामाजिक दायित्व दुवै नष्ट गर्दै गैरहेका छौँ। बुवाआमाले मात्र 'तिमीहरूले पढ्यौ; सिक्यौ; अलिकति कमायौ; नकमाएको भए पनि हामीसँग नै पुग्दो छँदै छ; अब आऔ, यहीँ जस्तो हुन्छ त्यस्तै गरेर बसौँ; हाम्रो, तिमीहरूको, केटाकेटीको सबैको लागि राम्रो हुन्छ; देशको लागि पनि राम्रो हुन्छ' भन्ने हो भने, शिक्षा र सीप भएका धेरै युवा फर्किन्छन् भन्नेमा कुनै शङ्का छैन। बाध्यताहरूलाई अपवाद मानेर भन्नुपर्दा, मर्ने बेला दागबत्ती दिन जाने संस्कृतिको विकास गर्नुभन्दा जिन्दगीमा अलि कमै प्रगति भए पनि पारिवारिक र सामाजिक दायित्वबोधको संस्कृति विकास

गर्नु अत्यावश्यक भैसकेको छ। त्यसैले, सम्भव हुने सबैले उचित समयमै छोराछोरीलाई नेपाल फर्काउनेबारे गहिरोसँग सोच्ने हो कि ?

*नागरिक दैनिक, २०६८ असोज २५*

# कल्याणकारी समाज, कल्याणकारी राज्य

भारतमा त्यहाँको योजना आयोगले एक दिनमा ५१ रुपैयाँ खर्च गर्न सक्ने क्षमता राख्ने भारतीयलाई गरीब भन्न नमिल्ने बतायो। त्यसपछि त्यहाँ गरीबीको स्तरलाई अवमूल्यन गरियो भनेर योजना आयोगको ठूलो आलोचना भयो। यता नेपाल सरकारले झन्डै भारतकै जस्तो तथ्याङ्क सार्वजनिक गऱ्यो। देशमा गरीबी गत छ वर्षमा झन्डै छ प्रतिशतले घटेर अहिले २५ प्रतिशतमा झरेको बताउँदै तथ्याङ्क विभागले वर्षमा १९ हजार दुई सय ६१ रुपैयाँभन्दा कम आम्दानी गर्नेहरूलाई मात्र गरीब मान्न सकिने उल्लेख गऱ्यो। त्यो भनेको दिनको ५२ रुपैयाँ ७५ पैसाको आम्दानी हो र त्यसको अर्थ अब दिनमा ५३ रुपैयाँ आम्दानी गर्ने नेपालीलाई गरीब भन्न मिल्दैन। गरीबी घट्यो भन्न पाउनु गर्वको विषय हो। तर, संसारका

जति नै ठूला प्राज्ञ या कहलिएका संस्थाले तयार पारेका मानक र सूचकहरू प्रयोग गरिएका किन नहुन्, दिनमा ५३ रुपैयाँ आम्दानी गर्ने व्यक्ति गरीबीको रेखामुनि पर्दैन भनेर निष्कर्ष निकाल्नु मानवताको उपहास हो, निर्दयताको पराकाष्ठा हो।

गरीबी मापनका लागि प्रयोग गरिएको प्रतिव्यक्ति प्रतिदिन '२२ सय किलो क्यालोरी' शक्ति दिने खाना खान पाउनु मात्र गरीबीको रेखामाथि रहने आधार हुनै सक्दैन। एक पटक सामान्य हिसाब गरेर हेरौँ। '२२ सय किलो क्यालोरी' शक्ति दिने खानाका लागि दिनमा करीब ३३ रुपैयाँ लाग्ने सर्वेक्षणमै बताइएको छ। त्यसपछि बाँकी रह्यो २० रुपैयाँ। त्यति रकम त्यो व्यक्तिले कहाँकहाँ मात्रै खर्च गर्ने!

झुपडीमा जिन्दगी गुजार्नु या चीसो छिँडीमा सुकुलमा सुत्नु, बालबच्चालाई जाडोका लुगा किन्दिन नसक्नु, घरको कामले बालबच्चालाई विद्यालय पठाउनै नसक्नु या तिनलाई कापी-कलम किन्न नसक्नु, परिवारमा

कोही बिरामी हुँदा तिनलाई अस्पताल लान नसक्नु या औषधि किन्न नसक्नु गरीबी हो कि होइन ? के जीवनका ती सबै आधारभूत समस्या सम्बोधन गर्न २२ सय किलो क्यालोरी दिने खाना खाएर बाँकी रहेको दिनको २० रुपैयाँ अर्थात् महिनाको ६ सय रुपैयाँले पुग्छ ? कसैले पुऱ्याई नै हालेछ भने पनि त्यो गरीब होइन भन्न मिल्छ ? गरीबी नाप्ने मापक र सूचकहरू निर्माण गर्ने ती महान् प्राज्ञहरू अनि ती मापक र सूचकहरूलाई प्रयोग गर्ने ती ठूलठूला नीतिनिर्माताहरूले परिवारै लिएर एकपल्ट कुनै विकट गाउँमा गएर श्रीमान्का लागि दिनको ५३ रुपैयाँ र श्रीमतीका लागि दिनको ५३ रुपैयाँले जीवन गुजारा गर्दा गरीब महशूस हुँदो रहेछ या रहेनछ भन्ने अनुभव गरिदिए गरीबी के हो भन्ने अलिकति चेतना हुन्थ्यो होला ।

तर, समस्या गरीबी निर्धारण गर्न प्रयोग भएका मानक र सूचक या तिनलाई प्रयोग गर्ने प्राज्ञ र

नीतिनिर्माताहरूको मात्र होइन। त्यसलाई अलिकति फराकिलो परिधिमा विश्लेषण गर्नुपर्ने हुन्छ। मूल कुरा के हो भने, जबसम्म मानिसहरूले आत्मकेन्द्रित चिन्तनलाई प्राथमिकता दिन्छन् तबसम्म माथि उल्लेख गरिए जस्तो मानसिकता कायम रही नै रहन्छ। लोकतन्त्र, उदारवाद र समान अवसरमूलक समाजको नाममा मानिसले मानवता गुमाइसकेको छ। अधिकांश स्थितिमा मान्छेले आफू गरीब हुँदा 'समतामूलक समाज' को कुरा गर्छ; तर धनी भएपछि 'समान अवसरमूलक समाज' को वकालत गर्छ। ती दुइटामा ठूलो भिन्नता छ भन्ने उसले बिर्सन्छ।

परिणामस्वरूप विश्वले पहिले कहिले पनि नदेखेको आर्थिक, प्राज्ञिक र प्राविधिक विकास गर्दा पनि र संसारभरि विश्वनेता र विश्वसंस्थाहरूले सधैँभरि गरीब र धनीबीचको दूरी घटाउने रटना लगाए पनि समष्टिगत रूपमा हेर्दा धनी र गरीबबीचको दूरी झन्झन् बढ्दै गएको छ। आर्थिक सहयोग तथा

विकास सङ्गठनले गरेको सर्वेक्षण अनुसार, गत दुई दशकमा उसले अध्ययन गरेका झन्डैझन्डै सबै देशहरूमा आर्थिक असमानता बढेको छ। परिणामस्वरूप लोकतन्त्र, उदारवाद, वृत्ति विकासका अवसर, सबै दृष्टिकोणबाट विकासको उत्कर्ष मानिने संयुक्त राज्य अमेरिकामा समेत सबभन्दा धनी एक प्रतिशतको हातमा देशको ४० प्रतिशत सम्पत्ति केन्द्रित भएको र विभिन्न भरपर्दा सर्वेक्षणले देखाएका छन्। अमेरिकामा त्यहाँको व्यापारिक केन्द्र वलस्ट्रिटलाई लक्ष्य गर्दै 'वलस्ट्रिट कब्जा गरौँ' अभियान त्यसै शुरू भएको होइन। 'वलस्ट्रिट कब्जा गरौँ' अभियानकर्ताहरूले 'हामी ९९ प्रतिशत हौँ' भन्ने नारा लगाइरहेका छन्। किनभने, उनीहरूको दृष्टिकोणमा ९९ प्रतिशत जनताले वास्तविक न्यायको अनुभूति गरिरहेका छैनन्। अमेरिकाबाट सो अभियान विश्वका दर्जनौँ वित्तीय शहरमा फैलिसकेको छ। नफैलियोस् पनि कसरी! अमेरिकामा मात्र होइन, विश्वमै धनी र गरीबबीचको खाडल भयावह छ।

कसैले यो डरलाग्दो परिस्थितिमा प्रश्न उठायो भने त्यसलाई सामान्यतया साम्यवादी या लोकतन्त्रको विरोधीका रूपमा चित्रण गरिन्छ। धनीहरूलाई त्यसबारे प्रश्न गर्‍यो भने उनीहरू व्यक्तिगत स्वतन्त्रता, लोकतन्त्र, उदारवादको भाषण दिन थाल्छन्। त्यति मात्र होइन, उनीहरू आफ्नो व्यापार र उद्योगहरूका कारण देश, र कतिपयका हकमा, विदेशमा पनि हजारौँ, लाखौँ मानिसले प्रत्यक्ष र अप्रत्यक्ष रोजगारी पाएको दुहाई दिन थाल्छन्। त्यो दावीलाई गलत भन्न मिल्दैन। तर, त्यसको समष्टिगत परिणाम तुलनात्मक रूपमा न्यायपूर्ण र समतामूलक समाजमा रूपान्तरण हुन सकेको छैन भने त्यसबारे गम्भीरतापूर्वक सोच्ने कि नसोच्ने ?

सोचेरै होला, आजभोलि उदारवादी अर्थतन्त्रका लागि विश्वमै प्रतिष्ठित जेफ्री स्याक्स जस्ता प्राध्यापकहरूले समाजलाई बढी न्यायपूर्ण र समतामूलक बनाउन नयाँ ढङ्गबाट सोच्नुपर्ने तर्क गर्न थालेका छन्।

कोही समाजको सकारात्मक रूपान्तरणका लागि मानव हितको प्राचीन सोचलाई आधुनिक समाजमा अवलम्बन गर्न करुणायुक्त अर्थतन्त्र (कम्प्यासनेट इकोनमिक्स) को कुरा गरिरहेका छन् । अनि वारेन बफेट र बिल गेट्स जस्ता संसारकै सबभन्दा धनाढ्यहरू अमेरिकाका सबभन्दा धनीहरूलाई 'आफ्नो सम्पत्तिको सक्दो बढी अंश परोपकारका लागि दान गर्न प्रतिबद्धता जनाऔँ' भन्ने अभियानमा जुटेका छन्, जसमा झन्डै ६० धनाढ्यले आफ्नो ५० प्रतिशत या त्योभन्दा बढी सम्पत्ति परोपकारका लागि दिने बाचा गरिसकेका छन् ।

यी सबै प्रयास समाजलाई न्यायपूर्ण बनाउने र सकारात्मक रूपमा परिवर्तन गर्ने सराहनीय सोचका परिणाम हुन् । तर, त्यो सोचले व्यापकता नलिएसम्म समष्टिगत परिवर्तन भने सम्भव नहुने स्पष्ट देखिएको छ । त्यो व्यापकता स्वचेतनाबाट आउने रहेछ, कुनै राजनीतिक वादबाट होइन । राजनीतिक वादले स्वचेतना

आउँदो हो त अहिलेसम्म संसारमा प्रयोग भएका साम्यवाद, पूँजीवाद, लोकतान्त्रिक समाजवाद, एकतन्त्रीय राजतन्त्रवाद, निरङ्कुशतावाद आदि राज्य व्यवस्थाहरूले समाजलाई धेरै बढी न्यायपूर्ण र समतामूलक बनाइसक्ने थिए। तर त्यसो हुन सकेन। त्यसको एउटै कारण हो– माथि भनिएझैँ मानिसहरूमा बढेको आत्मकेन्द्रित चिन्तन, जसलाई संसारभर नै सफलता र महानताको आधार बनाइयो। जबसम्म तुलनात्मक रूपमा सक्षम र धनी मानिसहरूमा स्वस्फूर्त रूपमा आफूभन्दा कमजोरका लागि केही गर्नुपर्छ भन्ने जिम्मेवारीबोधको भावना आउँदैन, तबसम्म यो समाज र संसार सुसंस्कृत र शान्त हुनै सक्दैनन्। व्यक्तिमा जिम्मेवारीबोधको भावना आएपछि मात्र राज्य जिम्मेवारपूर्ण हुन सक्छ। तर, अधिकांश नागरिक आफू जिम्मेवार नभैकन राज्य बढी जिम्मेवार होस् भन्ने चाहन्छन्। त्यो सम्भवै हुँदैन। हामी परिवार, प्राज्ञिक संस्था र समाजबाट जिम्मेवारीबोध नभएका नागरिकहरू उत्पादन गर्छौं र

तिनीहरू नै सरकारमा पुगेपछि जिम्मेवार भैदिऊन् भन्ने चाहन्छौँ। त्यही विडम्बनाको परिणाम हो, संसारमा देखिएको धनी र गरीबबीचको खाडल।

त्यसलाई साँच्चिकै परिवर्तन गर्न चाहने हो भने, कतिपय धनाढ्य अमेरिकीमा ढिलो गरी फुरेको चेतना सबै मानिसहरूमा चाँडै फुर्नु जरूरी छ। आफ्नो समाज झुपडपट्टीले भरिभराउ छ, विद्यार्थीहरू तुइनमा झुन्डिएर पढ्न जान्छन् र एउटी आमा भोको पेट भर्न नसकेर छोराछोरीसहित आत्महत्या गर्छिन् भने, आफ्नो व्यापारलाई झन्झन् विस्तार गर्दै अति धनाढ्यको सूचीमा नाम दर्ता गराउने लक्ष्य लिने व्यापारीले आफ्नै आँखाअगाडिका त्यस्ता गम्भीर समस्याहरूलाई सम्बोधन गर्न सानै भए पनि पहल लिने कि नलिने ? त्यसै गरी, अरूहरूले पनि आआफ्नो क्षमता अनुसार व्यावहारिक रूपमा सम्भव भएसम्म कल्याणकारी भाव र कर्मलाई प्रवर्धन गर्ने कि नगर्ने ?

कल्याणकारी भावना भनेको नहुनेलाई आर्थिक सहोयग

गर्ने सोच मात्र होइन; त्यो आफ्नो उन्नतिसँगसँगै अरूको भलो गर्ने चिन्तन हो, जसले अन्ततोगत्वा आफू, आफ्नो परिवार र भावी सन्ततिलाई नै सुख र शान्ति दिन्छ। व्यक्तिमा त्यस्तो चिन्तन विकास गर्न सकियो भने मात्र कल्याणकारी समाजको निर्माण हुन्छ। कल्याणकारी समाजको निर्माण भयो भने मात्र राज्य कल्याणकारी हुन सक्छ, जहाँ दिनको ५३ रुपैयाँ कमाउने व्यक्तिलाई गरीबीको रेखामाथि राखेर हेर्नुपर्ने विडम्बनापूर्ण स्थिति रहँदैन, जहाँ धनीहरू घीनलाग्दो पाराले धनी र गरीबहरू एक पेट खान नपाउने ढङ्गले गरीब हुँदैनन्, जहाँ गरीबहरूले धनीका विरुद्ध विद्रोह गर्दैनन् र जहाँ धनीहरूले महलबाट निस्किनेबित्तिकै जतातत्तै गरीबी हेर्नुपर्दैन।

वास्तविकता के हो भने, यो संसार गरीब छँदै छैन; केवल मान्छेको मानसिकता गरीब छ। धनीहरूले वास्तै नगरेर गरीबहरू गरीब भएका हुन्; ती आफूहरूसँग नभएर गरीब भएका होइनन्। धनीहरूमा गरीबहरू

दिनको ५३ रुपैयाँले बाँच्न सक्छन् भन्ने सोच हावी भएर ती गरीब भएका हुन्। त्यो सोचमा परिवर्तन नआएसम्म धनी र गरीबबीचको खाडल कम हुनै सक्दैन ।

*नागरिक दैनिक, २०६८ कात्तिक ८*

# गगन थापा सभापति किन नहुने ?

गिरिजाप्रसाद कोइरालाको निधनपछि व्यक्त शोक र उर्लिएको मानवभेलले कोइरालाप्रतिको आमश्रद्धालाई भन्दा पनि देशको परिस्थितिबाट आहत भएको र पीडालाई भावुकतामा अभिव्यक्त गर्न खोजिरहेको आम मनोविज्ञानलाई दर्शाउँछ। आम मनोविज्ञान सामान्यतया अन्धो हुन्छ। त्यसले विगत र भविष्यलाई हेर्दैन; त्यो वर्तमानमा बहकिन्छ, जुन क्षणिक हुन्छ। त्यसपछि जीवन र जगत्का वास्तविकताहरू पुनः दोहोरिन थाल्छन्। वास्तविकता चाहिँ के हो भने, कोइरालाको निधनसँगै नेपाली राजनीति र नेपाली काङ्ग्रेसमा रहेको कोइराला परिवारको एकछत्र र ठूलो हदसम्म अधिनायकवादी वर्चस्व अब बिस्तारै धूमिल हुँदै जानेछ, जुन नेपाली राजनीति र नेपाली काङ्ग्रेसको लोकतान्त्रीकरण तथा शुद्धीकरणका लागि अत्यन्त

सहायकसिद्ध हुन सक्छ। कोइरालाको निधनले नेपाली काङ्ग्रेसलाई आफ्नो गुमेको साख पुनःस्थापित गर्ने अवसर प्रदान गरेको छ। तर त्यो त्यति बेला मात्र सम्भव हुन्छ, जब दलभित्र कोइराला चरित्र र प्रवृत्तिको अन्त्य हुनेछ। त्यो कसरी सम्भव होला ?

छिटै हुने भनिएको नेपाली काङ्ग्रेसको महाधिवेशनबारेको अन्योल कायम भए पनि दलको सभापतिको पदका दावेदारहरूले आआफ्नो पक्षमा ‘लबिङ’ शुरू गरिसकेका छन्। तर हालसम्म नाम बाहिर आएका सम्भावित उम्मेदवारहरू त्यही पुस्ताका छन्, जसलाई कोइरालाले हुर्काए-बढाए र जसले जिन्दगीभर राजनीति गरेर यो सुन्दर, हुँदाखाँदाको देशलाई बनाउन सकेनन्; बरु आफ्ना कमजोरीका लागि सधैँ कुनै न कुनै पक्ष र परिस्थितिलाई दोष दिइरहे। ‘हामीले लोकतन्त्रका लागि लड्यौँ’ भन्नु मात्र पर्याप्त हुनै सक्दैन, जबसम्म लोकतन्त्रले भोको पेट भर्न नातावाद, कृपावाद, भ्रष्टाचार, हत्या, हिंसा र विभेदलाई कम गर्न मदत पुऱ्याउँदैन।

हाम्रो जीवनकालमा केही दिन नसक्ने लोकतन्त्रबाट हाम्रा छोरा-नातिले सुख पाउलान् भनेर सन्तोष लिनु भाग्यवादीले 'मेरो पनि दिन कसो नआउला' भनेर पर्खिनु जस्तै हो। लोकतान्त्रिक प्रतिफलको बोझ हामीले पनि हामीभन्दा मुनिको पुस्तालाई बोकाइदियौँ भने देशका लागि त्योभन्दा दुर्भाग्यपूर्ण केही हुनेछैन। हालसालै मैले एक वरिष्ठ नेतालाई "यही ताल हो भने तपाईंहरूको पुस्ताको त कुरै छोडिदिऊँ, हामी र हामीभन्दा मुनिको पुस्ताले पनि शान्त र समुन्नत नेपाल देख्न पाउने सम्भावना अत्यन्त न्यून देखिन्छ" भन्दा उनी शिर नुहाएर मौन रहिरहे, मानौँ उनले नेपालको भविष्यलाई इङ्गित गरिरहेका थिए।

दलभित्र लोकतन्त्रको धज्जी उडाएको र आडम्बरै आडम्बरले गाँजेको भए पनि नेपाली काङ्ग्रेस नेपाली राजनीतिमा लोकतन्त्रको पर्यायवाचीका रूपमा स्थापित दल हो। तर गिरिजाप्रसाद कोइरालाको छायाबाट बल्ल मुक्ति पाएको दलका कार्यकर्ताहरूले अब पनि

तुलनात्मक रूपमा इमानदार, सक्षम, अध्ययनशील, देखेका-बुझेका र राजनीति 'फोहोर' मात्र होइन 'आदर्श' पनि हो भनेर स्थापित गर्न सक्ने पृष्ठभूमि र आत्मविश्वास भएका नेताहरूलाई प्रवर्धन गर्न नसक्ने हो भने न यो देशको न त नेपाली काङ्ग्रेसकै भलो हुने देखिन्छ। त्यो उज्ज्वल भविष्य सोच्न नजान्ने, बोल्न नजान्ने, बुझ्न नजान्ने, पढ्न नजान्ने, सधैँ पर्दापछाडि तिकडमपूर्ण र गुटबन्दीपूर्ण राजनीति गर्ने, अझ कतिपयका हकमा, साँझ पऱ्यो कि जाँड खाने, राजनीतिज्ञहरूबाट कुनै पनि हालतमा आशा गर्न सकिँदैन। अहिले जो-जसले सभापतिका लागि दावा गर्दै छन्, ती र तिनका पुस्ताका कुनै पनि नेताले चाहे नै भने पनि केही गर्न सक्दैनन्। किनभने, तिनमा नेतामा हुनुपर्ने गुण छँदै छैन। ती नियमित आकस्मिकताका कारण नेता बनेका हुन्। यो विडम्बनापूर्ण परिस्थितिबाट मुक्ति पाउन प्रयास गर्ने सिर्फ दुइटा विकल्प छन्।

पहिलो, नेपाली काङ्ग्रेसभित्रकै गगन थापा जस्ता

आशालाग्दा युवा नेताहरूलाई दलको उच्च नेतृत्व सम्हाल्न प्रोत्साहन र प्रवर्धन गर्ने। उनीहरूमा कमजोरी छैन भन्ने यो पङ्क्तिकारको आशय होइन र आज आशालाग्दा भनिएका नेताहरू भोलि नबिग्रिएलान् भन्न पनि सकिँदैन। तर, आजलाई हेर्दा थापा र उनीभन्दा माथिल्लो पुस्ताका कैयौँ युवा नेतामा दलको नेतृत्व सम्हाल्न सक्ने अनुभव र परिपक्वता छैन भन्नु गलत हुन जान्छ। शेरबहादुर देउवा, रामचन्द्र पौडेल र सुशील कोइरालाको पुस्ताका पूर्णत: विफल नेताहरूले दल र देश हाँक्न सक्छन् भन्ठान्नु, तर प्रतिभावान् र ऊर्जाशील युवाहरूबाट त्यो काम हुन सक्दैन भन्नु अत्यन्त साँगुरो सोच हो। गगन थापा युवा नेतृत्वको प्रतिनिधि पात्रका रूपमा स्थापित भएकाले यो आलेखको शीर्षकमा उनको नाम लिइएको हो र आलेखको आशय युवाहरूले अब नेपाली काङ्ग्रेसमा उच्च नेतृत्वको दावा गर्नुपर्छ भन्ने हो। त्यस्ता युवा नेताहरूले आँट गरेर, तर लोकतान्त्रिक ढङ्गबाट,

नेपाली काङ्ग्रेसलाई जर्जर तुल्याउने विफल पुस्ताका नेताहरूलाई विस्थापन नगरी भएको छैन।

बेलायतमा घागडान-घागडान, त्यो पनि हाम्रा जस्ता होइनन्, इमानदार र सक्षम बूढाहरू हुँदाहुँदै, त्यहाँका दुइटा प्रमुख दलमध्येको कन्सरभेटिभ पार्टीले ३९ वर्षका डेभिड क्यामरुनलाई आफ्नो नेता चयन गऱ्यो। सोही दलले सन् १९९७ मा ३६ वर्षीय विलियम हेगलाई आफ्नो नेता चयन गरेको थियो। बेलायतकै अर्को प्रमुख दल लेबर पार्टीले ४१ वर्षको उमेरमा टनी ब्लेरलाई दलका नेता बनायो, जसले ४४ वर्षको उमेरमा प्रधानमन्त्री बनेर देशलाई १० वर्ष नेतृत्व प्रदान गरे। ती युवा नेताहरूको नेतृत्वमा ६०-६५ वर्ष नाघेका, कैयौँ चोटि महत्त्वपूर्ण मन्त्रालय सम्हालेका वरिष्ठ मन्त्रीहरू सहजता र इज्जतका साथ पछि लागे। त्यसो गर्न उनीहरूले कुनै लाज मानेनन्। तर, हामीकहाँ चाहिँ कतिपय बूढा नेताले छोरासमानको व्यक्तिपछाडि लाग्दा लाज हुन्छ भन्ने सोच्छन्। हो,

बेलायत र नेपालको तुलना हुन सक्दैन; तर अरूका राम्रा अभ्यासहरू सिक्न प्रयास नगर्ने हो भने हाम्रो विकासको गति सधैँ कछुवाको चालमा सीमित रहनेछ।

युवा नेताहरूले पनि 'मुखले भन्न सजिलो छ; वास्तविकता चाहिँ के हो भने, तिनै तिकडमधारी पुराना नेताहरूको आडभरोसा नलिने हो भने आफ्नै राजनीतिक भविष्य चौपट हुन्छ' भनेर सोच्न थाले भने, त्यस्ता युवाहरूको प्रतिष्ठा पनि लामो समय कायम रहनेछैन। त्यस्ता युवाहरूमा पनि भरोसा गर्न सकिएन भने, देशले कसमा भरोसा गर्ने? तिनले पनि जिन्दगीभर राजनीति गर्लान्, मन्त्री-प्रधानमन्त्री बन्लान्, तर डुङडुङ गन्हाउने परिचय बोकेर धारण गरेको पदलाई आफ्नै स्वार्थी समर्थकहरूबाहेक कसले पुछ्ला र? अनि देश चाहिँ जस्ताको तस्तै छोडेर मर्ने हो भने, कोइरालाको निधनमा जत्तिकै जनसागर उर्लिए पनि के त्यसको कुनै तात्त्विक अर्थ होला र? त्यो परिस्थितिमा परिवर्तन लेराउन आज देखिएका आशालाग्दा

युवा नेताहरूले ज्येष्ठताका आधारमा मात्र होइन, स्वच्छ प्रतिस्पर्धाका आधारमा कम उमेरका नेता पनि माथि जान सक्छन् भन्ने कुरालाई प्रमाणित गरेर देखाउनुपरेको छ । त्यसका लागि दलका सबै युवाले साथ दिनुपर्ने हुन्छ । किनभने, यो देश मूल रूपमा युवाहरूको हो; तिनका छोराछोरीको हो । आफ्नो निहित स्वार्थले छोराछोरीको भविष्यसमेत अन्धकार तुल्याइदिनु महापाप हुन्छ ।

त्यसै गरी हामीले राम्रा पढेका, देखेका, जानेका, नेतृत्व क्षमता भएका, इमानदार युवाहरू, आफन्तहरू, छोराछोरी, भाइभतिजाहरूलाई राजनीतिमा प्रवेश गर्न प्रेरित गर्नैपर्ने भएको छ । राम्रा सबैलाई स्थायी रूपमै विश्व ब्याङ्क र राष्ट्रसङ्घमा जागिर खानुपर्ने, स्थायी रूपमै विदेशमा बस्नुपर्ने, डाक्टर, इन्जिनियर, व्यवस्थापक र ब्याङ्कर हुनुपर्ने अनि बाँकी रहेकाहरूमा पनि गएगुज्रेकाहरूले राजनीति गरेपछि राजनीतिको हाल बेहाल त हुने नै भयो । साथीहरूसँगको गफगाफमा

सबैले भन्छन्, "राजनीतिज्ञहरू इमानदार भैदिए सब ठीक हुन्छ।" तर, ठीक मान्छेले राजनीति गरे पो ठीक हुन्छ ! अधिकांशत: गलत मान्छे राजनीतिमा लागेपछि ठीक खोजेर कहाँ पाइन्छ ! थोरै असल मानिसहरू फटाहाहरूको छायामा पर्नु स्वाभाविक भैहाल्यो। सक्षम, इमानदार आफन्तहरूलाई चाहिँ 'ओहो ... राजनीतिमा लाग्नु हुन्न है' भन्ने, अनि राजनीतिमा 'आदर्श' खोज्ने कुरा मिल्दैमिल्दैन। धेरैअगाडि यो पङ्क्तिकारले अर्को एउटा लेखमा उल्लेख गरेको थियो, द्वितीय विश्वयुद्धपछि बेलायतमा सन् २००७ मा टनी ब्लेरको प्रधानमन्त्रित्व काल अन्त्य हुँदासम्म बनेका ११ प्रधानमन्त्रीमध्ये नौ जना विश्वप्रसिद्ध अक्सफर्ड र केम्ब्रिज विश्वविद्यालयका उत्पादन रहेछन्। राम्रो विश्वविद्यालयमा पढेका मात्र राम्रा राजनीतिज्ञ हुन्छन् भन्ने होइन। तर, राम्रो शैक्षिक पृष्ठभूमि भएकाहरू इमानदार पनि भैदिए भने तिनले बढी राम्रो गर्न सक्छन् भन्नेमा कुनै शङ्का छैन। बेलायतको त्यो

उदाहरण अत्यन्त राम्रो शैक्षिक पृष्ठभूमि भएका मानिसहरूले पनि राजनीति गर्दा रहेछन् भन्ने एउटा ज्वलन्त प्रमाण हो। नेपालमा पनि हामीले राम्रा पृष्ठभूमिका युवाहरूलाई राजनीतिमा प्रेरित गरेर आधारभूत राजनीतिक संस्कारमा परिवर्तन लेराउन प्रयास नगर्ने हो भने जतिसुकै राम्रो संविधान बनाए पनि त्यसले कुनै तात्त्विक परिणाम लेराउनेछैन। २०४७ सालको संविधान कम राम्रो थियो र ? देश संविधान खराब भएर होइन, राजनीतिक संस्कार खराब भएर बिग्रिएको हो। अहिले पनि हामी कागजी दस्तावेज बदल्ने कुरा गरिरहेका छौँ; राजनीतिक संस्कार बदल्न के आवश्यक छ भन्नेबारे बहस गरिरहेका छैनौँ। राजनीतिक संस्कार परिवर्तन गर्न सक्षम युवाहरूलाई राजनीति छिःछिः, दुर्दुर् गर्ने क्षेत्र होइन, त्यो समाज रूपान्तरणका साथसाथ व्यक्तिगत शान-सम्मानका लागि पनि अत्यन्त आकर्षक क्षेत्र हो भन्नेमा विश्वास दिलाउनु जरूरी भएको छ। त्यो त्यति बेला मात्र सम्भव हुन्छ, जब

विभिन्न राजनीतिक दलभित्र रहेका प्रतिभावान् युवाहरूले उदाहरणीय आचरण पेश गर्दै नेतृत्वदायी भूमिका लिने आत्मविश्वास प्रदर्शन गर्छन्।

त्यसैले नेपाली काङ्ग्रेसको अब हुने महाधिवेशनमा शेरबहादुर देउवा, रामचन्द्र पौडेल र सुशील कोइरालाहरूले 'हामीले प्रयास गर्‍यौं, सकेनौं; ल अब तिमीहरू आऔ; देश बनाऔ' भनेर युवाहरूलाई अघि लगाएर आफू तिनको पछि लागे सबभन्दा राम्रो हुने थियो। तर त्यसो गर्ने संस्कारबाट ती हुर्किएकै होइनन्; त्यसैले तिनबाट त्यस्तो आदर्शको अपेक्षा गर्नु बेकार हुन्छ। तर तिनले त्यसो नगर्ने हो भने, तिनलाई युवा नेताहरू मिलेर एकपल्ट राम्रै धक्का दिनैपर्ने भएको छ। कतिलाई यस्तो धारणा अतिशयोक्तिपूर्ण लाग्ला र पक्का छ, एकैपल्टमा युवाहरू सफल हुने पनि छैनन्। तर, उनीहरूको प्रयासको असर भने नेपाली काङ्ग्रेसमा मात्र होइन, अन्य दल र राजनीतिबारेको सिङ्गो सामाजिक सोचमै पर्नेछ।

त्यसले संविधान होइन, देशको दुर्दशाको मूल कारण – राजनीतिक संस्कार – बदल्न सघाउ पुऱ्याउनेछ। नत्र, यो सुन्दर देश र यहाँका निर्दोष नागरिकहरूमाथि नालायकहरूले रजाइँ गरिरहनेछन्। लायकहरूले राजनीतिमा प्रवेश नै गर्नेछैनन्।

*नागरिक दैनिक, २०६६ चैत ११*

# कोइरालालाई यसरी पनि हेर्ने कि ?

गिरिजाप्रसाद कोइरालाको मृत्युपछि उनीसँग सम्बन्धित विषयहरूबारे पत्रपत्रिकामा जेजति लेखिए, तिनबाट यो पङ्क्तिकार अनौठो अन्योलमा परेको छ। पूर्वाग्रह पटक्कै होइन, बरु दृष्टिभ्रम चाहिँ हुन सक्छ– साराका साराले सीधा देखेको रूखलाई म बाङ्गो देखिरहेको छु। तर, सच्चा लोकतन्त्रवादीहरू विमतिलाई सहजताका साथ ग्रहण गर्छन् र भद्रताका साथ असहमति जनाउँछन् भन्ने विश्वास लिएर यो आलेख लेखिरहेको छु।

कोइरालाको मृत्युपश्चात् उनी ईश्वर नै थिए भन्न बाँकी राखेर सम्भव भएसम्मका सबै विशेषण उनका लागि प्रयोग गरिसकिएका छन्। उनी नेपालका महानायक, राजनेता, अभिभावक सबै कहलिए। जजसले त्यस्ता विशेषणहरू प्रयोग गरे, ती सबैको तर्क के

रह्यो भने, कोइरालामा कमजोरीहरू नभएका होइनन्, तर कुनै पनि व्यक्तिको उपलब्धिलाई समग्रतामा हेर्नुपर्छ र समग्रतामा हेर्दा कोइराला वास्तवमै महान् नेता थिए। जसरी अरूहरूले कोइरालालाई समग्रतामा हेरेर मूल्याङ्कन गरे, त्यसै गरी मैले पनि उनलाई समग्रतामै हेरेर मूल्याङ्कन गर्ने प्रयास गरिरहेको छु। तर, म भने उनको भिन्न तस्वीर देखिरहेको छु। मेरा लागि गिरिजाप्रसाद कोइराला २०४६ सालपछिको नेपाली राजनीतिका तीन प्रधान खलनायकमध्ये प्रमुख खलनायक हुन्। दोस्रो खलनायक माओवादी अध्यक्ष प्रचण्ड हुन्, जसले नेपाली समाजमा धेरै लामो समयसम्म श्रापका रूपमा रहिरहने गरी हिंसाको संस्कृतिलाई स्थापित गरिदिए। र, तेस्रो खलनायक पूर्वराजा ज्ञानेन्द्र हुन्, जसले लोकतन्त्रलाई सुदृढ तुल्याउन सहयोग गर्नुको सट्टा मौका यही हो भनेर त्यसलाई पूर्ण हठका साथ कुल्चने प्रयास गरे। कोइराला बितेर गैहाले; प्रचण्डलाई पाप पखाल्ने मौका अझै बाँकी

छ । पूर्वराजा ज्ञानेन्द्रले भने आध्यात्मिक शुद्धीकरणको बाटो रोजे भने उनको भलो हुनेछ । प्रचण्ड र पूर्वराजाबारे कुनै बेला छुट्टै चर्चा गर्ने समय आउने नै छ; तर अहिलेलाई कोइरालाकै प्रसङ्गमा फर्किऊँ ।

समग्र मूल्याङ्कनको आधार समग्र उपलब्धि हुनुपर्छ । नेताका लागि उपलब्धि भनेको उसको नेतृत्वकालमा उसले नेतृत्व गरेको दल र देशले कुन उचाइ चुम्यो भन्ने हो । बाँकी सबै राजनीतिक यात्राका उतार-चढाव मात्र हुन् । ती उतार-चढावका क्रममा आएका सैद्धान्तिक परिवर्तनहरू आफैँमा उपलब्धि नहुन सक्छन् । त्यसैले, कोइरालाको सबभन्दा ठूलो देनका रूपमा हेरिएका सैद्धान्तिक परिवर्तनहरू, संविधान सभा र गणतन्त्रलाई, अहिले नै उपलब्धि भन्न मिल्दैमिल्दैन । ती अहिलेसम्मका लागि नेपालको लामो र दुःखद राजनीतिक यात्राका थप दुइटा घुम्ती मात्र हुन् । दुर्भाग्य भन्नुपर्छ, गत ६० वर्षदेखि नेपाल निरन्तर राजनीतिक सङ्क्रमणमा रहेको छ, जुन क्रममा शासन

व्यवस्था, संविधान र सरकारहरू परिवर्तन भए; तर देशको मुहार चाहिँ परिवर्तन भएन। ती परिस्थितिले राजनीतिक विश्लेषणका लागि खुराक प्रदान गरे; पुस्तकका पाना भरे; एकएक वटा कालखण्डमा कसैलाई महान् र कसैलाई बेइमान बनाए; तर त्यसबाट भोको पेट भरिएन; देशमा शान्ति छाएन; आर्थिक समृद्धि आएन। माओवादीहरूलाई मूलधारको राजनीतिमा लेराउनमा पनि कोइरालालाई ठूलै श्रेय दिइन्छ। पहिलो कुरा, माओवादीहरू राजनीतिक मूलधारमा आए या आएनन्, त्यो नै प्रस्ट भएको छैन। दोस्रो कुरा, माओवादीहरूलाई मूलधारमा लेराउने कुरा त कोइरालाले आफ्नै असफल नेतृत्वका कारण खन्न सघाएको खाल्डो पुर्ने प्रयास गरेका मात्र हुन्। त्यसमा पनि त्यो माओवादीहरूको बदलिएको रणनीति, राजाको हठ, भारतको डिजाइन र अरू बढी राजाप्रति कोइरालाको प्रतिशोधको भावना र देशको प्रथम राष्ट्रपति हुने उनको सपनाको परिणाम थियो। त्यो क्रममा नेपालले

मधेशदेखि हिमालसम्म केके गुमायो; राष्ट्रको आत्मामा कति घात पुग्यो र त्यसका दूरगामी असर केके हुन्छन् भन्ने कुरा वर्तमान नेताहरू पनि कोइरालाजत्तिकै स्वार्थी, शक्तिका भोका र विफल भए भने स्वतः प्रस्ट हुनेछ। वर्तमानका नेताहरूले बिग्रिएको विगतलाई बनाए भने भिन्दै कुरा हो; नत्र नेपालको भावी यात्रा अत्यन्त कष्टपूर्ण हुने देखिन्छ, जसको दोष २०४६ सालपछि सबभन्दा बढी शक्तिमा हावी हुने कोइरालालाई दिनुपर्ने हुन्छ। अनि मात्र प्रचण्ड र पूर्वराजा दोषका भागिदार मानिनेछन्। त्यसै गरी कोइराला नभैदिएको भए नेपालको गणतान्त्रिक सङ्क्रमण शान्तिपूर्ण हुँदैनथ्यो भन्ने पनि धेरैको भनाइ छ। तर वास्तविकता के हो भने, २०६२-६३ को जनआन्दोलनभन्दा अगाडिका कोइरालाका प्रधानमन्त्रित्व कालहरू र नेतृत्व सफल भैदिएको भए वर्तमान स्थिति आउँदैआउँदैनथ्यो। बरु, नेपाल शान्ति र विकासको बाटोमा लम्किरहेको हुन्थ्यो। कतिपयले कोइराला नहुँदा शान्ति प्रक्रिया

बिग्रिन सक्ने अनुमान पनि गरिरहेका छन् । तर वास्तविकता के हो भने, कोइरालाको नेतृत्वमा 'शान्ति प्रक्रिया यति असङ्गत र अवैधानिक ढङ्गबाट निर्माण भयो, त्यो बिग्रियो भने त्यसको दोष कोइरालाको अनुपस्थितिलाई होइन, उनले त्यसको निर्माणमा जेजति नेतृत्व प्रदान गरे त्यसलाई दिनुपर्ने हुन्छ । 'शान्ति प्रक्रिया सफल भयो भने चाहिँ त्यसको श्रेय वर्तमान नेताहरूलाई दिनुपर्नेछ, जसले असङ्गत र अवैधानिक विगतका बावजूद सो प्रक्रियालाई सफल तुल्याएको ठहरिनेछ ।

२०४८ सालपछि गिरिजाप्रसाद कोइराला कैयौँ पटक देशका प्रधानमन्त्री भए र अधिकांश समय उनैले नेतृत्व गरेको नेपाली काङ्ग्रेसले या सत्ताको नेतृत्व गऱ्यो या त त्यो सत्ता साझेदार रह्यो । कोइराला देश र आफ्नो दल दुवैको नेतृत्वमा सदा छाइरहे । त्यसबीच राजनीतिमा आएको व्यापक भ्रष्टता र विफलता, अनि ठूलो हदसम्म त्यसैका कारण तीव्र गतिमा फैलिएको

माओवादी हिंसाको दोष अरूलाई भन्दा धेरै बढी कोइरालालाई जानुपर्ने हो। तर, धेरैले त्यसको दोष माओवादीलाई मात्र दिने गरेका छन्। २०४८ सालपछिको प्रजातान्त्रिक राजनीति पथभ्रष्ट नभैदिएको भए माओवादी हिंसाले त्यति सहजै मलजल प्राप्त गर्ने नै थिएन। देशको मात्र होइन, कोइरालाको नेतृत्वमा नेपाली काङ्ग्रेसको हविगत पनि धेरै बिग्रियो। २०४८ सालको निर्वाचनमा स्पष्ट बहुमत ल्याएको दलको चुनावी नतिजा त्यसपछिका वर्षहरूमा क्रमश: बिग्रँदै गयो; गणेशमान सिंह र कृष्णप्रसाद भट्टराई जस्ता नेताहरूको मानमर्दन गरियो; दल नै फुट्यो र हुँदाहुँदा संविधान सभाको निर्वाचनमा माओवादीहरूबाट नेपाली काङ्ग्रेस त्यति नराम्रोसँग पराजित हुनुपर्‍यो। माओवादीलाई उचालेर कोइरालाले नेपाली काङ्ग्रेसको प्रमुख प्रतिद्वन्द्वी ठानिएको एमालेलाई थचार्न खोजेका थिए। तर, माओवादीबाट आफैँ पनि त्यसरी थचारिनुपर्ला भनेर उनले सोचेकै थिएनन्। लोकतन्त्रको पर्यायवाची बनेको

दलभित्र बलियो रूपमा स्थापित अलोकतान्त्रिक चरित्रका संरक्षक कोइराला नै थिए। उनले आफ्नो दलबाहिर प्रजातन्त्रको राजनीति गरे होलान्; तर त्यो राजनीति सधैँ व्यक्तिगत महत्त्वाकाङ्क्षा, प्रतिशोध र ईर्ष्याबाट प्रेरित रह्‍यो। उनले आदर्शको राजनीति कहिले पनि गरेनन्, जसले गर्दा सिङ्गो राजनीतिप्रति नै योग्य र इमानदार मानिसहरूमा वितृष्णा बढ्यो।

यदि गत २० वर्षमा नेपाल र नेपाली काङ्ग्रेस दुवैको भलो भैदिएको भए कोइरालाका सबै दुर्गुण तपशिलका विषय बन्ने थिए र उनका उपलब्धिहरू प्रधान हुने थिए। त्यसो नभैदिएका कारण, यो पङ्क्तिकारका आँखामा उनको उपलब्धि न्यून र कमजोरी प्रधान देखिन गयो।

एक राजनीतिज्ञका रूपमा २०४६ सालअगाडि गिरिजाप्रसाद कोइरालाले पञ्चायतविरुद्ध गरेको निरन्तरको सङ्घर्ष उनको ठूलो योगदान हो। राजतन्त्रबाट गणतन्त्रको जटिल सङ्क्रमणलाई शान्तिपूर्ण बनाउनमा

उनले दिएको नेतृत्व उनको ठूलो योगदान हो। तर, सो सङ्क्रमणलाई शान्तिपूर्ण बनाउनकै लागि भनेर नेताका रूपमा कोइरालाले अनेक पक्षसँग भटाभट जेजस्ता सम्झौताहरू गर्दै गए, तिनका दूरगामी नकारात्मक असरहरूबाट नेपालले धेरै लामो समयसम्म दुःख पाइरहनेछ। त्यसैले, समग्र मूल्याङ्कन भनेको घटनाविशेषको मूल्याङ्कन होइन, त्यो साङ्गोपाङ्गो परिस्थितिको मूल्याङ्कन हो। २०४८ सालको निर्वाचनपछि कोइराला नेपाली राजनीतिमा हावी भएयता नेपाल राष्ट्र र नेपाली काङ्ग्रेस दुवैले जेजस्तो दुर्दशाको सामना गर्नुपर्‍यो, त्यसका आधारमा भन्नुपर्दा, कोइराला पूर्णतः विफल नेता हुन्। आफ्नो दल र देश दुवैको शान, सम्मान, शान्ति, प्रगति र अखण्डतामा गहिरो चोट पुर्‍याएर कुनै पनि नेता महानायक, राजनेता र अभिभावक कहलिनु नपर्ने हो; तर कहलिए। किनभने, सबैले सतहमा जे बहेको छ त्यही मात्र हेरे। किन हेरे? त्यसको उत्तर, तात्कालिक क्षणलाई हेरेर बहने

भावनाको भेललाई समयले साम्य पारेपछि स्वत: स्पष्ट हुँदै जानेछ। समग्रतामा फेरि एकपल्ट भनूँ, कोइरालाको लम्बे नेतृत्वकालमा यो देश र उनको दल दुवैले दूरगामी क्षति बेहोरेका छन्। त्यसलाई पुन:स्थापित गर्न नेपाली काङ्ग्रेस र अन्य दलका नेताहरूले लामो समयसम्म इमानदार र कठिन परिश्रम गर्नुपर्नेछ। मेरा आँखामा समग्र मूल्याङ्कन यही हो। विमति राख्नेहरूलाई सम्मान गर्ने नै छु।

*नागरिक दैनिक, २०६६ चैत १८*

# गरेर मर्ने कि लडेर मर्ने ?

प्रिय माओवादी नेतृत्ववृन्द,

मैले यो पत्र लेख्दै गर्दा तपाईंहरू आफ्नो भावी रणनीतिबारे घनीभूत छलफलमा व्यस्त हुनुहुन्छ। तर मुख्य कुरा के हो भने, जबसम्म तपाईंहरू एउटा आधारभूत प्रश्नमाथि घोत्लिनुहुन्न तबसम्म नेपाल राजनीतिक सङ्कट र सङ्क्रमणबाट मुक्त हुनेछैन। त्यो प्रश्न भनेको तपाईंहरू 'गरेर मर्ने कि लडेर मर्ने ?' भन्ने हो। त्यसमा स्पष्ट नहुने हो भने, तपाईंहरूले आफ्नो जीवनकालमा यो देशको मुहार परिवर्तन गर्ने सम्भावना बढ्दो रूपमा न्यून देखिँदै गएको छ।

गरीबहरूको उत्थान र यो देशको उन्नतिप्रतिको तपाईंहरूको प्रतिबद्धतामा मैले शङ्का गरेको होइन। प्रतिबद्धता अभिव्यक्तिको बाटो गलत भयो, त्यो भिन्दै कुरा हो। तपाईंहरू अधिकांशले आफ्नो जिन्दगी

गरीबहरूका लागि कुनै न कुनै किसिमले लडेर बिताउनुभएको छ । तर, त्यति लामो समय तपाईंहरूले गरीबहरूका लागि 'लडेर' बिताए पनि अहिलेसम्म उनीहरूका लागि केही 'गरेर' देखाउन चाहिँ सक्नुभएको छैन । गाउँठाउँका सामान्य सामाजिक कार्यकर्ताहरूले तपाईंहरूले भन्दा आफ्नो समाज र देशका लागि धेरै बढी गरेका छन्; सकारात्मक सोच फैलाउन सहयोग पुऱ्याएका छन् । तपाईंहरूले त गरीबहरूको नाममा लड्ने क्रममा गरीबहरूले नै अतुलनीय पीडा भोगे र गरीबहरू नै मरे । तपाईंहरूले नेतृत्व गरेको सशस्त्र द्वन्द्वले गरीबहरूमा अधिकारबोध त बढ्यो होला र त्यसैलाई तपाईंहरूले उपलब्धि सम्झिनुभयो होला, तर अधिकारबोधले मात्र भोको पेट भरिँदैन, नाङ्गा आँखा छोपिँदैनन् । भन्नुहोला, क्रान्ति भनेको निरन्तरको प्रक्रिया हो र हामीले त्यसलाई सम्पन्न गर्न सकेनौँ भने पनि हाम्रा भावी सन्ततिले त्यसलाई अगाडि बढाउनेछन् । त्यो भनेको, कि बूढाहरूले कि विफलहरूले

गर्ने तर्क हो। उमेर र क्षमता भएकाहरूले जे गर्नु छ आफ्नै जीवनकालमा गरेर देखाउँछन् र गरेको कुरा हेरेर सन्तुष्टिका साथ मर्छन्। रोल्पा र रुकुम बनाउने भाषण छाँटेर, कत्रो ठूलो सपना थियो तर 'प्रतिगामी' र 'यथास्थितिवादीहरू' ले त्यसलाई पूरा गर्नै दिएनन् भन्दै अरूमाथि दोष थुपारेर मर्नुभयो भने तपाईंहरूको मृत्यु अर्थहीन हुनेछ। विफलहरू दोष अरूमाथि लगाउँछन्; सफलहरू गरेर देखाउँछन्।

तपाईं 'क्रान्तिकारीहरू' आत्मसमर्पण गर्नुभन्दा लडेर शहीद हुनु राम्रो भन्नुहुन्छ। स्वाभिमानी मानिसका लागि त्यो सत्य हो। तर त्यस्ता स्वाभिमानीहरूका लागि मात्र त्यो सत्य हो, जसको अर्को विकल्प बाँकी नै हुँदैन। तपाईंहरू त जितको सङ्घारमा हुनुहुन्छ। अलिकति संयम र बुद्धि पुऱ्याउनुभयो भने हार्ने कुनै सम्भावनै छैन। समस्या खालि के हो भने, जिन्दगीभर अँध्यारोमा राखेको साँढेलाई एकाएक उज्यालोमा निकाल्दा त्यो अत्तालिए जस्तै, तपाईंहरूले युद्धबाट शान्तिको

राजनीतिमा प्रवेश गर्दा कसरी खुला राजनीतिक परिस्थितिहरूको सामना गर्न भन्ने भेउ नै पाउनुभएको छैन। तपाईंहरूमा युद्धको अहङ्कार बाँकी छ र पाएसम्म सबैलाई पेलेरै अगाडि जानुपर्छ भन्ने मानसिकताबाट तपाईंहरू अझै पनि ग्रस्त हुनुहुन्छ। तपाईंहरूलाई परास्त गर्न खोज्नेहरूका लागि त्यो नै सबभन्दा ठूलो हतियार बनेको छ। स्थितिको सही आकलन गर्न नसक्दा पछिल्लो समयमा तपाईंहरूले १० चोटि ठक्कर खाइसक्नुभयो। तैपनि तपाईंहरूलाई चेतना आएको छैन। यस्तै ताल हो भने तपाईंहरू नराम्रोसँग घायल हुनुहुनेछ; आत्मसमर्पण गर्नुभन्दा लडेर मर्नु राम्रो भनेर फेरि विद्रोह गर्नहुनेछ अनि यो देशलाई अफगानिस्तानको बाटोमा धकेल्नुहुनेछ। त्यसपछि आफ्नो गल्ती छोप्न अरूलाई तथानाम गाली गर्नुहुनेछ। त्यसैले, तपाईंहरू गलत बाटोमा नगैदिए हुन्थ्यो भन्ने मनसुबाले यो पत्र लेखिरहेको छु। तपाईंहरू र यो देशको भलाइका लागि तपाईंहरूको ध्यान तीन वटा

बुँदामा आकर्षित गर्न चाहन्छु। सुन्ने या नसुन्ने जिम्मा तपाईंहरूको।

## राजनीतिको मूल नीति कूटनीति हो

तपाईंहरूले याद गर्नुभएको छ या छैन, थाहा भएन। संविधान सभा चुनावको परिणामअघिसम्म कूटनीतिलाई तपाईंहरूले बन्दुकभन्दा पनि बलियो अस्त्रका रूपमा अत्यन्त सफलतापूर्वक प्रयोग गर्नुभएको थियो। आन्तरिक र बाह्य शक्तिहरू सबैलाई तपाईंहरूले कूटनीतिक दक्षता प्रयोग गरेर सन्तुलनमा राख्नुभयो; कसैलाई उचाल्नुभयो; कसैलाई बसाल्नुभयो र कसैलाई उठ्नै नसक्ने गरेर थचार्नुभयो। त्यसै भएर तपाईंहरू सफल हुनुभयो। संविधान सभा चुनावको परिणामपछि जब तपाईंहरूमा कूटनीतिमाथि शक्तिको दम्भ हावी भयो, तपाईंहरू क्रमिक रूपमा चुक्दै जानुभयो। तपाईंहरूले बन्दुकभन्दा बलियो अस्त्र कूटनीति हो भन्ने बिर्सनुभयो। तथानाम बोल्नुभयो; तथानाम गर्नुभयो। त्यसैले, आन्तरिक

र बाह्य दुवै मोर्चामा चुक्नुभयो र अझै पनि चुक्दै हुनुहुन्छ। त्यो कमजोरीलाई पाएसम्म शक्तिको दम्भले नै छोप्ने प्रयास गर्दै हुनुहुन्छ। फेरि एकपल्ट, बलको नीतिलाई होइन कूटनीतिलाई अस्त्र बनाउनोस्; परिस्थितिहरू तपाईंहरूका लागि नितान्त भिन्न हुनेछन्।

## सम्झौता गरेर सानो भइँदैन

एउटा कुरा पक्का छ– तपाईंहरूले अहिले र आउँदा केही वर्षमा विवेकपूर्ण र शान्तिपूर्ण सम्झौताहरू गर्न जान्नुभयो भने धेरै वर्षसम्म नेपाली राजनीतिमा तपाईंहरूको हार हुँदैहुँदैन। त्यति उज्ज्वल भविष्य बोकेको पार्टी किन यसरी विक्षिप्त बनिरहेको हो, मैले बुझ्नै सकेको छैन। तपाईंहरूले अँगाल्नुभएको माओवादी आदर्श त साधन मात्र हो, साध्य होइन। सामाजिक न्याय स्थापना गर्न र देशलाई तीव्र प्रगतिको पथमा लैजाने तपाईंहरूको अन्तिम लक्ष्यमा तपाईंहरूले सम्झौता गर्नुपर्दैन। केवल त्यसका लागि अपनाउन खोजिरहनुभएका उपायहरूमा सम्झौता गर्नोस्। अन्तिम लक्ष्यलाई हेर्नोस्;

त्यो हेर्नेबित्तिकै, सेना समायोजन कुन सङ्ख्यामा गर्ने, सङ्घीयताको खाका माओवादीले चाहे अनुरूप बन्ने कि नबन्ने, अहिले नै माओवादी नेतृत्वको सरकार चाहिने कि नचाहिने भन्ने प्रश्नहरू तपशिलका विषय बन्नेछन् । पाँच-सात हजार माओवादीहरू नेपाली सेनामा कम जाँदैमा या सङ्घीयताको स्वरूप तपाईंहरूले चाहे जस्तो नहुँदैमा केही पनि फरक पर्नेवाला छैन । देश बनाउने नेताले हो; सेनामा बलियो पकड भएर देश बन्ने होइन । त्यस्तो हुँदो हो त बर्मेली या उत्तर कोरियाली सत्ता कति सफल भैसक्नुपर्ने थियो ! त्यस्तै, संविधानको स्वरूपले मात्र देश बन्ने होइन । पश्चिमका अमेरिका र बेलायत, दूरपूर्वका मलेसिया र सिङ्गापुर, खाडी क्षेत्रका कतार र युएई या हाम्रै छिमेकीहरू चीन र भारत सबैमा भिन्दाभिन्दै किसिमका संवैधानिक व्यवस्थाहरू छन् र पनि ती सबैले तीव्र प्रगति गरेका छन् । त्यसैले, तपाईंहरूले जे मुद्दालाई ठूलो महत्त्व दिइराख्नुभएको छ, ती तपाईंहरूका अहं मात्र हुन् ।

अहं सामान्यतया तपशिलका विषयमा अड्किएका हुन्छन्, जुन मानिसहरूले महशूस नै गर्दैनन् । त्यसैले ती तपशिलका अहङ्कारहरूलाई त्यागिदिनोस् । टाढाको आफ्नो लक्ष्यलाई हेर्नोस् र सेना समायोजन, सरकारको नेतृत्व र सङ्घीयताको नक्सा भन्ने जस्ता झिनामसिना विषयहरूमा अहिले अहंरहित ढङ्गबाट सम्झौता गर्नोस् । सम्झौता गरेर तपाईंहरू कत्ति पनि सानो हुनुहुनेछैन । बरु, त्यसले तपाईंहरूको ठूलो उद्देश्य हासिल गर्न सहयोग पुऱ्याउनेछ । त्यति गर्नुभयो भने शान्ति र संविधान निर्माणको कार्य सहजै पूरा हुनेछ । तपाईंहरूको छवि आफैँ निर्माण हुनेछ र विश्वसनीयता ह्वात्तै बढ्नेछ । त्यसपछि अब हुने चुनावमा तपाईंहरूको विजयलाई कसैले रोक्न सक्नेछैन ।

## ‘जनविद्रोह’ बाट देश बन्दैन

तपाईंहरूमध्ये र तपाईंहरूका कतिपय समर्थकहरूले भन्नेछन्, “होइन, सम्झौता गर्दै गयो भने त माओवादी

पार्टी माओवादी पार्टी नै रहनेछैन। हामी पनि काङ्ग्रेस र एमाले जस्तै बन्नेछौँ। त्यस्तो सम्झौता गर्नुभन्दा बरु जनविद्रोहमा जानु राम्रो।" पहिलो कुरा, तात्कालिक विषयहरूमा सम्झौता गरेर तपाईंहरू कुनै पनि हालतमा काङ्ग्रेस या एमाले जस्तो बन्नुहुनेछैन; तपाईंहरूको दर्शन नै बेग्लै छ। दोस्रो कुरा, आन्तरिक र बाह्य परिस्थितिका कारण तपाईंहरूको विद्रोह सफल हुने सम्भावना अत्यन्त न्यून छ। तर सबभन्दा महत्त्वपूर्ण कुरा अर्को छ, जुन 'गरेर मर्ने कि लडेर मर्ने ?' भन्ने प्रश्नसँगै सम्बन्धित छ। माने लिऊँ, तपाईंहरू ढिलो या चाँडो 'जनविद्रोह' गरेर सफलै हुनुभयो रे, या राजनीतिक अन्योलका माफ त्यसमा हावी हुनुभयो रे, अनि सत्ता तपाईंहरूको हातमा आयो रे; तर सत्ताप्राप्ति मात्र तपाईंहरूको लक्ष्य त होइन। तपाईंहरूको लक्ष्य भनेको त परिवर्तनका अजेन्डा लागू गर्ने हो। जब तपाईंहरूले त्यसरी हासिल गरेको सत्ताको भोलिपल्टैदेखि देशव्यापी रूपमा अन्य राजनीतिक

दलहरू र नागरिक समाजले तीव्र विरोध गर्न थाल्छन्; देश बनाउने तपाईंहरूको सपना चकनाचुर हुनेछ। तपाईंहरूले सम्पूर्ण ध्यान सत्ता बचाउनमा केन्द्रित गर्नुपर्नेछ। त्यसपछि सत्ताप्राप्तिको अर्थ के रह्‍यो? अनि के फेरि दशौँ हजारको रगत बगाउनुहुन्छ? या, काम गर्नै दिएनन् भनेर सबै विपक्षीलाई सरापेर बस्नुहुन्छ? त्यस्तो परिस्थिति सृजना भयो भने रुकुम र रोल्पाको स्थिति चाहिँ जस्ताको तस्तै रहनेछ र तपाईंहरू भने अर्थहीन गर्वका साथ क्रान्तिको नाममा सत्ताका लागि लडी मात्रै रहनुहुनेछ।

तपाईंहरूप्रति जनताको ठूलो तप्काको समर्थन छ; ठूलो तप्काको सद्‌भाव छ। त्यसलाई वैधानिकता दिने र संस्थागत गर्ने एक मात्र माध्यम अब तपाईंहरूका लागि शान्तिपूर्ण राजनीति हो। त्यसका लागि तात्कालिक बाटो भनेको कुशल कूटनीति, अहंरहित सम्झौता, नयाँ संविधान र त्यस अन्तर्गतको निर्वाचन हुनुपर्छ। त्यति भयो भने तपाईंहरूले सत्ता कब्जै गर्नुपर्दैन; सत्ता स्वतः

प्राप्त हुनेछ र नौमहिने शासनकालका जस्ता गल्तीहरू गर्नुभएन भने, त्यो धेरै वर्षका लागि दिगो र स्थिर रूपमा कायम रहनेछ। तर दम्भका कारण मूल उद्देश्यलाई ओझेलमा राखेर अहिले नै तपाईंहरू तपशिलका सैद्धान्तिक विषयहरूमा अल्झिरहनुभयो भने, विचार गर्नोस्, तपाईंहरूको लडाइँ कहिले पनि टुङ्गिनेछैन। तपाईंहरूले जितिसकेको युद्ध पनि हार्नुहुनेछ। अनि आफू मात्र होइन, यो देशलाई पनि हराउनुहुनेछ। तपाईंहरूमा सद्बुद्धि पलाओस्। एक शुभेच्छुक नागरिकको नाताले मेरो शुभकामना !

रवीन्द्र मिश्र

*नागरिक दैनिक, २०६७ वैशाख १०*

# समाजवाद र काङ्ग्रेस नेतृत्व

मेरा एक मित्र छन्। उनी महिनाको ३० हजार तलब खान्छन् र नेपालको कर नियम अनुसार उनी महिनाको २५ हजारमाथिको आम्दानीमा २५ प्रतिशत कर तिर्छन्। मेरा अर्का मित्र छन्; उनी महिनाको पाँच लाख तलब खान्छन्। उनी पनि महिनाको २५ हजारमाथिको आम्दानीमा २५ प्रतिशत नै कर तिर्छन्। मैले अर्का एक जना चिनेको छु, जो महिनाको १० लाख तलब खान्छन्। उनले तिर्ने करको दर पनि त्यही नै हो। नेपाल जस्तो देशमा जबसम्म महिनाको ३० हजार रुपैयाँ तलब खाने र महिनाको १० लाख तलब खाने दुवैलाई झन्डै एउटै करको दर लागू हुन्छ, त्यहाँको राज्य व्यवस्था समाजवादी हुनै सक्दैन। अरूको भन्दा आफ्नै कुरा गरूँ, जुन दिनसम्म मैले पाउने तलबको निश्चित रकमभन्दा माथि कम से

कम ४० देखि ५० प्रतिशतसम्म राज्यले कर लिँदैन, त्यति बेलासम्म नेपाली काङ्ग्रेसले प्रजातान्त्रिक समाजवादको नारा लगाउँदैमा राज्य व्यवस्था समाजवादी हुनै सक्दैन। उच्च व्यक्तिगत कर त प्रजातान्त्रिक समाजवादको एउटा पक्ष मात्र हो। प्रजातान्त्रिक समाजवादमा व्यक्तिगत त्यागका अन्य पक्ष पनि छन्। अहिले महाधिवेशनको याममा समाजवादका चर्का चर्चाहरू गरिँदै गर्दा नेपाली काङ्ग्रेसको नेतृत्व र त्यसका समर्थकहरूमा वास्तविक समाजवादी त्याग गर्न कति जना तयार छन्, प्रश्न त्यहाँबाट शुरू हुन्छ।

निम्न वर्गलाई प्रवर्धन गर्नुका साथै आधारभूत शिक्षा, स्वास्थ्य, आपत्कालीन सेवा, ज्येष्ठ नागरिकहरूको हित जस्ता क्षेत्रहरूको जिम्मेवारी लिन सक्ने राज्य व्यवस्थालाई मात्र समाजवादी भनिन्छ। ती जिम्मेवारीहरू लिनका लागि राज्य प्रणाली यस्तो हुनुपर्छ, जहाँ हुनेले नहुनेलाई सहयोग पुऱ्याउन सक्दो कर तिर्नैपर्छ।

बेलायतमा सम्पन्नहरूका लागि भव्य निजी विद्यालय र अस्पतालहरू छन्। तर, विपन्नहरूलाई निःशुल्क विद्यालय, अस्पताल र अरू धेरै सेवा उपलब्ध गराउन सम्पन्नहरूले राज्यलाई ५० प्रतिशतसम्म कर तिर्छन्। 'समाजवाद' भन्दा पनि न्यायपूर्ण समाजका लागि अरू परिष्कृत 'कल्याणवाद' अँगाल्ने नर्वे, फिनलन्ड, स्विडेन, डेनमार्क जस्ता देशमा सक्नेहरूले राज्यलाई ५० प्रतिशतभन्दा माथि कर तिर्छन्। त्यहाँ न्याय, शान्ति, समृद्धि र खुशी सबै छ। तिनीहरूसँग अमेरिका या बेलायतको जस्तो विश्व तर्साउने सैनिक र आर्थिक शक्ति नहोला; तर त्यहाँका मानिसहरू शक्तिशाली भनिएका राष्ट्रका नागरिकभन्दा धेरै गुणा बढी खुशी छन् भन्ने कुरा विभिन्न सर्वेक्षणले प्रस्ट पारेका छन्। धनी र गरीब त ती समाजवादी र कल्याणवादी भनिने राष्ट्रहरूमा पनि छन्; तर त्यहाँ साम्यवादीहरू भने अत्यन्त न्यून सङ्ख्यामा छन्। किनभने, जब धनीले निरन्तर रूपमा गरीबको हित र संवर्धनका

लागि ठोस योगदान पुऱ्याइरहेका हुन्छन्, त्यहाँका गरीबहरूले धनीहरूप्रति शत्रुभाव र ईर्ष्या राख्दैराख्दैनन्। धनीहरू शोषक हुन् भन्दैभन्दैनन्। आम विद्रोह त्यहाँ हुन्छ, जहाँ धनीले गरीबलाई हेर्दैनन्। हामीकहाँको विद्रोहको ठूलो कारण त्यही नै हो।

नेपाली काङ्ग्रेसको सभापतिका तीनै उम्मेदवार प्रजातान्त्रिक समाजवादका कट्टर अनुयायी हुन्। तर, तिनले बोलेका भाषणहरू सुनेपछि प्रस्ट हुन्छ, तिनलाई प्रजातान्त्रिक समाजवादको अर्थसम्म चाहिँ थाहा छ, नेपालको परिप्रेक्ष्यमा प्रजातान्त्रिक समाजवादलाई कसरी चरितार्थ गर्न सकिन्छ भन्ने तिनमा रत्ती पनि ज्ञान छैन। ती तीनै जना राजनीतिक आन्दोलनमा रहेको समर्पणका कारण नेता भएका हुन्, राजनीतिक नेतामा हुनुपर्ने सद्गुणका कारण होइन। तर परिस्थिति यस्तो छ, ती तीन जनाबाटै एक जना सभापति नचुनीकन सुखै छैन। भनेपछि, नेपाली काङ्ग्रेसले अर्को महाधिवेशनबाट अर्को नेतृत्व चयन नगरेसम्म अब

बन्ने सभापतिबाट दलको सुनौलो भविष्यको रेखा कोरिने कुनै सम्भावनै देखिँदैन।

सभापतिभन्दा तलको शक्तिशाली महामन्त्रीको पदका उम्मेदवारहरूबाट पनि मानिसहरूले त्यति आशा गरेका छैनन्। तीमध्ये एक नरहरि आचार्य बुद्धिमा अगाडि, सङ्गठनमा पछाडि भएको देखिन्छ। त्यसैले नै हो उनले सभापतिको पदमा उम्मेदवारी नदिएको। अन्य दुई जना, प्रकाशमान सिंह र विमलेन्द्र निधि औसत स्तरका नेता हुन्, जसले दलमा दल बदली गर्दै आफूलाई माथि लैजाने बाटो त बनाउन सक्लान्; तर तिनमा सिङ्गो दललाई माथि लैजान आवश्यक बौद्धिक खुराक चाहिँ छैन। यति हुँदाहुँदै पनि दलका तीन हजारभन्दा बढी महाधिवेशन प्रतिनिधिले यस पटक इमानदारी देखाए भने नेपाली काङ्ग्रेसको भविष्यका लागि तिनले एउटा सुखद आधार तयार पार्न सक्ने आशा गर्न सकिन्छ।

ती प्रतिनिधिहरूमा यस पटक ४० प्रतिशत युवाहरू

पुगेको बताइँदै छ। ती ४० प्रतिशतमा निश्चय पनि सबै युवा आशालाग्दा छन् भन्न मिल्दैन। गन्दा राजनीतिक खेल व्याप्त भएको काङ्ग्रेसभित्र, उदाहरणका लागि, झापाका आशालाग्दा युवा नेता विश्वप्रकाश शर्मालाई दलको जिल्ला सभापतिको पदमा त्यहाँका पुरानापुराना काङ्ग्रेसी नेताहरू मिलेर हराइछोडे भने, अन्य विविध कारणले गर्दा दुर्गुणयुक्त कैयौँ युवा राजनीतिकर्मी महाधिवेशन प्रतिनिधिका रूपमा आइपुगेका छन्। आफ्ना खुट्टा दरिलो नभएकाले तिनको ध्येय जसरी पनि चाकडी, चाप्लुसी र गुटबन्दी गर्दै अरूको बैसाखी टेकेर भऱ्याङ उक्लने हुनेछ। त्यस्ता युवा उम्मेदवारहरूलाई प्रतिनिधिहरूले चिनेर नि:स्वार्थ ढङ्गबाट केन्द्रीय समितिको निर्वाचनमा हराउन सके भने, नेपाली काङ्ग्रेसमा थोरै भए पनि परिवर्तनको आशा गर्न सकिन्छ। अन्यथा, काङ्ग्रेसको रूप त बदलिएला; तर सारमा भने कुनै परिवर्तन आउनेछैन र त्यसको फाइदा काङ्ग्रेसीहरूले सबभन्दा बढी घृणा गर्ने

माओवादीलाई पुग्नेछ ।

एउटा धुरी मात्र बाँकी रहनेछ। त्यो धुरीले पनि देशका हुनेखाने, चाकडी-चाप्लुसी गर्नेहरूलाई मात्र ओत दिने हो भने भाषणै मात्र बेचेर काङ्ग्रेसले आफूलाई कतिसम्म थेग्ला, महाधिवेशनका सबै प्रतिनिधिले यो पटक विचार पुऱ्याउनैपर्छ ।

नेपाली काङ्ग्रेस सिद्धान्त, व्यवहार र नेतृत्व सबैमा चुकेको धेरै भैसक्यो। अबको महाधिवेशनमा पनि दलका प्रतिनिधिहरूले व्यक्तिगत स्वार्थबाट माथि उठेर केन्द्रीय समितिमा गुण-दोषका आधारमा, खास गरी युवा नेताहरूलाई चयन गर्न सकेनन् भने, ती प्रतिनिधिले आफ्नो त भलो गर्लान्; तर तिनका आफ्नै सन्तान र देशले भने दु:ख पाउने क्रम जारी रहनेछ। अनि पार्टीका रूपमा काङ्ग्रेसको भविष्य पनि अन्धकारमा रुमलिरहनेछ ।

*नागरिक दैनिक, २०६७ असोज ४*

# अब पैतृक कर र हदबन्दी

२०६७ असोजमा सम्पन्न नेपाली काङ्ग्रेसको महाधिवेशनको समयमा यो पङ्क्तिकारले *समाजवाद र काङ्ग्रेस नेतृत्व* आलेखमा "नेपाल जस्तो देशमा जबसम्म महिनाको ३० हजार रुपैयाँ तलब खाने र महिनाको १० लाख तलब खाने दुवैलाई झन्डै एउटै करको दर लागू हुन्छ, त्यहाँको राज्य व्यवस्था समाजवादी हुनै सक्दैन" भन्दै देशलाई साँच्चिकै समाजवादी बनाउने हो भने आयको निश्चित रकमभन्दा माथि राज्यले कम से कम ४० देखि ५० प्रतिशतसम्म कर लिनैपर्छ भन्ने दलील पेश गरेको थियो।

नभन्दै सरकारले अध्यादेशमार्फत २०६७ मङ्सिर ४ गते लेराएको बजेटमा वार्षिक २५ लाख रुपैयाँभन्दा बढी आम्दानी गर्ने व्यक्तिलाई सो रकमभन्दा माथि लाग्ने २५ प्रतिशत करमाथि पुनः ४० प्रतिशत कर

लाग्ने व्यवस्था गर्‍यो। उच्च आय हुने धेरैलाई त्यो चित्त नबुझ्नु स्वाभाविकै हो। तर सरकारले जे गर्‍यो, ठीक गर्‍यो। करको दायरालाई नेपाल जस्तो देशमा अझ फराकिलो पारेर अझ कडाइका साथ लागू गरिनुपर्छ। साथसाथै, कर-लाभको उचित सदुपयोगलाई सरकारले सुनिश्चित गर्नेतर्फ त्यत्तिकै ध्यान दिनु जरूरी छ। नत्र, सरकारी स्तरमा हुने भ्रष्टाचार कर नतिर्न खोज्नेहरूका लागि सधैँ एउटा राम्रो बहाना बनिरहनेछ। नेपालका धेरै व्यापारी र उच्च आम्दानी गर्नेहरू आफूलाई समाजवादी भन्न रुचाउने नेपाली काङ्ग्रेसका अनुयायी छन्। तर, समाजवादको एउटा बलियो आधार 'उच्च आयमा उच्च कर' र सामाजिक सुरक्षा प्रणाली विकास गर्न अन्य विविध करको आवश्यकतालाई चाहिँ उनीहरू पचाउन सक्दैनन्। किनभने, त्यसबाट उनीहरू स्वयंलाई घाटा पर्छ। उनीहरूले, न्यायपूर्ण समाज स्थापनाका लागि बढी कमाउनेले बढी कर तिर्नुपर्छ भनेको मैले कहिले पनि

सुनेको छैन ।

करका सम्बन्धमा ध्यान दिनुपर्ने अर्को पक्ष पनि छ । त्यो के हो भने, जबसम्म मैले कमाएको सम्पत्ति प्राप्त गर्ने मेरा छोराछोरी या अन्य कसैले, आफूले प्राप्त गरेको सम्पत्तिको निश्चित विन्दुमाथि कम्तीमा ४० प्रतिशत 'इनहेरिटेन्स ट्याक्स' या पैतृक सम्पत्ति कर तिर्नुपर्ने कानूनी प्रावधान हुँदैन, त्यति बेलासम्म देश समाजवादी हुनै सक्दैन, जबकि देश समाजवादी हुनुपर्छ भन्नेमा कुनै पनि प्रमुख दलको विमति छैन । यद्यपि माओवादीहरू समाजवादी बाटो भएर साम्यवादसम्म पुग्न चाहन्छन्, त्यो बेग्लै कुरा हो । उच्च कमाइमा उच्च कर र पैतृक सम्पत्ति कर जस्ता विषयहरू न्यायपूर्ण समाज निर्माणका आधारभूत आवश्यकता हुन् । त्यसै गरी, जग्गाको हदबन्दीबारे अनेक बहसहरू चल्ने गरेका छन् । आफ्नो जग्गा त्याग्नु नपरोस् भनेर भूमिपतिहरूको जोड जग्गामा हदबन्दी लगाउनेभन्दा त्यसलाई वैज्ञानिक रूपमा व्यापारिक, निजी, कृषि,

सरकारी आदि गरेर वर्गीकृत गर्नेमा रहने गरेको छ। उनीहरूको तर्क के छ भने, सरकारले भूमिको उचित उपयोगको व्यवस्था गर्ने हो भने त्यसबाट औद्योगिकीकरणमा मदत पुग्छ, रोजगारी सृजना हुन्छ र समाजका भूमिहीनहरूले स्वत: फाइदा उठाउनेछन्। तर त्यो नेपाल जस्तो देशका लागि सुन्दर सैद्धान्तिक सपना मात्र हो, जुन पूरा हुन लामो समय लाग्छ। बिहान-बेलुका हातमुख जोर्न धौधौ परिरहेका र बालबच्चालाई स्कुल पठाउन नसकिरहेका अनुमानित ३० लाख भूमिहीनलाई त्यस्तो व्यवस्थाले दशौँ वर्षसम्म कुनै राहत प्रदान गर्दैन। यसको अर्थ भूमिको वर्गीकरण गर्नु हुँदैन भन्ने होइन। तर, नेपाल जस्तो गरीब र औद्योगिकीकरणका लागि अझै दशकौँ कुर्नुपर्ने देशमा कुनै पनि भूमिसुधार योजनाले भूमिहीनहरूलाई भूमि उपलब्ध गराउनुपर्ने प्रावधानलाई भने समेट्नैपर्छ।

एउटा सानो उदाहरण दिऊँ। मेरो कार्यालयमा एक चालक छन्, टेकबहादुर खड्का। उनी आफ्नी श्रीमती

र दुई छोराछोरीका साथ कुनै व्यक्तिको साढे पाँच आना जग्गामा बनेको एउटा टहरोमा भाडामा बस्छन् । उनीहरू सो जग्गाको हेरचाह पनि गर्छन् र त्यसमा आफूले चाहेको तरकारी पनि उब्जाउँछन् । खड्का भन्छन्, त्यत्ति जग्गाले गर्दा उनलाई सामान्यतया वर्षभरि नै तरकारी किन्नुपर्दैन । त्यसैको परिणामस्वरूप उनी आफूले दु:ख गरी कमाएको अलिकति पैसाले छोराछोरीलाई 'बोर्डिङ' स्कुलमा पढाइरहेका छन् । भूमिहीन, आश्रयहीनहरूले वर्षौंसम्म फाइदा लिन नसक्ने भूमिको वैज्ञानिक वर्गीकरणका योजना कोर्नुअगाडि मेरो कार्यालयका ती चालक जस्ता दशौँ लाख नेपालीबारे सोच्नु जरूरी हुन्छ, जसले सानो टुक्रा जग्गा पाए जीवन गुजारा गरेर छोराछोरीलाई स्कुल पढाउन सक्थे । तर यहाँ समस्या के छ भने, त्यस्ता नेपालीहरूबारे सोच्दा तिनले आफ्नै मौजा पनि सरकारलाई बुझाउनुपर्ने स्थिति आउन सक्छ । त्यसैले भूमिपतिहरू त्यस्तो नीतिका लागि वकालत गर्छन्, जसले आफूलाई

व्यक्तिगत रूपमा घाटा नपरोस्, तर कमजोरहरूलाई कालान्तरमा फाइदा मिल्छ भन्ने आभास दिन सकियोस् । त्यस्तै सोचको परिणामस्वरूप जग्गाको हदबन्दीको व्यवस्था कडाइका साथ लागू हुन सकेको छैन र सरकारले नयाँ व्यवस्था गर्न पनि सकेको छैन ।

बहुसङ्ख्यक मानिसहरू व्यक्तिगत त्याग नगरीकनै देश बनाउन चाहन्छन् । पाँचतारे होटेलमा समाजवाद, न्यायपूर्ण समाज, गरीबी निवारणको भाषण गर्ने, तर ४० प्रतिशत कर, पैतृक सम्पत्ति कर, जग्गाको हदबन्दी आदि चाहिँ केही पनि स्वीकार गर्न नचाहनेहरूको बोलवाला भएपछि शान्तिपूर्ण, समृद्ध र सुसंस्कृत समाजको निर्माण कसरी हुन्छ? त्यस्ता ठूला कुरा गर्ने तर व्यक्तिगत त्याग नगर्नेहरू सामान्यतया सबै राम्रो पढेका, राम्रो आम्दानी भएकाहरू नै हुन्छन्, जो राज्यप्रतिको नागरिक दायित्वको प्रश्न उठायो कि 'राज्यले हामीलाई के दिएको छ र? बाटो यस्तो छ; पानी छैन; बिजुली छैन; केको लागि कर तिर्ने?' भनेर प्रतिप्रश्न गर्छन् । उनीहरूको प्रश्न गलत हो भन्न

मिल्दैन; तर जनताले तिरेको सबै कर भ्रष्टाचारीहरूले स्वाहा पारेका छन् भन्ने पनि होइन। अहिले पनि हामीले तिरेको करबाट १० अर्ब रुपैयाँभन्दा बढी न्यायपूर्ण समाजका लागि अत्यावश्यक सामाजिक सुरक्षा प्रणालीमा खर्च भैरहेको छ, जसबाट सरकारले वृद्ध, विधवा, लोपोन्मुख जाति, अपाङ्ग भत्तादेखि महिला र दलित विद्यार्थीलाई छात्रवृत्तिसम्म प्रदान गर्ने गरेको छ। त्यो सामाजिक सुरक्षा प्रणालीलाई अरु दरिलो नबनाउने हो भने समाजमा कहिले पनि शान्ति स्थापना हुँदैन।

यदि सरकार भ्रष्ट छ भनेर सचेत व्यक्तिहरूले पनि भ्रष्ट बाटो रोज्ने हो भने, समाज र देश समय अन्तरालमा पूर्णत: अराजक हुनेछन्। सचेत व्यक्तिहरूले सरकार जस्तोसुकै भए पनि आफ्नो दायित्व चाहिँ निर्वाह गर्ने र सरकारमाथि सुशासनका लागि निरन्तर दबाव दिने बाटो रोज्नु चाहिँ समस्या समाधानको सही उपाय हो। तर अफसोच, यहाँ थोरैले मात्र त्यस्तो

बाटो अपनाएका छन् । सरकार भनेको सचेत ठानिएका व्यक्तिहरूको समूह हो। तर, सचेत व्यक्तिहरू नै बढी भ्रष्ट भएपछि सरकार भ्रष्ट भयो भनेर के गुनासो गर्नु ! सरकार चलाउनेहरू कुनै अमुक स्थानबाट टिपेर ल्याइएका अमुक प्राणी होइनन् । ती हामीबीचबाटै त्यहाँ पुगेका हुन् । हामी सबैमा व्यक्तिगत त्याग नगरीकनै देशको विकास खोज्ने र आफूलाई लाभ हुने काम मात्रै गर्ने प्रवृत्ति छ भने सरकारका सदस्यहरू इमानदार भएनन् भनेर कसरी भन्ने ! खूब पढे-गुनेकाहरूको व्यापारिक फर्ममा मलाई सोधिएको छ, “भ्याट तिर्ने कि नतिर्ने ?” “तिर्ने” भनेर जवाफ दिँदा, “बेकार किन तिर्नुहुन्छ; पैसाको खती मात्र !’ भनेको मैरै कानले सुनेको छु । कुरा पछि बुझेँ, जहाँतहीँ ‘भ्याट तिर्ने कि नतिर्ने ?’ भनेर किन सोध्दा रहेछन् भने, भ्याट नतिरेपछि उनीहरूले गर्ने आयमा कर छल्न मिल्ने रहेछ । कैयौँ ठूलठूला कम्पनी कर प्रयोजनका लागि देखाउने ‘एक नम्बर’ र अरूलाई

नदेखाउने 'दुई नम्बर' खाता राखेर कर छल्ने गर्छन्। कैयौँ अडिटर स्वयं सरकारी कर अधिकृत र व्यापारीबीचको घुस्याहा दलाल बनेर कर छल्न सघाउ पुऱ्याउने अनि आफ्नो र कर अधिकृतको खल्ती भर्ने काम गर्छन्। पछिल्लो समयमा कर असुली प्रणालीमा धेरै सुधार गरिएको भए पनि अझै पनि ठूला ठगहरू घूस खुवाएर उम्कन सक्ने र साना ठगहरू चाहिँ उम्कन नसक्ने अवस्थामा भने सुधार आउन सकेको छैन।

निश्चित विन्दुमाथि उच्च आय कर, पैतृक सम्पत्ति कर, जग्गाको हदबन्दी जस्ता न्यायपूर्ण समाजका आधारभूत अर्थ व्यवस्था स्वीकार गर्न चाहने व्यक्तिहरू थोरै होलान्। तर, यदि सरकार र सचेत भनिएका व्यक्तिहरूले अलि इमानदार भैदिने हो भने, निश्चय पनि 'कर केका लागि तिर्ने?' भन्नेहरूले त्यस्तो प्रश्न गर्न आँट गर्नेछैनन्। त्यस्तो प्रश्न गर्दा तिनलाई लाज हुनेछ। न्यायपूर्ण समाजका लागि आवश्यक भूमिका

निर्वाह गर्न नसक्दा अहिले पनि धेरै धनाढ्यले शान्तिले सुत्न पाएका छैनन् । झन्, सरकार भ्रष्ट छ भन्दैमा कर तिर्न नचाहने, कर छल्ने र शान्त समाजका लागि आवश्यक पूर्वाधारहरूको विरोध गर्ने हो भने त कालान्तरमा तिनले निद्रा मात्र गुमाउनेछैनन्, आफ्नो र आफ्ना सन्तानको चिहान पनि आफैँ खन्नेछन् । आफू र आफ्नो परिवारका सदस्यलाई प्रत्यक्ष आर्थिक असर पर्ने भए पनि यो समाजलाई सुन्दर बनाउन र हामी सबै शान्तिले बाँच्न चाहने हो भने, हुनेहरूले नहुनेहरूका लागि अलिकति बढी त्याग गर्नैपर्छ । अर्को कुनै विकल्प छैन ।

*नागरिक दैनिक, २०६७ मङ्सिर २२*

# सिद्धान्तवादी अन्धाहरू

समय घर्किंदो छ; तर संविधान लेखनको प्रश्न फेरि एकपल्ट ओझेलमा परेको छ। गरीब नै भए पनि शान्ति, सौन्दर्य र सहअस्तित्वको गरिमामय इतिहास बोकेको यो देशलाई उत्तर र दक्षिण फर्किएका सिद्धान्तवादी अन्धाहरूले ध्वस्त पार्ने खतरा बढ्दै गएको छ। तिनीहरूमध्ये अधिकांशमा मानवीय संवेदना नै छैन; अमानवीय स्वार्थ मात्र छ। ती लोकतन्त्र र जनवादको कुरा गर्छन्; बहुलवादबारे बहस गर्छन्। तर, तिनीहरूलाई खान नपाएर आत्महत्या गर्ने परिवारको पीडाले पोल्दैन; तुइनमा झुन्डिएर विद्यालय जाने साना नानीहरूको तस्वीरले दुख्दैन। ती अन्धाहरूलाई सिर्फ कागजी सिद्धान्तसँग मतलब छ, वास्तविक परिवर्तनसँग होइन। किनभने, तिनले दास मानसिकता बोकेका छन्। दृष्टिविहीनहरूको त चेतनाको आँखा खुलै हुन्छ;

तर दास मानसिकता हुनेहरू त पूर्ण रूपमा अन्धा हुन्छन्। सिद्धान्तको जितबाटै परिवर्तन आउँछ भन्ठान्नेहरू सिद्धान्तका दास हुन्, परिवर्तनका वाहक होइनन्। तिनीहरूलाई फगत सैद्धान्तिक रूपमा हावी हुनु छ; चुनाव जित्नु छ; मन्त्री-प्रधानमन्त्री हुनु छ र झन्डा फहराएर हिँड्नु छ। सिद्धान्तलाई हतियार बनाएर कुर्सीका लागि लड्ने क्रममा बाँकी देश जहाँसुकै जाओस्, तिनीहरूलाई मतलब छैन। ती भन्ने गर्छन्, "राजनीति भनेकै शक्ति सङ्घर्ष हो, शक्ति सङ्घर्ष त भैहाल्छ नि! ... शहरिया मध्यम वर्ग परिवर्तन एक रातमा आउँदैन भन्ने बुझ्दैन र उसले छिटै धैर्य गुमाउँछ। तपाईंको आक्रोश पनि त्यसैको अभिव्यक्ति हो!"

तर माथिको अनुच्छेद आक्रोशको अभिव्यक्ति होइन, सिद्धान्तवादी अन्धाहरूलाई चेतावनी हो। यो पङ्क्तिकारले पहिले पनि लेखेको थियो– देश नै बनाउने रहर हो भने, अधिकांश स्थितिमा सैद्धान्तिक स्वरूप जस्तो भए

पनि केही फरक पर्दैन। यो संसारमा भिन्नभिन्न राज्य व्यवस्था र भिन्नभिन्न राज्य संरचना भएका भिन्नभिन्न प्रकृतिका कैयौँ देशले उल्लेख्य प्रगति हासिल गरेका छन्। हाम्रो दक्षिणी छिमेकी भारतमा एक प्रकारको र उत्तरी छिमेकी चीनमा अर्को प्रकारको शासन व्यवस्था छ। दुवैले असाधारण प्रगति गरिरहेका छन्। अमेरिका र बेलायत अथवा योरोपका कतिपय देशको शासन प्रणालीमा अन्तर छ; तिनले पनि विकास गरेकै छन्। दूरपूर्वका कतिपय देशमा नरम अधिनायकवादी व्यवस्था छ; तिनको आर्थिक विकास उदाहरणीय रहेको छ। खाडीका अधिकांश मुलुकमा राजतन्त्रात्मक र धर्मप्रधान शासन व्यवस्था छ; तर ती पनि कहाँबाट कहाँ पुगिसके! खाडी राष्ट्र कतारले त सन् २०२२ को विश्वकप फुटबल प्रतियोगिता नै आयोजना गर्ने भैसक्यो। भन्नेले भन्लान्, तेल थियो अनि विकास गरे खाडी राष्ट्रहरूले भनेर। तर, विश्वमा तेलको एघारौँ ठूलो भण्डार र खनिज

पदार्थहरूले भरिभराउ अफ्रिकी राष्ट्र नाइजेरियाको हाल बेहाल छ। आधाभन्दा बढी जनसङ्ख्या गरीबीको रेखामुनि बस्छ। हामी पनि यति धेरै प्राकृतिक सौन्दर्य र जलविद्युत् भण्डार लिएर बसेका छौँ; हाम्रो हालत पनि नाजुक छ। बरु, हाम्रै छिमेकी सानो राष्ट्र भुटानले प्रगति गरिरहेको छ। हाम्रा सिद्धान्तवादी अन्धाहरूलाई भन्न खोजेको के हो भने, तपाईंहरूका 'जनवाद' र 'बहुलवाद' का सिद्धान्तले देश बन्ने होइन। जनवादी होस् या बहुलवादी, एउटा पद्धतिले काम गर्न पायो भने देश बन्ने हो। झन् व्यापक विदेशी चलखेल हुने हाम्रो जस्तो देशमा सिद्धान्तले होइन, एकता, आदर्श र इमानदारीले मात्र काम गर्न सक्छ, जो हाम्रो राजनीतिक नेतृत्वमा शून्य छ।

तत्कालको उदाहरण दिऊँ। सहमतीय सरकारबिना संविधान बन्दैन भन्ने एमालेको अडान ठीक थियो। तर, सहमति बन्नै नसक्ने स्थिति सृजना भएपछि एमालेले बहुमतीय सरकार पनि स्वीकार गर्न सकिने

निर्णय गऱ्यो। आफ्नो दलले झन्डै डेढ वर्ष सरकारको नेतृत्व गरेर कुनै लछ्छारपाटो लाउन नसकेको, आफ्नो दलको उम्मेदवारी एक पटक फिर्ता लिइसकेको, नेपाली काङ्ग्रेससँग शान्ति प्रक्रियामा लगभग समान धारणा भएको स्थिति हुँदाहुँदै एमालेले अब रामचन्द्र पौडेलको उम्मेदवारीलाई समर्थन नगर्ने र सकभर आफ्नै नेतृत्वमा सरकार बनाउन प्रयास गर्ने निर्णय गरेको छ। तिनलाई देशको भविष्यको अलिकति पनि माया हुँदो हो त, अहिलेको अवस्थामा तिनले बहुमतीय सरकारलाई नै समर्थन गर्ने हो भने बिनाशर्त पौडेलको पक्षमा उभिनुपर्थ्यो कि पर्थेन ? तर, देशबारे यहाँ कसलाई के मतलब ! शान्ति र संविधान त बहाना मात्र हो; पहिलो लक्ष्य त कुर्सी नै हो। यहाँ सबै सिद्धान्तवादी अन्धाहरू आफ्नो अनादर्श छोप्न सिद्धान्तको खोल ओढेर टल्किन खोजिरहेका छन्। सबभन्दा ठूलो विडम्बना त्यसैमा छ।

त्यसैको परिणामस्वरूप आम मानिसमा 'नयाँ नेपाल'

प्रतिको नैराश्य तीव्र गतिमा बढिरहेको छ । कतिसम्म भने, पूर्वयुवराज पारस शाह जस्तो बदनाम विगत भएका व्यक्ति 'गोलीकाण्ड' मा मुछिएर थुनामा पर्दा पनि उनकै समर्थनमा ठाउँठाउँमा जुलुसहरू निस्किए । हिरासतबाट छुट्दा उनले नायकको जस्तै सत्कार पाए । तर, 'पारस शाह : मुर्दावाद !', 'पारस चोर, देश छोड् !' भन्दै स्वस्फूर्त रूपमा सडकमा निस्कने विगतका आम सर्वसाधारण कहीँकतै देखिएनन् । जुन ढङ्गबाट पूर्वराजा ज्ञानेन्द्र, पूर्वयुवराज्ञी हिमानी शाह र पारस शाहको स्वीकार्यता व्यापक रूपमा बढेको देखिन्छ, त्यो सङ्घीय लोकतान्त्रिक गणतन्त्रबाट देश स्वर्ग बन्छ भन्ने सिद्धान्तवादी अन्धाहरूका लागि शुभसङ्केत होइन । यो तथ्यलाई नेताहरूले कत्ति पनि ग्रहण गरेको प्रतीत हुँदैन । वास्तवमा भन्ने हो भने, अब त गणतन्त्रात्मक परिवर्तनलाई संस्थागत गर्न अत्यावश्यक पर्ने नयाँ संविधान बनाउने मानसिकतामा समेत कोही देखिँदैनन् । एमाले र नेपाली काङ्ग्रेस संविधान बरु

नबने नबनोस्, त्यसको सबभन्दा ठूलो चोट माओवादीलाई नै त पर्ने हो भन्ने मनस्थितिमा छन् भने, माओवादीहरूले त संविधान बन्दैन भन्नेमा झन्डैझन्डै विश्वस्त भएर, 'जनविद्रोह' का लागि बिस्तारै तयारी नै शुरू गरिसकेका छन्। अनि, माओवादीले वागँ खुवाइदिएको नागरिक समाजका कैयौं अगुवा विगतमा आफूले गरेको विश्लेषणमा परेको भ्वाङ टाल्ने प्रयासमै समय खर्चिरहेका छन्।

संविधान निर्माणका लागि छ महिनाको समय मात्र बाँकी छ। दलहरूबीच सहमति भए त समय फेरि पनि थपिएला; तर सहमति नहुने हो भने समय फेरि केका लागि थप्ने? 'कामकुरो एकातिर कुम्लो बोकी ठिमीतिर' भनेझैँ कसैलाई अत्यन्त अर्थपूर्ण इतिहास बोकेको राष्ट्रिय झन्डा परिवर्तन गर्नुपर्ने, कसैलाई लोकतान्त्रिक संविधान भनिसकेपछि संविधानको प्रस्तावनामा 'बहुलवाद' लेख्नैपर्ने! यी पनि के बहस गर्नुपर्ने विषय हुन्! झन्डा परिवर्तन गरेर के भोका नेपालीको पेट भरिन्छ? कि नेपालको शिर ठाडो हुन्छ

? मेरा मित्र शेखर खरेलले *कान्तिपुर* दैनिकको आफ्नो लेखमा लेखेछन्, "झन्डा फेरिएपछि कसैलाई देशको नामै फेर्न मन लाग्ला रे। अनि त्यस बेला के गर्ने ?" किनभने, नेपाल राष्ट्रको नामसँग पनि 'सामन्तवाद' को लामो इतिहास जोडिएको छ। अनि संविधानको प्रस्तावनामा 'बहुलवाद' राख्नैपर्छ भन्नेहरूको तर्क पनि राष्ट्रिय झन्डामा परिमार्जन नगरीकन त्यसले नयाँ नेपालको प्रतिनिधित्व गर्दैन भन्ने माओवादीको तर्क जस्तै वाहियात छ। लोकतान्त्रिक संविधान भनेर त्यसै अनुरूपको राज्य व्यवस्था निर्माण गरिसकेपछि 'बहुलवाद' शब्द नै किन चाहियो ? लोकतान्त्रिक संविधान स्वयं नै बहुलवादी सोचको परिणाम हो। संविधान निर्माणमा विवादित दर्जनौं विषयमा दलहरूले सहमति जुटाए, जुन प्रशंसनीय छ। तर, तपशिलका विषयहरूमै यसरी अल्झेर बस्ने अब समय छैन। त्यसो गर्ने हो भने राज्यको पुनर्संरचना र राज्यको शासकीय स्वरूप जस्ता अत्यन्तै गम्भीर र जटिल प्रश्नहरूमा तिनले

कहिले सहमति जुटाउने ?

संविधान नबनेको या फेरि संविधान सभाको म्याद नथपिएको खण्डमा राजनीतिक समीकरणहरू अनपेक्षित ढङ्गबाट बदलिने पक्का छ। त्यति बेला विवेक होइन, बल र बन्दुक हावी हुनेछ। अनि फेरि त्यो परिस्थितिलाई ट्र्याकमा लेराउन अरू कैयौँ वर्ष लाग्नेछ। शब्द र सिद्धान्तमा रुमलिएका अन्धाहरूले, टीभी, रेडियो र पत्रपत्रिकामा प्रकट हुने आफ्नो रूप र अभिव्यक्ति त देखेका होलान्; आफूले राजनीतिक रसायन पोतेर अन्धो बनाएका आफ्ना कार्यकर्ताहरूको ताली त सुनेका होलान्; कसैकसैले मन्त्री र नेता कहलिँदाको अहं पनि बोकेका होलान् र त्यसैमा गमक्क फुलेका होलान्; तर तिनीहरूले यो देशको सुन्दर विगत र सम्भाव्य सुन्दर भविष्यलाई भने ध्वस्त पारिरहेका छन्। यस्तै हो भने आफूले खनेको खाल्डोमा ती अब छिटै आफैँ फस्नेछन्। होशियार !

*नागरिक दैनिक, २०६७ पुस ७*

# राजनीतिमा युवा : दुई विकल्प

नेपाली काङ्ग्रेस र नेकपा एमालेका दुई आशालाग्दा युवा नेता क्रमशः गगन थापा र योगेश भट्टराईसँग भेट हुँदा भट्टराईले फ्याट्ट भने, "हेर्नोस्, यो देशका सबै प्रमुख दलका सबभन्दा वरिष्ठ भनिएका पाँच-पाँच नेतालाई राजनीतिबाट बिदा नगरेसम्म राजनीति सुध्रिँदैन। गगनजी र हामी त्यसबारे छलफल गरिरहेका छौँ। नत्र कहीँ केही गर्न सक्ने स्थिति छैन।"

त्यत्तिकैमा थापाले थपे, "हुन पनि हो, ठूला नेताहरूको राजनीति देखेर यति दिक्क लागिसक्यो, कुरा गरेर साध्य छैन। दलभित्र कहीँकतै प्रक्रियाले काम गरेको देखिँदैन। तिनले बाहिर जे बोल्छन् अनि जसरी दलभित्रको र अन्तरदलीय षड्यन्त्रको मञ्चन गर्छन्, त्यो हेर्दा त मलाई आफ्नो जीवन सफल त कुरै छोडिदिऊँ, विफल मात्र नभैदिए पनि हुन्थ्यो भनेजैँ

लाग्न थालिसक्यो।”

प्रमुख दलका पाँच-पाँच वरिष्ठ नेतालाई राजनीतिबाट बिदा गरे पनि समस्या त्योभन्दा तल्लो पुस्तामा त्यत्तिकै व्याप्त छ। आफूलाई फाइदा हुने हो भने तल्लो पुस्ताका अधिकांश नेतालाई पनि दलभित्र लोकतन्त्र, पारदर्शिता र पद्धति केही पनि चाहिँदैन। यद्यपि उनीहरू बाहिर चाहिँ सधैँ देशमा तिनै आदर्शको स्थापनाका लागि लडिरहेको बताउँछन्। आदर्शका संवाहक हुनुपर्ने विद्यार्थी नेताहरू कलेजै जाँदैनन् भन्ने समाचार केही समयअघि आएकै हो। यो त राजनीतिमा तलसम्म फैलिएको नैतिक भ्रष्टताको एउटा उदाहरण मात्र हो। यस्ता उदाहरण दर्जनौँ भेटिन्छन्।

चर्चित युवा नेताहरूका माथि उल्लेख गरिए जस्ता टिप्पणीहरूले निश्चय पनि उत्साह जगाउँदैनन्। तर, त्यसो भनेर उनीहरू राजनीतिबाट भाग्ने कुरा पनि आउँदैन। उनीहरूको निरुत्साहलाई कसरी सम्बोधन

गर्ने त भनेर चाहिँ सबैले सोच्न अत्यावश्यक भैसकेको छ। त्यसका सम्भवतः दुइटा विकल्प हुन सक्छन्।

पहिलो, अति दुर्गन्धित राजनीतिक वातावरणका कारण मानिसहरू यस्तो विन्दुमा पुगिसकेका छन्, उनीहरू देशको प्रमुख राजनीतिक दलका नेतालाई एक सर्वसाधारणले सार्वजनिक स्थलमा चड्कन हान्दा पनि, उसैलाई 'हिरो' बनाइरहेका छन्। तर वास्तविकता चाहिँ के हो भने, यो पङ्क्तिकारले जस्तै अधिकांशले बाहिरै बसेर त्यो दुर्गन्धित राजनीतिक वातावरणको कटु आलोचना चाहिँ गरिरहेका छन्। तर, त्यो स्थितिलाई सुधार्न अग्रसरता भने धेरै कमले मात्र लिन सकेका छन्। जसले लिने प्रयास गरेका छन्, ती यसरी विशाल राजनीतिक विषवृक्षको ओझेलमा परेका छन्, उनीहरूको राजनीतिक अस्तित्व नै अर्थहीनप्रायः छ। उनीहरू देश बनाउने होइन, दलभित्र आफ्नो राजनीतिक अस्तित्व र आदर्शको संवर्धन गर्ने प्रयासमै दशकौं बिताउन बाध्य हुन्छन् र त्यसै अस्ताउँछन्।

त्यो परिस्थिति आउन नदिने हो भने, अब पढेका, लेखेका, जानेका, बुझेका, देखेका, अनि सबभन्दा महत्त्वपूर्ण कुरा, देश बनाउने दृढ चाहना, अटल स्वाभिमान र इमानदारी भएका युवाहरू हूलका हूल राजनीतिमा प्रवेश नगरी हुँदैहुँदैन। आआफ्नो आस्था अनुसार जुन दलमा प्रवेश गरे पनि हुन्छ; तर तिनले राजनीतिमा प्रवेश चाहिँ गर्नैपर्छ। त्यस्ता युवाहरूलाई इज्जतको डर हुन्छ; ती पद र पैसाका लागि बिक्दैनन्। ती आफूलाई घाटा पर्ने भए पनि पद्धतिमा विश्वास गर्छन्। ती स्वाभिमानमा गर्व गर्छन्; स्वाभिमानहीनहरूलाई गन्दैनन्। तिनलाई विदेशीसँग कसरी नाक ठाडो राखेर कुराकानी गर्ने भन्ने थाहा हुन्छ। ती छोराछोरी या आफन्तलाई पढ्न पठाउन राजदूतलाई खिस्स दाँत देखाउँदै बिन्तीभाउ गर्दैनन्; सिफारिसपत्र लेख्दैनन्। बढीभन्दा बढी सङ्ख्यामा त्यस्ता युवाहरू राजनीतिमा प्रवेश गर्ने हो भने, केही वर्षभित्रै राजनीतिबाट गन्हाउने अनुहारहरूलाई विस्थापन

गर्न गाह्रो हुनेछैन । गगन थापाले नेपाली काङ्ग्रेसको केन्द्रीय सदस्यमा सर्वाधिक मत ल्याएर त्यो तथ्यलाई पुष्टि पनि गरिसकेका छन् । यसको अर्थ वरिष्ठजति सबै गन्हाउने छन् र नयाँ आउने कनिष्ठहरू सबै सुगन्धित हुने छन् भन्ने चाहिँ होइन । तर, सक्षम र स्वाभिमानी युवाहरूको अत्यधिक प्रवेशले आशाको जग भने बलियोसँग निर्माण गर्नेछ । दलभित्र त्यस्ता युवाहरूको सङ्ख्या थोरै रहँदासम्म तिनले ठोस परिवर्तनकारी काम गर्न सक्ने सम्भावना न्यून रहन्छ ।

अलिकति अव्यावहारिक र कठिन लाग्न सक्छ; तर युवाहरूले नेपाली राजनीतिलाई सुधार्ने अर्को विकल्प पनि छ । त्यो के हो भने, नेपालका प्रमुख राजनीतिक दलहरूमा सैद्धान्तिक मतभेदहरू पहिलेपहिलेभन्दा धेरै न्यून भएर गैसकेका छन् । नेपाली काङ्ग्रेस र नेकपा एमालेबीच त वास्तवमा भन्ने हो भने नामको मात्र भिन्नता छ । अन्यथा, अन्य भिन्नता सबै तपशिलका विषय भैसकेका छन् । आधारभूत रूपमा दुवै लोकतान्त्रिक

र समाजवादी पार्टी हुन्। बाँकी रह्यो एकीकृत नेकपा माओवादी। लोकतन्त्रका हकमा त्यो अझै पनि विभाजित छ र एउटा खेमा अझै पनि क्रान्ति गरेर एकदलीय साम्यवाद नै स्थापना गर्न सकिन्छ भन्नेमा विश्वास गर्छ। तर त्यहींभित्र अर्को खेमा पनि छ, जो माओवादी साम्यवादको नाममा सशस्त्र युद्ध लडेर यहाँसम्म आइपुगेको भए पनि अब विश्वव्यापी लोकतन्त्रको एउटा रूपलाई अङ्गीकार नगर्ने हो भने यहाँभन्दा अगाडि बढ्न सकिँदैन भन्नेमा विश्वस्त छ। त्यो खेमाले साम्यवादको आर्थिक अवधारणालाई पनि नरम तुल्याएर कल्याणवादको तहमा झारिसक्यो, जुन काङ्ग्रेस र एमालेले बुझेको समाजवादभन्दा अलि बढी जनकल्याणकारी हुन्छ। उक्त खेमालाई सोध्यो भने, उसको जवाफ हुन्छ, "साम्यवादको यात्रा धेरै लामो हुन्छ; त्यसका लागि सदियौँ पनि लाग्न सक्छ; समाजवादको बाटो नहिँडी साम्यवादसम्म पुग्नै सकिँदैन।" त्यसैले सार्वजनिक रूपमा स्पष्ट शब्दमा स्वीकार नगरे

पनि माओवादीभित्र लोकतन्त्र र समाजवादका अनुयायी प्रशस्तै जन्मिसकेका छन् ।

यसरी दलहरूबीचका सैद्धान्तिक मतभेदहरू साँगुरिँदै जाँदा पनि स्थिर राजनीति र देश विकासको कुनै सङ्केत नदेखिनुको एउटै प्रमुख कारण वर्तमान राजनीतिक दलका नेताहरूको चौतर्फी अक्षमता र इमानदारीको अभाव नै हो । संविधान बन्दैमा न तिनको क्षमता अभिवृद्धि हुनेवाला छ, न त तिनको चरित्र बदलिनेवाला छ । हरेक दलभित्रको माहौल यस्तो षड्यन्त्रमूलक छ, सक्षम र इमानदार व्यक्तिहरू माथि उठ्ने सम्भावना अत्यन्त न्यून छ । कि त ती षड्यन्त्रकै अंश बन्नुपर्छ कि ती नेतृत्वको तल्लो या मध्यम तहमै सीमित हुनुपर्छ । उदाहरणका लागि, गगन थापा यस पटक सर्वाधिक मत ल्याएर केन्द्रीय समितिको सदस्य भए । अर्कोपल्ट उनी सभापतिको उम्मेदवार बन्न सक्छन् । तर, त्यति बेलासम्म उनले आफ्नो क्षमता र इमानदारी कायम राखे पनि, के उनलाई आफ्नो सम्पूर्ण राजनीतिक

जीवनै गन्दा खेलमा बिताएर हावी भएका उनीमाथिका कैयौँ नेताले सभापति बन्न देलान् ? अनि उनी सभापति भए नै भने पनि दलभित्रको षड्यन्त्रको माहौलमा के उनले देश विकासका लागि पूर्वदृष्टि बोकेर त्यसका लागि काम गर्न सक्लान् ? या, अहिले सबै दलका प्रमुख नेताहरूले गरेझैँ सिर्फ दलभित्रको आन्तरिक समीकरण र विग्रहको व्यवस्थापन गर्दैमा बूढो होलान् ? यो स्थिति एउटा दलमा मात्र होइन, सबैमा विद्यमान छ ।

यस्तो अवस्थामा, अहिले धेरैले चर्चा गरेका विभिन्न दलका आशालाग्दा युवा नेताहरू, पहिलो कुरा त, दलको नेतृत्वमा पुग्ने सम्भावनै कम छ । दोस्रो कुरा, नेतृत्वमा पुगिहाले भने पनि तिनले दलको आन्तरिक व्यवस्थापनको तहबाट माथि उठ्न सक्ने परिस्थिति नै छैन । त्यस क्रममा तिनीहरू मन्त्री, प्रधानमन्त्री त बन्लान्; तर तिनले दलभित्रको र दलबाहिरको षड्यन्त्र र विग्रह व्यवस्थापनमै बढी ध्यान दिनुपर्ने भएपछि

देश विकासको काम कसरी गर्ने? आजका आशालाग्दा भनिएका युवा नेताहरूले पनि राजनीतिमा जीवन बिताउने, दलभित्र र सरकारमा पद पनि हासिल गर्ने, तर देशको स्थिति चाहिँ परिवर्तन गर्न नसक्ने अवस्था टड्कारो रूपमा देखिनु अत्यन्त दुःखद परिस्थिति हो। ४० वर्ष पनि नपुगेका गगन थापाले राजनीतिमा लागेर जीवन सफल हुन नसके पनि विफल नभैदिए हुन्थ्यो भनेर त्यसै भनेका होइनन्।

त्यसैले, हरेक दलका प्रतिबद्ध, क्षमतावान् र इमानदार युवा नेताहरूमा आफ्नो राजनीतिक जीवन साँच्चै सफल नै पार्ने र यो देशलाई आफ्नै जीवनकालमा सुन्दर र विकसित देख्ने इच्छा छ भने यसो गरे कसो होला ?– खुकुलो हिसाबमा भन्नुपर्दा, लोकतान्त्रिक कार्यसूची काङ्ग्रेस र एमालेको अनि कल्याणवादी कार्ययोजना माओवादीको मिलाएर सबै दलका असल युवा नेताहरू एक ठाउँमा आउने र एउटा नयाँ दल स्थापना गर्ने। दलबाहिरका प्रतिभावान् र प्रतिबद्ध

युवाहरूलाई पनि सो दलमा सामेल गर्न प्रयास गर्ने। देश विकास र आर्थिक रूपान्तरणको एउटा स्पष्ट खाका तयार पार्ने र शुरूदेखि नै दललाई लोकतन्त्र, कानूनी प्रावधान र आर्थिक पारदर्शिताका आधारमा सञ्चालन गर्ने। त्यसो गरेको खण्डमा सबै पक्षका राम्रा मान्छेहरू समेटिएको सो दलले देशभर सबै पक्षबाट व्यापक समर्थन पाउने आशा गर्न सकिन्छ र भविष्यमा हुने कुनै पनि निर्वाचनमा त्यसको शानदार विजयलाई कसैले रोक्न सक्नेछैन। त्यसबाट वर्तमानका दलहरूले पनि आफूलाई सुधार्नैपर्ने बाध्यता सृजना हुनेछ। माथि उल्लिखित विकल्पहरूबारे आम युवा र दलभित्रका युवा नेताहरूले विचार नगर्ने हो भने तिनले पनि बाँकी जीवनको हरेक दिन यो बैठकबाट त्यो बैठक, त्यो बैठकबाट अर्को बैठकमा दौडिँदै अनि अन्त्यमा सुन्दर र समृद्ध नेपाल चाहिँ नहेरीकनै देहत्याग गर्नुपर्ने निश्चितप्राय: देखिन्छ।

*नागरिक दैनिक, २०६७ माघ १८*

# पैसा, पढाइ छैन ? राजनीति नगर्नोस्

२०६७ फागुन ७ गते सहधर्मी पत्रकारद्वय गङ्गा बीसी र कुलचन्द्र न्यौपानेले *कान्तिपुर* दैनिकमा दलहरूको नेतृत्व तहमा बढिरहेको युवाहरूको सङ्ख्याबारे राम्रो विश्लेषण लेखेका छन्। उनीहरूले दिएको तथ्याङ्क अनुसार, माओवादीमा ५० प्रतिशत अनि नेकपा एमाले र नेपाली काङ्ग्रेसमा २०-२० प्रतिशत युवाहरू नेतृत्व तहमा उक्लन सफल भएका छन्। राजनीतिमा सक्षम युवाहरूको प्रवेशलाई बारम्बार जोड दिँदै आएको यो पङ्क्तिकारका लागि निश्चय पनि त्यो एउटा उत्साहजनक तथ्याङ्क थियो। त्यति हुँदाहुँदै पनि नेपाल जस्तो गरीबी र अशिक्षाबाट ग्रस्त देशमा राजनीतिमा युवाहरूको भूमिकाको चर्चा गर्दा केही आधारभूत महत्त्वका विषयहरूबारे सोच्नैपर्ने हुन्छ।

पहिलो, आत्मनिर्भर हुने आम्दानीको स्रोत छैन भने

सक्रिय राजनीति नगरौँ। कुनै दलप्रति सद्भाव राख्नु या समर्थन गर्नु बेग्लै कुरा हो; तर सक्रिय राजनीति गर्नुको अर्थ सम्पूर्ण समय राजनीतिमा लगाउनु हो। त्यस्ता व्यक्तिहरूसँग जीवन धान्न आवश्यक बचत या नियमित आम्दानीको स्रोत छैन भने, तिनीहरू आर्थिक र नैतिक रूपमा भ्रष्ट हुनुसिवाय अर्को विकल्प हुनै सक्दैन। आफ्नो र परिवारको पेट भोको राखेर कसैले पनि राजनीति गर्न सक्दैन। जसले आम्दानीको वैकल्पिक स्रोत नभैकन पूर्णकालीन राजनीति गरिरहेका छन्, ती चाहेर पनि इमानदार रहन सक्दैनन्। पद पाउने आशामा ती कुनै न कुनै नेताका दास हुन्छन्; चाकडीबाज हुन्छन् र व्यापारी या अन्य पेशाका कतिपय व्यक्तिको स्वार्थका वाहक हुन्छन्। काठमाण्डुमा डेराको भाडा तिर्न, आफैँलाई खान, दिनभरि राजनीतिक गतिविधिमा दौडन र अझ श्रीमती र बालबच्चा छन् भने तिनलाई खुवाउन र पढाउन पैसै नहुने स्थिति सृजना हुने भयबाट ती सधैँ ग्रस्त भएका हुन्छन्।

त्यसैले, तिनले मौका पाउनेबित्तिकै, अलि डर भए सानो, डर नभए ठूलै प्रकृतिको भ्रष्टाचार गर्छन्। भनिन्छ, पीडा र लज्जाले मान्छेलाई एक पटक मात्र दुख्छ। एकपल्ट त्यो पचाएपछि तिनले मौका पायो कि थप भ्रष्टाचार गरिहाल्छन्।

अरूको त कुरै छोडिदिऊँ; आदर्शको सबभन्दा ठूलो ठेकदार बनेका कतिपय माओवादी नेता बढ्दो रूपमा भ्रष्ट हुन थालेका खबरहरू आउन थालेका छन्। नहुन् पनि कसरी ! राजनीतिको थलो काठमान्डु भैसक्यो; जिल्लामा भएको अलिकति सम्पत्तिले छेउ-टुप्पो केही लाग्दैन। पार्टीले दिएको खाएर कति बाँच्ने ! भोलि पार्टीसँग विमति भयो; पार्टी छोड्नु पर्‍यो या पार्टीले हेला गर्‍यो भने, कसरी बाँच्ने! परिवार कसरी पाल्ने! अन्य पार्टीमा पनि पार्टीले कार्यकर्ता पाल्नु नै पर्ने स्थिति नभए पनि, अधिकांश राजनीतिक कार्यकर्ताको आर्थिक पृष्ठभूमि राम्रो छैन।

कतिपय युवा भेलामा यस किसिमको धारणा व्यक्त

गर्दा, “के गरीबले राजनीति नै नगर्ने त?” भनेर कैयौँ युवाले प्रश्न उठाएका छन्। त्यसको स्पष्ट उत्तर हो, “गरीबले सबभन्दा पहिले सकिन्छ भने पढ्ने, जसले आत्मनिर्भरताका लागि पृष्ठभूमि तयार पार्छ। पढ्न सक्ने अवस्था छैन भने, नपढीकनै भए पनि शुरूदेखि नै कम से कम न्यूनतम आत्मनिर्भरताको बाटो पहिल्याउने।” पढ्न पनि नसक्ने, आत्मनिर्भरताको बाटो पनि खोज्न नसक्नेले राजनीति नगर्नु नै बेस। ‘लोकतन्त्र स्थापना गर्ने, त्यसको जगेर्ना गर्ने, लोकतन्त्रका लागि ध्यान दिने, सामन्तवादलाई परास्त गर्ने, सर्वहाराको शासन स्थापना गर्ने’ जस्ता नेताहरूले फलाकेका नारा बोकेर पढाइ बिगार्ने र जीविकोपार्जनलाई ध्यान नदिने हो भने, ती सबै युवा भविष्यमा बेकम्मा हुन्छन्। तातो रगत छँदा त उनीहरूलाई आन्दोलन गरेर क्या उपलब्धि हासिल गर्‍यौँ जस्तो लाग्ला; तर जब बिस्तारै उमेर ढल्किँदै जान्छ, विवाह गर्ने र परिवार पाल्ने बाध्यताले पेल्न थाल्छ, त्यति बेला, विद्यार्थी

छुँदा सडकमा बालेको टायरले आफैँलाई पोल्न थाल्छ। यो पङ्क्तिकारले राजनीतिको नशा लागेर, आफ्नै राजनीतिक आस्था स्थापना भए मात्र देश बन्छ भन्ने भ्रम बोकेर राम्ररी पढ्न पनि नसकेका, जीविकोपार्जनको कुनै बाटो समाउन नसकेका र छोराछोरी बिरामी हुँदा साथीहरूसँग सहयोग माग्दै हिँड्न बाध्य भएका धेरै युवा भेटेको छ। देश त्यस्ता युवाहरूको राजनीतिले बन्दैन। सबभन्दा पहिले आफूलाई आत्मनिर्भर बनाउन सक्नेले मात्र देश बनाउन सक्छ। युवाहरूले राजनीतिमा होमिनुअगाडि यस्तो विषयलाई सोच्नैपर्ने हुन्छ। नत्र, तिनबाट देशले थप राजनीतिक भ्रष्टताबाहेक केही पनि पाउनेछैन।

आत्मनिर्भरतासँग प्रत्यक्ष रूपमा गाँसिएको र कुनै पनि युवाले अवमूल्यन गर्नै नसक्ने अर्को पक्ष हो– शिक्षा। पैसा नहुनेले सक्रिय राजनीति नगर्दा राम्रो भनेझैँ, राम्रो शिक्षा नहुनेले पनि सक्रिय राजनीति नगर्नु नै बेस। हामीकहाँ राम्रो शिक्षा पाएका युवाहरू

राजनीतिमा विरलै जाने गर्छन्। ती राजनीतिका कुरा गर्छन्; राजनीतिबारे मैले जस्तै टिप्पणी गर्छन्; विदेशमा राम्रो जागिर पाए त्यतै हराउँछन्; नभए पनि नेपालमै अन्य आकर्षक ठानिएका पेशामै भविष्यका सपना बुन्छन्। राम्रो शिक्षा पाएकाहरूको त्यो प्रवृत्तिले गर्दा सक्रिय राजनीतिमा कम पढेका या बल्ल-बल्ल बीएसम्म पास गरेकाहरूको बाहुल्य रहेको छ। अथवा, एमए नै पास गरेका रहेछन् भने पनि तिनको दक्षताको दायरा यति साँगुरो हुने गरेको छ, तिनले नेपाली पाराको गन्हाउने राजनीतिबाहेक अरू केही गर्नै जानेका हुँदैनन्। कम पढेकाहरूले पनि स्वाध्ययनबाट आफ्नो क्षमता अभिवृद्धि गरे हुन्थ्यो; तर त्यसो पनि गर्दैनन्। अलि सभ्य राजनीतिक संस्कार भएका देशहरूमा क्षमतावान् व्यक्तिहरू राजनीतिमा लागेपछि तिनले एउटा विन्दुमा आफ्नो उपादेयता समाप्त भएको महशूस गर्छन् अनि ती पढाउन जान्छन्; लेख-पढ र अन्य सामाजिक गतिविधिमा सक्रिय हुन्छन्; ठूलठूला

कम्पनीको नेतृत्व सम्हाल्छन् या सुखी र सन्तुष्ट जीवन बिताउने अन्य उपाय अवलम्बन गर्छन्। तर, हामीकहाँ अधिकांशको हकमा त्यो स्थिति छैन। उदाहरणका लागि, मन्त्री-प्रधानमन्त्रीबाट हटेको भोलिपल्टैदेखि नेताहरू दलभित्रको खुट्टा तानातानको राजनीतिमा सक्रिय भैहाल्छन्। त्यसो नगरुन् पनि किन ! जीवनमा अरू केही गर्न जानेकै छैन। कहीँ अतिथिका रूपमा प्रवचन दिन जाऊँ, अध्ययन र चिन्तनको दायरा फराकिलो छैन। केही गहकिलो कुरा लेखूँ, त्यस्तो लेख्ने क्षमता छैन। कुनै ठूलो कम्पनीको नेतृत्व सम्हालूँ, या परामर्शदाताका रूपमा काम गरूँ, त्यो दक्षता पनि छैन। त्यति त भयो-भयो, राजनीतिमा पर्याप्त इमानदारी पनि छैन। हुँदो हो त तिनले राजनीतिबाट अवकाश लिएर अरूलाई ठाउँ खाली गरिदिने थिए। त्यो पनि उनीहरू गर्न चाहँदैनन्। किनभने, त्यसो गर्दा सांसद हुने, मन्त्री हुने, पैसा कमाउने, शान देखाउने, सञ्चार माध्यमहरूमा छाउने

सबै सम्भावना बन्द हुन्छ ।

त्यसैले, राजनीतिमा युवाहरूको बढ्दो प्रवेशलाई सकारात्मक रूपमा लिए पनि तिनले आफ्नो आर्थिक र शैक्षिक पृष्ठभूमिलाई ध्यान नदिने हो भने, राजनीतिमा फेरि यस्तो एउटा अभेद्य, अदक्ष र भ्रष्ट राजनीतिकर्मीहरूको जमात सृजना हुनेछ, जसबाट फेरि देशले केही पनि अपेक्षा गर्न सक्दैन । यसो भनेर गरीब र अशिक्षितहरूको अवमूल्यन गर्न खोजेको पटक्कै होइन । तर देशको माया छ भने, उनीहरूले आआफ्नो पृष्ठभूमि अनुसार समाजको सेवा गर्ने अन्य विकल्प रोज्नु राम्रो; सक्रिय राजनीति नै गर्नुपर्दैन । त्यसबाट न उनीहरूको, न त देशको नै उत्थान हुन्छ । अहिले माओवादी, काङ्ग्रेस र एमालेभित्र नेतृत्व तहमा छन् भनिएका युवाहरूमा कति जना आर्थिक रूपमा आत्मनिर्भर हुने क्षमता राख्छन् ? कति जनाको उचित शैक्षिक पृष्ठभूमि छ होला, जसले भोलि समयमै राजनीतिबाट अवकाश लिएर अन्य क्षेत्रमा काम गर्न सक्छन् ? ती दुवै पक्षमा

उनीहरू चुकेका छन् भने, निश्चित छ, तिनले पनि भोलि सास रहुन्जेल राजनीति गर्नेछन्; पदका लागि मरिहत्ते गर्नेछन्; बाँच्न र परिवार पाल्न भ्रष्टाचार गर्नेछन् र राजनीतिक संस्कारलाई कहिले पनि सुध्रन दिनेछैनन्। अहिले हामीले युवा भनेर जतिसुकै हाईहाई गरे पनि केही समयपछि ती बूढा हुनेछन् र ती जति बूढा हुँदै जान्छन्, तिनले राजनीतिबाहिर आफ्नो भविष्य र अस्तित्व देख्नै छोड्नेछन्।

यति भन्नुको अर्थ पैसा र राम्रो शिक्षा भएपछि राजनीति गर्‍यो भने सबै ठीक हुन्छ भन्ने होइन। हाम्रो राजनीतिमा पैसा भएका र राम्रो पढेलेखेकाहरू महाभ्रष्ट नदेखिएका होइनन्। तर, तिनले मन लागी गर्ने परम्परालाई रोक्ने र सक्षम युवाहरूको राजनीतिमा प्रवेशलाई प्रोत्साहन गर्ने हो भने त्यसका लागि आधारभूत महत्त्वका विषयहरूबारे चर्चा गर्नैपर्ने हुन्छ। जति नै देश बनाउने ऊर्जाले जलिरहेको भए पनि युवाहरूले पहिलेबाट राम्ररी पढ्न र आत्मनिर्भरताको

जोहो गर्नमै प्राथमिकता दिनुपर्छ। त्यसो नगर्दै, ती देश बनाउने नाममा दलको पछाडि दौडिन थाले भने, देश बनाउने त कुरै छोडिदिऊँ, तिनले आफू र आफ्नो परिवारको हितसम्म पनि गर्न सक्नेछैनन्। र, उमेर ढल्किँदै जाँदा ती परिवार, राजनीति र देश सबैका लागि भार मात्र हुनेछन्।

*नागरिक दैनिक, २०६७ फागुन ११*

# देशको माया भए भन्दिनोस्

प्रिय सुशील कोइरालाजी,

अन्ततः संविधान सभाको म्याद थपियो र यस पटक शान्ति प्रक्रिया र संविधान लेखनमा प्रगति हुने झिनो आशा पलाएको छ। किनभने, हालैको फैसलामा सर्वोच्च अदालतले अब छ महिनाभन्दा बढी म्याद थप्न नपाउने निर्णय दिएको धेरैको बुझाइ छ र सोही कारणले गर्दा माओवादीहरू यस पटक लडाकु र हतियार व्यवस्थापनका सम्बन्धमा बढी गम्भीर हुने अपेक्षा गर्न सकिन्छ। तर तपाईं लगायतका अधिकांश नेताले एउटा अत्यन्त महत्त्वपूर्ण पक्षलाई सधैं बुझेर पनि बुझ पचाइरहनुभएको छ। कुन्नि किन हो, देशका कैयौं गम्भीर ठानिएका विषयहरूमा अग्रगामी भूमिका निर्वाह गर्न खोज्ने नागरिक समाजका अधिकांश वरिष्ठ सदस्य पनि सो विषयबारे 'तैं चुप, मै चुप'

बस्न चाहन्छन् । त्यो के हो भने, हाम्रो हरेक महत्त्वपूर्ण राजनीतिक निर्णयको घडीमा भारतीय कूटनीति र गुप्तचर गतिविधि तीव्र हुने गर्छ । उनीहरू सफल हुन् या नहुन्, त्यसले हाम्रो आन्तरिक निर्णय र सङ्कट व्यवस्थापनको क्षमतालाई क्षीण बनाइदिने गरेको छ । हामी यस्तो विडम्बनापूर्ण अवस्थामा पुगिसकेका छौँ, एउटा समस्या सल्टायौँ भने, हामीलाई अनपेक्षित रूपमा विकास भएको अर्को समस्याले तुरुन्तै गाँज्न थालिहाल्छ । किनभने, व्यक्तिगत र पार्टीगत स्वार्थमा दिल्लीको 'दलाल' हुँदा गर्व गर्नेहरू यहाँ धेरै छन् । त्यसैले अहिले नै सहजै अनुमान लगाउन सकिन्छ, यस पटक शान्ति प्रक्रिया पूरा भयो र संविधान लेखियो भने पनि, छिटै भारत-उत्प्रेरित र हामीमाझैबाट सृजितझैँ देखिने अन्य यस्ता समस्या विकास हुनेछन्, जसले देशमा राजनीतिक स्थिरता कायम हुने दिनेछैनन् ।

विगतका महत्त्वपूर्ण समयहरूमा जस्तै यस पटक

पनि संविधान सभाको म्याद सकिन लाग्दाको संवेदनशील घडीमा भारतीय गुप्तचर संस्था 'र' का अधिकारीहरूले काठमान्डु आएर आफ्नो गतिविधि बढाए। जानकार सूत्रहरूले त्यसको अनौपचारिक रूपमा पुष्टि पनि गरे। यसै सन्दर्भमा सुरक्षा मामिलामा कलम चलाउने *कान्तिपुर* दैनिकका पत्रकार सरोजराज अधिकारीले आफ्नो टिप्पणीमा केही अर्थपूर्ण घटनालाई औँल्याएका छन्। तीमध्ये एउटामा उनले २०६८ जेठ ८ गते 'र' का छिमेकी मामिला हेर्ने अधिकारी आलोक जोशी र उनको टोली नेपाल आएको र त्यसको भोलिपल्टै मधेशी जनअधिकार फोरम दोस्रो पटक फुटेर जयप्रकाश गुप्ताले १३ सभासद्सहित फोरम गणतान्त्रिक गठन गरेको तथ्यलाई उल्लेख गरेका छन्। त्यसलाई संयोग भन्ने कि नभन्ने? फोरम त्यसरी फुट्नेबित्तिकै संसद्मा दुईतिहाइ बहुमत पुऱ्याएर भए पनि संविधान सभाको म्याद थप्ने सरकारको योजना सहजै तुहिएको थियो। सरकारको त्यो प्रयास ठीक थियो या थिएन, त्यो

बहसको बेग्लै पाटो हो। तर, फोरम फुट्दा सरकारको सम्भावित योजनालाई विफल बनाउन चाहनेहरू खूब खुशी भए। उनीहरूले अर्कोलाई खाने बाघले मौका पर्दा आफूलाई पनि खान्छ भन्ने चाहिँ बुझ्न चाहेनन्। पत्रकार अधिकारीले आफ्नो टिप्पणीमा विगतका त्यस्तै अन्य घटनाको पनि उल्लेख गरेका छन्।

तपाईंका महामन्त्री कृष्णप्रसाद सिटौलासँग विगतमा तपाईंको त्यति सुमधुर सम्बन्ध थिएन। बाह्रबुँदे सहमतिदेखि नै माओवादीलाई चाहिनेभन्दा बढी छूट दिएको भन्दै सिटौलाप्रति तपाईंको गुनासो हुने गर्थ्यो। तर, दिल्ली र सिटौलाबीच छ भनिएको सद्भाव र विश्वासपूर्ण सम्बन्धका कारण उनैलाई दलको महामन्त्री बनाउन तपाईं बाध्य हुनुभएको हो भन्ने धेरैको अनुमान छ। सो परिप्रेक्ष्यमा हेर्दा, विगतमा दिल्ली माओवादीप्रति नरम हुँदा, उनीहरूप्रति नेपाली काङ्ग्रेस नेतृत्व अत्यन्तै नरम हुनु र अहिले दिल्लीले जसरी पनि माओवादी-एमाले वाम गठबन्धन तोड्न र

माओवादीलाई घुँडा टेकाउन खोजिरहेको छ भनिँदै गर्दा, नेपाली काङ्ग्रेसका निश्चित नेताहरू संविधान सभा भङ्गै भए पनि होस् भन्दै माओवादीहरूप्रति असाधारण रूपले कडा ढङ्गबाट प्रस्तुत हुनुलाई कसरी व्याख्या गर्ने ? दिल्लीसँगको यस्तो किसिमको 'सहकार्य' ले तत्कालका लागि कुनै न कुनै पक्षलाई फाइदा पुऱ्याउला; तर दीर्घकालमा त्यसले देशको हित गर्नै सक्दैन। यहाँ सन्दर्भ परेकाले मात्र नेपाली काङ्ग्रेसका नेताहरूको दिल्ली-सम्बन्धबारे चर्चा हुन गएको हो। माओवादी र एमालेमा पनि दिल्ली-लिप्सा व्यापक छ भन्नेमा कुनै शङ्कै छैन।

यस्तो परिस्थितिमा तपाईं लगायतका नेताहरूले शान्ति र संविधानका लागि काम गर्दैगर्दा नेपाली राजनीतिको जरामै लागेको भारतीय भाइरसको निदानका लागि पनि केही न केही नगरी नहुने भएको छ। नत्र, शान्ति प्रक्रिया पूरा हुँदैमा र संविधान लेखिँदैमा, नेपालले स्थिरता र विकास हासिल गर्ने अपेक्षा नगरे

पनि हुन्छ । अहिलेको परिस्थितिमा भारतीय भाइरसको चरित्र, व्यवहार र आक्रमणको शैलीबारे सबभन्दा बढी ज्ञान हुने नेताहरू सम्भवतः माओवादी अध्यक्ष प्रचण्ड, उपाध्यक्ष बाबुराम भट्टराई र तपाईं नै हुनुहुन्छ । त्यसबाहेक कैयौँ अन्य नेता पनि त्यस्ता भाइरसबारे राम्रैसँग अवगत छन् । तर, ती सम्पत्ति वा सत्ता या दुवैको लोभका कारण बोल्नै चाहँदैनन् । उदाहरणका लागि, भारतीय गुप्तचर संस्था 'र' का वरिष्ठ अधिकारी आलोक जोशी एक हप्तासम्म काठमान्डुमा त्यसै झिँगा मारेर त बसेनन् होला । निश्चय पनि उनले कैयौँ नेतालाई भेटेर कैयौँ कुरा भनेको हुनुपर्छ । 'जोशीले मलाई भेटेर यस्तो-यस्तो भने' भन्ने आँट किन कुनै नेता गर्दैनन् ? त्यति मात्र आँट गरिदिने हो भने पनि, भविष्यमा भारतीयहरूको भूमिक स्वतः न्यून भएर जानेछ । अब जहाँसम्म प्रचण्ड, भट्टराई र तपाईंको प्रश्न छ, प्रचण्ड र भट्टराईले कुनै हालतमा वास्तविकता उजागर गर्नेछैनन् ।

किनभने, त्यसबाट उनीहरू आफैँ नाङ्गिनेछन् र उनीहरूको सत्ता सङ्घर्षमा त्यसको नकारात्मक प्रभाव पर्नेछ। भारतलाई चिढ्याउने प्रचण्डको अडान र सतही गर्जनले उनीहरूलाई अलिअलि नकारात्मक प्रभाव त पारी नै सक्यो। त्यसैले अहिले उनीहरूले भारतबारे अलि नरम नीति अख्तियार गरिरहेका छन्।

अब बाँकी रहनुभयो, तपाईं। तपाईंसँग जसले जति नै विमति राखे पनि र तपाईंका जेजति नै कमजोरी भए पनि तपाईंले सत्ता र सम्पत्तिका लागि कहिले पनि मोह देखाउनुभएन। अहिले पनि सबैले प्रधानमन्त्री बन्नका लागि अनेक तिकडम गरेर मरिहत्ते गरिरहँदा तपाईंले त्यसमा कुनै चासो देखाउनुभएको छैन। यो अत्यन्तै सम्मानयोग्य विषय हो। अब तपाईंले जीवनको उत्तरार्धमा जनताको सम्मानबाहेक लिनु केही छैन; जनतालाई दिनु मात्र छ।

यस सन्दर्भमा म के भन्न चाहन्छु भने, तपाईंले

'जिन्दगीभर लोकतन्त्रका लागि लडेर देशलाई ठूलो देन लगाएँ' भन्ठान्नुभएको छ भने त्यो तपाईंको भ्रम हो। लोकतन्त्रको लामो लडाइँबाट यो देशले आजसम्म सैद्धान्तिक परिवर्तन र अस्थिरताबाहेक खासै केही पाएको छैन। निकट भविष्यमा सैद्धान्तिक परिवर्तनको दस्तावेज र अस्थिरताको निरन्तरताबाहेक केही पाउने सम्भावना पनि छैन। तर त्यसमा तपाईंको मात्र दोष छैन; हामी सबैको दोष छ। किनभने, हामी इमानदार र सक्षम हुनै सकेनौँ। तर अर्को प्रमुख कारण चाहिँ, मैले माथि चर्चा गरेझैँ, भारत पनि हो, जसले हाम्रो कमजोरीमाथि सधैँ रजाइँ गरिरह्यो। भारतका राजदूतदेखि गुप्तचर सेवाका अधिकारीहरूसम्मले हाम्रा वरिष्ठ र वृद्ध नेताहरूलाई समेत ओल्टाईपल्टाई राजनीतिक करणी गरिरहे। त्यसको शिकार जानेर या नजानेर तपाईं पनि हुनुभएको छ। तर म तपाईंलाई नै ती तीता-मीठा अनुभवहरू सार्वजनिक गर्न किन आग्रह गरिरहेको छु भने, देशका अत्यन्त संवेदनशील घडीहरूमा

तपाईं 'महानायक' गिरिजाप्रसाद कोइरालाका सहयात्री भएर रहनुभयो र त्यसपछि आफैं नेपाली काङ्ग्रेसको नेतृत्व गर्दै हुनुहुन्छ। भारतीय कूटनीतिज्ञ र गुप्तचरहरूले कसरी पहुँच बढाउँछन्; कसरी फकाउँछन्, धम्क्याउँछन्; प्रत्यक्ष र अप्रत्यक्ष रूपमा दबाव दिन्छन् र आफ्नो उद्देश्य हासिल गर्ने प्रयास गर्छन्; त्यो तपाईंलाई धेरै थाहा छ। कृपया नेपाली जनतालाई त्यति बताइदिनोस्। नेपाली जनताले त्यसको सामना गर्ने बाटो आफैं पहिल्याउनेछ। एकताका, तपाईंका आदर्श र अग्रज गिरिजाप्रसाद कोइराला, स्थिति आफू अनुकूल नहुनेबित्तिकै विदेशी र खास गरी भारतीयहरूलाई सङ्केत गर्दै 'ग्रान्ड डिजाइन' का कुरा गर्थे। त्यसैले उनलाई यो पङ्क्तिकारले २०५८ भदौमा लेखेको एउटा लेखमा उनले चर्चा गर्ने गरेको विदेशी शक्तिको भूमिका र त्योसँग सम्बन्धित तथ्यहरूको पर्दाफास गरिदिए त्यो राष्ट्रका लागि कसैले लाउन नसकेको गुन ठहर्नेछ भनेर आग्रह गरेको थियो। उनी जस्ता 'महानायक'

ले हामी जस्ता भारेभुरेको आग्रह किन सुन्थे ! बरु पछि उनले कान्तिपुर टेलिभिजनका पत्रकार जगत नेपाललाई आफ्नो जीवनीबारे दिँदै गरेको टेलिभिजन अन्तर्वार्ता शृङ्खलाको एउटा अङ्कमा भारतीय गुप्तचर संस्था 'र' को भूमिकाबारे सानो सन्दर्भ उल्लेख हुँदा, भारतबाट विरोध गरिएपछि, सो शृङ्खला नै रोकिदिए ।

तपाईं पनि त्यस्तै किसिमको आचरण प्रस्तुत गरेर दिवङ्गत हुन चाहनुहुन्छ भने त्यसै गर्नोस्; त्यो तपाईंको इच्छा हो । तर त्यस्तो आचरण जेजति नेताले देखाए, तिनले नेपालमा लोकतन्त्रका लागि जिन्दगीभर लडेका, मन्त्री-प्रधानमन्त्री भएका, ठूलठूला आदर्श बकेका भए पनि, ती सब धोकेबाज हुन्, राष्ट्रघाती हुन् । तिनले आफूलाई ठूलो नसम्झिए हुन्छ । ती नेपालका लागि वरदान होइनन्, श्राप हुन्, जसले व्यक्तिगत स्वार्थपूर्तिका लागि आफ्नो र भारतको हित गरे, नेपालको होइन । भारतको भूमिकाबारे हाम्रा राष्ट्रवादीहरू भारतलाई दोष दिन्छन्; त्यो व्यर्थको कुरा

हो। हाम्रा राष्ट्रपतिदेखि प्रधानमन्त्रीसम्म भारतीय राजदूतलाई सीधै आफूसम्म पहुँच दिन्छन्; के त्यो राजदूतको दोष हो ? दोष हाम्रो हो। तर, हाम्रो कमजोरीमाथि भारतीयहरूले कसरी खेल्छन् र कसरी हामी यो स्थितिमा पुग्यौं भन्ने चाहिँ नेपाली जनताले थाहा नपाई भएको छैन। त्यसबारे तपाईं जस्ता जानकार नेताहरूले नबोली भएको छैन। नत्र, अबको तीन महिनामा माओवादीलाई घुँडा टेकाएर हतियार व्यवस्थापन गर्न बाध्य पारे पनि, हामीले छिटै अर्को अनपेक्षित झमेला बेहोर्नुपर्नेछ। त्यसैले हाम्रा लागि शान्ति प्रक्रिया र नयाँ संविधान जति महत्त्वपूर्ण छ, त्यत्तिकै, या त्योभन्दा पनि बढी, भारतीय भाइरसले नेपालमा पारिरहेको असरको उपचार खोज्नु जरूरी भएको छ। नत्र, यो देशको स्थिरता र विकास धेरै नै जटिल विषय रहिरहनेछ। किनभने, भारतबाट हामी फाइदा लिने होइन, हानि मात्रै बेहोरिरहनेछौं। सुशीलजी, बोलिदिनोस्; तपाईं अस्ताचलतिर पुगिसक्नुभयो;

तपाईंले कसैसँग डराउनु आवश्यक छैन। त्यति बोलिदिनुभयो भने त्यो नेपालका लागि तपाईंको लम्बे लोकतान्त्रिक सङ्घर्षभन्दा धेरै ठूलो गुन हुनेछ। बाँकी तपाईंको इच्छा !

शुभकामनासहित,

रवीन्द्र मिश्र

*नागरिक दैनिक, २०६८ जेठ १८*

# इतिहासको घाउ कोट्याउँदा

इतिहास शिक्षा हो; वर्तमान उभिने धरातल हो। तर धेरैले कि त इतिहासको गौरव मात्र गाएर वर्तमानलाई पुड्क्याउँछन्, कि सधैँ इतिहासको पीडा सम्झेर मौका पायो कि तीतो ओकल्छन्। इतिहासको गौरव र पीडा दुवै वर्तमानका लागि शिक्षा हुनुपर्ने हो; तर समाजमा चिराहरू पर्दै जाँदा इतिहास शिक्षाभन्दा बढी या त अहङ्कार या बदलाभावमा परिणत हुँदो रहेछ। इतिहासमा उभिएर भविष्यको रेखा कोर्नु राम्रो हुन्छ। तर, इतिहासको भारी बोकेरै भविष्य निर्माण गर्न खोज्दा त्यसको परिणाम सुखद नहुन सक्छ।

आजभोलि कतिपय मानिसबाट जानीजानी या स्वस्फूर्त रूपमा निस्किएका टिप्पणीहरू इतिहासको तिक्तताका कारण पूर्णतः बदलाभावले भरिएका हुन्छन्। त्यो तिक्तता इतिहासमा भएको प्रतिस्पर्धा, द्वन्द्व र साँच्चिकै

शोषणसँग सम्बन्धित हुन सक्छन्। त्यही तिक्तताको लेश अझै पनि बाँकी छ र त्यो बेलाबेलामा विभिन्न रूपमा व्यक्त भएको हामी देख्छौँ– 'हामीलाई अस्तिसम्म यिनीहरूले न्यार भन्थे'; 'हामीलाई पनि त यिनले खेएं भन्थे नि !'; 'हामीलाई यिनीहरूले मदिसे भन्थे'; 'हामीलाई पनि त पहाडे, चुच्चे आदि केके भन्थे नि !'

तर लहैलहैमा बतासिने जमात मात्र होइन, एउटा जाति, समुदाय या क्षेत्रले मात्र होइन, सिङ्गो देशले चिन्ने, श्रद्धा र सम्मान गर्ने कतिपय प्रबुद्ध नेपालीले समेत तीतो इतिहासको झोला बोकेर हिँडेको र बारम्बार त्यही झोलाका सामग्री कहिले स्पष्ट र कहिले घुमाउरो पारामा पस्किरहेको देख्दा भने अत्यन्त दुःख लाग्नु स्वाभाविक हो। ती त्यस्ता सम्माननीय व्यक्तिहरू हुन्, जसलाई सिङ्गो देशले एउटा जाति र क्षेत्रको दायराभन्दा धेरै माथि राखेर हेरेको छ। तर, ती व्यक्तिहरू अधिकांश देशवासीले उठाइदिएको धरातल

र सिङ्गो नेपालको दायराबाट झरेर बारम्बार जातीयता र क्षेत्रीयताको साँगुरो धरातल र दायरामा खुम्चिँदा स्वाभिमानी र उत्साहित महशूस गर्छन्। 'हामीले आन्दोलन गरेर, खोसेर लिएको अधिकार र सम्मान हो; काठमान्डुका कुलीन र सामन्ती वर्गले हामीलाई त्यो दया गरेर दिएको होइन' भन्ने भावनाबाट ती नराम्रोसँग ग्रस्त र गौरवान्वित छन्। 'आन्दोलन गरेर, खोसेर लिएको अधिकार र सम्मान हो' भन्ने टिप्पणीमा सत्यता नभएको होइन; तर इतिहासको सत्यता वर्तमानका लागि शिक्षा हुनुपर्छ, अहङ्कार र तिक्तता होइन। त्यही मात्र महान् इतिहास हुन्छ, जुन नेल्सन मन्डेलामा रूपान्तरित हुन्छ, जुन क्षमा र मेलमिलापमा परिवर्तित हुन्छ।

त्यसो नगर्ने र इतिहासका कटुतालाई मात्र कोट्याइरहने हो भने, त्यसले तिक्ततालाई निरन्तरता मात्र दिनेछ। इतिहासमा झुन्डिरहनेहरूलाई अवगत नै होला, सम्पूर्ण मानव इतिहास शोषणैशोषण र तिक्ततैतिक्तताले भरिएको

छ । आज मानव जातिले गर्व गर्ने प्राचीन कालका सात आश्चर्य हुन् या चीनको 'ग्रेट वल' जहाँ काम गर्दागर्दै मरेकाहरूलाई पर्खालमै पुरिएको थियो, फ्रान्सको भर्साई दरबार होस् या भारतको ताजमहल या काठमान्डुका ऐतिहासिक दरबार स्क्वायर र भव्य मन्दिरहरू नै किन नहुन्, ती सबै एउटा जाति या वर्गले अर्कोमाथि गरेको अन्याय र शोषणकै परिणाम थिए । जसका बारे हामी गर्व गर्छौं, ती सबै शोषित र पीडितहरूको पसिनाले भिजेका छन् । के अब ती सबैलाई ध्वस्त पारिदिने! के अब ती सबैलाई सम्झिएर सम्भव भएसम्म बदला लिने ! त्यति मात्र होइन, मानव अधिकारबारे पर्याप्त बहस चल्न शुरू भएको दशकौं भैसक्दा पनि अन्याय र शोषण अन्त्य भएको छैन र सम्भवतः मानव चरित्रमा निहित आधारभूत दुर्गुणहरूका कारण त्यति सहजै त्यो अन्त्य हुनेवाला पनि छैन; न्यूनीकरण भने हुँदै जान सक्छ; भएको पनि छ । तर जुनजुन समुदायले त्यो अन्याय र शोषणलाई

मानव विकासक्रमको ऐतिहासिक पृष्ठभूमिमा राखेर बुझ्ने प्रयास गर्छन्, त्यहाँ अहङ्कार र तिक्तता घट्दै जान्छ र त्यो समाज बढी सहनशील र सुसंस्कृत बन्दै जान्छ। जसले गर्दैनन्, ती अफ्रिकाका कैयौँ मुलुक जस्तै जातीय द्वन्द्वबाट ग्रस्त हुन्छन्; तिनको हाल पूर्वसोभियत सङ्घ, वर्तमानको रूस र चेच्चनिया, पूर्वयुगोस्लाभिया या नजिकै आउने हो भने तामिल र सिंहाला वा भारत र पाकिस्तानमा हिन्दू र मुसलमानबीच व्याप्त तिक्ततामा रूपान्तरित हुन सक्छ।

विश्वका अन्य देश र समाजमा जस्तै नेपालमा पनि अन्याय र शोषणको इतिहास लामै छ। तर, अरूको भन्दा हाम्रो अज्ञानताको इतिहास पनि लामो छ। अज्ञानता परमानन्द हो भनेझैँ अज्ञानताकै कारण हामी सहनशील पनि भयौँ। किनभने, हामीमा अधिकारबोधको ज्ञानले लेराउने दुर्गुणहरू सवार हुन पाएनन्। तर जब माओवादीहरूले विकासक्रमको प्राकृतिक सिद्धान्तलाई मान्छे मार्ने अप्राकृतिक सिद्धान्तले प्रतिस्थापन गरी

एकै पटक विकासको छलाङ मार्ने सपना देखे, हामीमा अधिकारबोधको चेतना त बढ्यो; तर सो चेतना सहनशीलताको लामो परम्परालाई तोड्दै उत्तेजनामा परिणत भयो। त्यही उत्तेजनालाई हामीले आजभोलि चेतना भन्ने गरेका छौँ। हरेक देशको इतिहासमा यस्ता घडीहरू विविध रूपमा नआउने होइनन् र त्यसले लेराउने सङ्क्रमणबाट सबै देश गुज्रनुपर्छ; तर लोकतान्त्रिक सङ्क्रमण झनै जटिल हुन्छ। किनभने, लोकतन्त्र हाम्रो जस्तो अविकसित समाजका लागि छाडातन्त्र पनि हो र हामीले २०४६ सालपछि जस्तो किसिमको लोकतन्त्रको अभ्यास गर्दै आएका छौँ, त्यो ठूलो हदसम्म छाडातन्त्र हो।

यस्तो अवस्थामा आम सर्वसाधारणबाट हामीले धेरै अपेक्षा गर्न मिल्दैन। ती कहिले राजासँग बहकिए; कहिले नेपाली काङ्ग्रेस, एमाले र माओवादीसँग बहकिए। अनि ती तराईकेन्द्रित, जातिगत-क्षेत्रगत समूहहरूसँग बहकिए। नेताहरूले नै नबुझी गरेको

व्याख्यालाई अधिकांश स्थितिमा 'जनता' ले बुझ्दैनँ गऱ्यो। त्यसैको परिणामस्वरूप दशकौँदेखि नेपाली जनता राजनीतिक रूपमा भौँतारिएको भौँतारियै छ। स्वर्गीय गणेशमान सिंहले "जनता भनेका भेडा हुन्" भनेर सम्भवत: स्वविवेक प्रयोग गर्ने क्षमता नभएको जनताको त्यही जमातलाई सङ्केत गरेको हुनुपर्छ, जुन जमात राजनीतिक दलहरूको आह्वानमा बहकिनुलाई आत्म-अधिकारको सदुपयोग अनि देश र समाजका लागि गरिएको सङ्घर्षका रूपमा हेर्छ। हुन पनि जुन ढङ्गबाट हामी क्षणभरको आह्वानमा सडकमा उत्रिने, टायर बाल्ने र हिंसात्मक हुने गर्छौं, त्यसलाई हेर्दा गणेशमान सिंहको टिप्पणीलाई गलत भन्न नमिल्ला।

यस्तो समाजमा यो आलेखको शुरूतिर उल्लेख गरिएका जस्ता सिङ्गो राष्ट्रले नै सम्मान गर्ने प्रबुद्ध व्यक्तिहरूले नै इतिहासलाई कोट्टयाई-कोट्टयाई घाउमा खाटा नै बस्न नदिनु कत्तिको उचित होला? भलादमी देखिनका लागि लुकाउन खोज्दाखोज्दै पनि बेलाबेलामा

औपचारिक र अनौपचारिक रूपमा व्यक्त भैहाल्ने तिक्तता बोकेर इतिहासको घाउ कोट्याउँदै एउटा निश्चित समुदायमा 'हिरो' हुन् खोज्ने कि इतिहासको घाउमा मलम लगाउन कोशिश गर्दै सिङ्गै देशको 'हिरो' हुने ? त्यो उनीहरूले नै सोच्ने विषय हो। त्यस्ता प्रबुद्ध भनिएका व्यक्तिहरूको कुरा गरिसकेपछि हाम्रा कैयौँ सांसदको पनि कुरा गर्नैपर्ने हुन्छ। उनीहरूमध्ये कतिपय प्रबुद्ध, कतिपय अर्धबुद्ध र कतिपय पूर्ण अबुद्ध छन्। तर, जेसुकै भए पनि ती देशको व्यवस्थापकीय निकायका सदस्य हुन्; ती सिङ्गो देशका नेता हुन्। ती आफ्नो निर्वाचन क्षेत्रका लागि मात्र होइन, देशकै लागि जिम्मेवार छन्। आफ्नो क्षेत्रलाई विशेष ध्यान दिनु तिनको जिम्मेवारी हो। तर, घरको ख्याल गर्दा समाज र राष्ट्रलाई हानि नपुऱ्याउने नागरिक मात्रै असल ठहरिन्छ। हाम्रा प्रबुद्ध वर्गका कतिपय सदस्यले झैँ ती सांसदहरूमध्ये कतिले घरको मात्र ख्याल गरेका छन् र कतिले

समाज र राष्ट्रकै ख्याल गरेका छन्, त्यो पनि तिनले नै बुझ्ने कुरा हो।

र अन्त्यमा, यो आलेखमा प्रबुद्ध भनिएका कुनै लेखक, प्राज्ञ या कुनै नेताको नाम लिइएको छैन। कसैको सार्वजनिक टिप्पणी या लेखलाई उद्धरण पनि गरिएको छैन। तर, ककसले खुल्लमखुला र ककसले भलादमीपनले ढाक्न खोज्दै इतिहासको अहङ्कार र तिक्तता बोकेर हिँडेका छन् र वर्तमानलाई तीतो बनाइरहेका छन्, त्यो, त्यसै गर्नेहरूलाई नै थाहा होला र तिनलाई सञ्चार माध्यममार्फत चिन्नेहरूलाई नै थाहा होला। यति सबै लेख्नुको अर्थ अधिकार र सम्मान खोज्नु हुँदैन भन्ने हुँदै होइन। 'मेरा बाजेले घिउ खा'थे, मेरो हात सुँघसुँघ' भन्ने मानसिकता बोकेका कपटभद्र सामन्तीहरूको शासन र मानसिकता कस्तो हुन्छ भन्ने यो पङ्क्तिकारले पनि राम्रैसँग अनुभव गरेको छ। तर, त्यो तिक्ततालाई हामी आम सर्वसाधारणकहाँ पुग्न सक्ने विशेष सुविधा पाएका

व्यक्तिहरूले यो या त्यो रूपमा बारम्बार व्यक्त गरिरहने हो भने, समाज र देशमा सहअस्तित्व र नेपालित्वको भावना कसरी स्थापना होला ! अहिले नै अकल्पनीय केही नभएको होला, तर हामी पढेलेखेका र जानेबुझेका मानिएका व्यक्तिहरूले हाम्रो समाज र देशलाई यस्तो विन्दुमा ल्याइपुऱ्याएका छौँ, जुन विस्फोट भयो भने नियन्त्रण गर्न गाह्रो पर्नेछ। त्यसैले फेरि पनि भनूँ, इतिहास बोकेर हिँड्ने भारी होइन, पाठ सिक्ने शिक्षालय हो। इतिहासको घाउ कोट्ट्याइरहनेहरूले अलिकति विचार गरिदिने हो कि ?

*नागरिक दैनिक, २०६८ भदौ २८*

आजसम्म दशैंमा मैले जेजति आशीर्वाद पाएँ, ती सबै मैसँग सम्बन्धित थिए र सम्भवतः भविष्यमा पनि त्यस्तै हुनेछन् । 'तँ ठूलो भएस्; तँ ज्ञानी भएस्; तँ मानी भएस्; तँ धनी भएस्; तँलाई कहिले रोग नलागोस्; चन्द्रमा सधैं दाहिने हुन् ...' आदि-इत्यादि मैले सुनिआएका आशीर्वादहरू हुन् । अहिले म यसो सोच्छु, यो समाज बिग्रनु, यो संसार आर्थिक, वैज्ञानिक र बौद्धिक ज्ञानको भण्डारका रूपमा विकसित भएर पनि यति विघ्न अमानवीय समस्याहरूबाट ग्रस्त हुनुमा मूल रूपले बालबालिकालाई जुन ढङ्गबाट हुर्काइन्छ, बढाइन्छ र पढाइन्छ, त्यो नै जिम्मेवार छ ... हामी सबैलाई सानैदेखि व्यक्तिगत हितलाई सर्वोपरि ठान्न आशीर्वादका पुण्य घडीहरूदेखि यत्र-तत्र-सर्वत्र यसरी प्रशिक्षित गरिएको हुन्छ, हाम्रा नसानसामा व्यक्तिगत मान, प्रतिष्ठा र अर्थोपार्जनका कोषिकाहरू बहिरहेका हुन्छन् । यसर्थ हामी बालबालिकालाई व्यक्तिकेन्द्रित हुन जसरी प्रशिक्षित गर्छौं र तिनै बालबालिकाबाट उनीहरू वयस्क भएपछि समाजका लागि जे अपेक्षा गर्छौं, त्यसका बीचमा ठूलो विरोधाभास छ ।

*खान पुगोस्, दिन पुगोस्* स्तम्भ-निबन्धबाट

publication nepa~laya




www.nepalaya.com.np